| | | |
|---|---|---|
| ग्रन्थको नाम | : | **ब्रह्मसाक्षात्कार** |
| लेखक | : | श्रीशरत्कुमार भट्टराई |





| | | |
|---|---|---|
| प्रकाशक | : | श्रीराजर्षिजनकस्मृतिकोष<br>विजयचोक, प्रयागमार्ग,<br>बत्तीसपुतली–९, काठमाडौं<br>फोन : ४४९४७५८ |
| प्रकाशन मिति | : | वि.सं. २०६५ फागुन ७ गते |
| प्रकाशित सङ्ख्या | : | ५०० प्रति |
| मूल्य | : | रु. २००।– |
| वितरक | : | साझाप्रकाशन<br>पुलचोक, ललितपुर<br>श्रीपशुपतिनाथशरण सहकारी सं.लि.<br>पशुपति, काठमाडौं |
| कम्प्युटर सेटिङ्ग | : | श्रीखड्गप्रसाद खनाल |
| **मुद्रक** | **:** | **एन्.पी.टी.सी. लिमिटेड**<br>विमासमिति मार्ग, सरस्वतीनगर<br>फोन नं. ४८११२२६, ४८११३७१ |

# प्रकाशकको भनाइ

यस कोषले आफ्नो स्रोत र साधनले भ्याएसम्म आध्यात्मिक विषयका अझ यसमा पनि विशेषरूपमा भक्ति र ज्ञानका विषयमा लेखिएका पुस्तकहरू प्रकाशन गर्दै आएको छ। श्रीशरत्कुमार भट्टराईका कृतिहरूमध्ये २०६३ सालमा **ज्ञान र भक्ति**, २०६४ सालमा **रासपञ्चध्यायी** र यस २०६५ सालमा **ब्रह्मसाक्षात्कार**को प्रकाशन गर्न पाएकोमा कोषलाई खुशी लागेको छ।

**ब्रह्मसाक्षात्कार**मा समाविष्ट लेखहरू जिज्ञासु मुमुक्षुहरूका लागि अत्यन्त पठनीय भएको देखेर नै यसको प्रकाशनको अभिभारा यस कोषले सहर्ष अङ्गीकार गरेको हो। यस ग्रन्थमा परेका सबैजसो लेखहरू अत्यन्त पठनीय र मननीय समेत भएको यस कोषले ठानेको छ। तीमध्ये पनि अध्यास, चिदाभास, हृदयग्रन्थिभेदन, एषणा, तुरीयतत्त्व, ब्रह्म, ब्रह्मदर्शन, साक्षी, विद्या, मुक्तिः, जाग्रत्, स्वप्न, सुषुप्तिजस्ता लेखहरू अद्वैतवेदान्तका जिज्ञासुहरूकालागि प्रवेशद्वारका रूपमा उपयोगी हुने छन् भन्ने कोषले ठानेको छ। अस्तु।

धन्यवाद !

२०६५ फागुन ७ गते — श्रीराजर्षिजनकस्मृतिकोष

ॐ

# ब्रह्मसाक्षात्कारको दर्शनपछि

व्यापक वस्तु ब्रह्म हो। निरतिशय, भूमा, ईश्वर, आत्मा ब्रह्म हो । **यो वै भूमा तत्सुखं नाल्पेसुखमस्ति भूमैव सुखं भूमा त्वेव विजिज्ञासितव्यः ।** *(छान्दो उ.७/२३)* जुन भूमा हो त्यही सुख हो, अल्पमा सुख छैन । सुख त भूमा नै हो । त्यसकारण भूमाकै विशेषरूपले जिज्ञासा गर्नुपर्छ । जिज्ञास्य वस्तु भूमा भएकाले भूमा भनेको ब्रह्म नै हो । ब्रह्मलाई नै आत्मा पनि भनिन्छ – **आत्मा वा अरे द्रष्टव्यः श्रोतव्यो मन्तव्यो निदिध्यासितव्यो ।** *(बृहदारण्यकोपनिषद् ४/५/६)* हे मैत्रेयि ! आत्मा नै दर्शनीय, श्रवणीय, मननीय र निदिध्यासन गर्न योग्य छ । यहाँ आत्मा भन्नाले ब्रह्म नै हो । आत्मा र ब्रह्म एकै हो भन्ने क्रममा श्रीमद्भागवतमा प्रशस्त प्रसङ्गहरू आएका छन् । जस्तै –

**एक एव परो ह्यात्मा भगवानीश्वरोऽव्ययः** *(भाग ७/६/२१)*

**आत्मा नित्योऽव्ययः शुद्ध एकः क्षेत्रज्ञ आश्रयः ।**
**अविक्रियः स्वदृग् हेतुर्व्यापकोऽसङ्ग्यनावृतः ।।**

*– भागवत ७/७/१९*

**वदन्ति तत्तत्त्वविदस्तत्त्वं यज्ज्ञानमद्वयम् ।**
**ब्रह्मेति परमात्मेति भगवानिति शब्द्यते ।।**

*– भागवत १/२/११*

एउटै परमात्मा, भगवान्, ईश्वर, अव्यय नै सम्पूर्ण भौतिक वस्तुहरूमा, गुणहरूमा व्यापकरूपले रहनुभएको छ ।

आत्मा ता नित्य, अव्यय, अविनाशी, शुद्ध, एक, क्षेत्रज्ञ, सर्वाश्रय, विकारशून्य, स्वयंप्रकाश, सबैको कारण, व्यापक, असङ्ग एवं अनावृत छ ।

सत्यतत्त्व के हो भन्ने सन्दर्भमा सूतजी भन्नुहुन्छ –

तत्त्ववेत्ताहरू ज्ञाता र ज्ञेयका भेदले रहित भएको अखण्ड अद्वितीय सच्चिदानन्दस्वरूप ज्ञानलाई नै तत्त्व भन्दछन् । तत्त्ववेत्ताहरूमा तत्त्वका दृष्टिकोणबाट ता कुनै मतभेद छैन । ज्ञानवान्हरू यही तत्त्वलाई ब्रह्म भन्दछन्, योगीहरू परमात्मा भन्दछन् र भगवान्का भक्तहरू यही तत्त्वलाई भगवान् भन्दछन् ।

विभिन्न उपासक, साधक, तपस्वी, अनुसन्धाता, चिन्तक, विचारक, भक्त, योगी आदिले आ–आफ्ना दृष्टिकोण, धारणा, श्रद्धा, मान्यताका आधारमा विभिन्न भाषा, शैली शब्दद्वारा नाना नाम र रूपको कल्पना गरी सोहीअनुसार विवेचना, कारण, विश्लेषण गरे तापनि तात्त्विकरूपमा उही एक, अद्वैत, अखण्ड, परिपूर्ण, अव्यय, अद्वय, सच्चिदानन्दस्वरूप आत्मा हो, ब्रह्म हो । वास्तवमा त्यो ब्रह्म आफू नै हो । आफू र ब्रह्ममा सदासदा एकता सिद्ध छ । जीवात्मा र परमात्माको एकता प्रतिपादन गर्नु नै हाम्रा चार वेदका, चार उपनिषद्का चार महावाक्यहरूको अन्तिम लक्ष्य हो, अन्तिम परिणति हो ।

'बृहत्त्वाद् ब्रह्म' भने पनि 'सर्वभेदरहितमविषयभूतं ब्रह्म *(संक्षेपशारीरक १।५२१)* भने पनि तात्त्विकरूपमा एउटै निष्कर्षमा पुगिन्छ । 'बृहत्त्वाद् बृंहणत्वाद् वात्मैव ब्रह्मेति गीयते' (ब्रह्मसूत्र अध्यासभाष्य) बृहत्त्वात् सर्वात्मत्वाच्च ब्रह्म, एतत् सर्वम् *(बृ उ.५।३।१ शाङ्करभाष्य)* यो ब्रह्म व्यापक एवं सबैको आत्मा भएको हुनाले नै यो सर्व हो । ब्रह्मको लक्षण गर्ने क्रममा पूर्व आचार्यहरूको यस्तो मत छ –

**अवेद्योऽप्यपरोक्षोऽतः स्वप्रकाशो भवत्ययम् ।**
**सत्यं ज्ञानमनन्तं चेत्यस्तीह ब्रह्मलक्षणम् ॥**

*– पञ्चदशी ३।२८*

बुद्धिका वृत्तिहरूभन्दा परको, आफ्नै स्वरूप भएकाले सदा अपरोक्ष स्वप्रकाश सत्य, ज्ञान र अनन्त नै ब्रह्मको लक्षण हो । सत्यंज्ञानमनन्तं ब्रह्म *(तै.उ.२।१।१)* ब्रह्ममा नै सम्पूर्ण ब्रह्माण्ड कल्पित भएकाले ईश्वर र जीव पनि ब्रह्मदेखि भिन्न होइनन् । यी पनि ब्रह्ममा नै कल्पना गरिएका हुन् । त्यसैले आचार्यहरूको उक्ति छ –

**सत्यंज्ञानमनन्तं यद् ब्रह्म तद्वस्तु तस्य तत् ।**
**ईश्वरत्वं च जीवत्वमुपाधिद्वयकल्पितम् ॥**

*– पञ्चदशी ३।३७*

ब्रह्मको लक्षण सत्य, ज्ञान र अनन्त हो । यही ब्रह्ममा नै तीनै लक्षणले युक्त भएका ईश्वर र जीव पनि कल्पना गरिएका हुन् । यी दुई पनि ब्रह्मदेखि अभिन्न हुन् ।

ब्रह्म नामरूपरहित, सच्चिदानन्द, अद्वय, अखण्ड, परिपूर्ण, नित्य, शुद्ध, बुद्ध हो तापनि यस्तो निर्गुण, निराकार ब्रह्मलाई चिनाउन, सम्झाउन, बुझाउन सगुण साकारको पनि कल्पना गरिएकोछ । त्यसैकारण ब्रह्मका दुई रूप मानिएका छन् । जस्तै – १. सत्यंज्ञानमानन्दं ब्रह्म भन्ने ब्रह्मको स्वरूपलक्षण हो भने २. यतो वा इमानि भूतानि जायन्ते*(तै.उ.३।१)* भन्ने चाहिँ ब्रह्मको तटस्थलक्षण हो ।

स्वरूपलक्षण सदाकाल रहिरहन्छ भने तटस्थ लक्षण केही कालमात्र रहन्छ । जगत् र सृष्टिलाई स्वीकार गरेका खण्डमा तटस्थलक्षणलाई आधार मानिन्छ भने सृष्टिलाई स्वीकार नगरेका खण्डमा स्वरूपलक्षणलाई आधार मानिन्छ ।

ब्रहका फेरि अर्का दुई रूप मानिएका छन् – **'मूर्तं चामूर्तं च मर्त्यं चामर्त्यं च स्थितं च यच्च सच्चासच्च'** *(बृ.उ.२।३।१)*

आनन्द नै ब्रह्म हो – आनन्दो ब्रह्मेति व्यजानात् । आनन्दाद्ध्येव खल्विमानि भूतानि जायन्ते। आनन्देन जातानि जीवन्ति आनन्दं प्रयन्त्यभिसंविशन्तीति ।*(तै.उ.३।६)* आनन्द नै ब्रह्म हो भनेर जान्नुपर्छ । किनभने आनन्दबाट नै यी सारा प्राणी उत्पन्न हुन्छन्, उत्पन्न भएपछि आनन्दबाट नै बाँचिरहन्छन् र अन्त्यमा आनन्दमा नै गएर मिल्दछन् । यही नै भार्गवी विद्या हो । यही नै वारुणी विद्या हो । यही नै ब्रह्मविद्या हो ।

यसैगरी भृगुवल्लीको प्रथम अनुवाकदेखि नै अन्न ब्रह्म हो, प्राण ब्रह्म हो, चक्षु ब्रह्म हो, श्रोत्र ब्रह्म हो, मन ब्रह्म हो, विज्ञान ब्रह्म हो भनिसकेपछि आनन्द नै ब्रह्म हो भनिएको छ । यसबाट के सिद्ध हुन्छ भने सम्पूर्ण चराचर अर्थात् मूर्त, अमूर्त, कार्य र कारणसमेत सबै ब्रह्म नै हो । ब्रह्मदेखि अतिरिक्त केही छैन – सर्वं खल्विदं ब्रह्म । त्यही ब्रह्मको अपरोक्ष साक्षात्कार गर्नका लागि नै सबैको प्रवृत्ति हुने गर्दछ । ब्रह्मसाक्षात्कार गर्दा पहिले अध्यारोप र पछि अपवाद गरिन्छ । यसैबाट नै ब्रह्मसाक्षात्कार हुन्छ ।

जगत्को अभिन्न निमित्तोपादान कारण पनि ईश्वर वा ब्रह्म नै हो । ब्रह्म भनेको वेद पनि हो । **तेने ब्रह्म हृदा य आदिकवये ।** *(भागवत १।१।१)* यहाँ ब्रह्म भन्नाले वेदशास्त्रलाई बुझ्नुपर्दछ । त्यस्तै ब्रह्म भनेको तपस्या हो, सत्य हो, हिरण्यगर्भादिजीव पनि ब्रह्मशब्दले प्रयुक्त हुन्छन् ।

त्यतिमात्र होइन प्रसङ्गवशात् कहीं ब्राह्मणलाई ब्रह्म भनेर सम्बोधन गरिन्छ भने कहीं ऋत्विग्विशेषलाई अर्थात् यज्ञका

सन्दर्भमा ब्रह्मशब्दको प्रयोग गरिन्छ । वेदान्तीहरू परब्रह्म परमात्मालाई ब्रह्म भन्दछन् । **तदेव ब्रह्म त्वं विद्धि नेदं यदिदमुपासते ।** *(केनोपनिषद् १।४।८)*

अचिन्तनीय, अवर्णनीय ब्रह्मतत्त्लाई कोही ब्रह्म भन्दछन्, कोही परमात्मा भन्दछन् त कोही भगवान् भन्दछन् । तर तत्त्वतः एकै हो । त्यो हो ब्रह्म ।

मध्वमतका वैष्णवहरू विष्णुलाई परब्रह्म मान्दछन् । रामानुजका अनुयायीहरू शेषशेषीभावका विशेषलाई ब्रह्म भन्दछन् । अद्वैत वेदान्तीहरू ब्रह्मलाई सगुण र निर्गुणमा विभाजन गरी दुई प्रकार मान्दछन् । मायामा आश्रित जाग्रत्, स्वप्न र सुषुप्तिजस्ता अवस्थात्रयका साक्षीलाई सगुण मान्दै त्यसको काम ईश्वरलाई सुम्पन्छन् । त्यसका अतिरिक्त मायातीत, गुणातीत, अवस्थातीत, पञ्चकोशातीत, निर्गुण, निराकार, शुद्ध ब्रह्म नै पारमार्थिक सत्तामा स्वीकृत ब्रह्म हो र त्यो आफूदेखि अभिन्न हो भन्ने अद्वैतवेदान्तले निर्घोष गरेको सत्य र तथ्यलाई अद्वैत वेदान्तीहरू हृदयतः स्वीकार गर्दछन् ।

ब्रह्मनिर्वाण अर्थात् मोक्ष नै हाम्रो लक्ष्य हो । पापपुण्यरहित हुनु, धर्माधर्मादिविवर्जित हुनु, जन्म र मृत्युको पाशबाट छुट्कारा पाउनु, जीवात्मा र परमात्माको एकताबोधद्वारा दृढ अपरोक्ष ब्रह्मसाक्षात्कार गर्नु नै मानवजीवनको परमपुरुषार्थ हो । ब्राह्मी स्थिति प्राप्त गर्नलाई ब्रह्मस्वरूपमा अवस्थिति हुनुपर्छ । स्थितप्रज्ञको स्थिति ब्राह्मी स्थिति हो ।

**एषा ब्राह्मी स्थितिः पार्थ नैनां प्राप्य विमुह्यति ।**
**स्थित्वास्यामन्तकालेऽपि ब्रह्मनिर्वाणमृच्छति ॥**

*– श्रीमद्भगवद्गीता २।७२*

हे पार्थ ! यो ब्रह्मज्ञानीहरू बस्ने, ब्रह्मविषयक अवस्थालाई ब्राह्मी स्थिति भन्दछन् । यस स्थितिमा पुगिसकेपछि मानिसले मोहका खाडलमा पर्नुपर्दैन । ब्रह्मको अपरोक्ष साक्षात्कार गरेका ब्रह्मनिष्ठ पुण्यात्माहरू अन्तकालमा पनि यही ब्रह्मनिष्ठामा स्थित भएर ब्रह्मानन्द प्राप्त गर्दछन् । सामान्य बुद्धि अर्थात् विषयाकाराकारित बुद्धिभन्दा कताकता परको भए तापनि अखण्डाकार किंवा ब्रह्माकाराकारित बुद्धिमा आत्मरूपले, सच्चिदानन्द अद्वयरूपले र अभिन्नतापूर्वक स्वयंप्रकाशरूपले अनुभवमा आउने वस्तु ब्रह्म हो । अतः मानव जीवनमा सुन्नुपर्ने, मनन गर्न योग्य, भक्तिगर्न, निदिध्यासन गर्न, खोज र अनुसन्धान गर्न लायक, विचार–विमर्श, चिन्तन र अध्ययन गरी सम्पूर्ण शक्ति लगाएर आत्मसात् गर्न योग्य वस्तु ब्रह्म हो । ब्रह्मबोध भएमात्र सबैप्रकारका आधिभौतिक, आधिदैविक र आध्यात्मिक तापबाट मुक्ति पाइन्छ । यसबाट दुःखको सर्वथा अभाव हुन्छ । त्यसपछि निरतिशय, आत्यन्तिक, स्वरूपभूत, शाश्वत, बनिबनाउ र परिपूर्ण आनन्दको अनुभूति प्राप्त हुन्छ । **नाऽन्यः पन्था विद्यते ऽयनाय** । यसदेखि अतिरिक्त आत्मकल्याणको अर्को बाटो नै छैन । ब्रह्मका विषयमा जति सुने पनि, पढे पनि, लेखे पनि, बोले पनि र अनुसन्धान गरे पनि पुग्दैन कमी नै हुन्छ तापनि हाम्रो अनुसन्धानको विषय ब्रह्म हो । अनुसन्धान गरुन्जेल नभेटिने र जब अनुसन्धानले, मनले, वाणीले विश्राम लिन्छन् अनि ब्रह्म स्वयं आफूमा साक्षात्कार हुन्छ । अनादिकालदेखि अन्तःकरणमा जम्मा हुँदै आएको कामकर ण्ड अर्थात् वासनाको थुप्रोले ब्रह्मलाई ढाकिदिएको छ । त्यस वासनालाई हटाउनका लागि नै हामीहरूले प्रयत्न गर्नुपरेको छ । त्यसैलाई नै पुरुषार्थ भनिन्छ ।

निष्कामकर्मयोगले मलदोष, भगवद्भक्तिले विक्षेपदोष र ब्रह्मज्ञानले आवरणदोष हटाउनु हाम्रो पुरुषार्थ हो। ब्रह्मज्ञान पढ्नका लागि, भन्नका लागि, जान्नका लागिमात्र होइन, यो त हुनका लागि हो। उपनिषद्ले उद्घोष गरेकोछ – **ब्रह्मवेद ब्रह्मैव भवति।** ब्रह्मजान्ने ब्रह्म नै हुन्छ। ब्रह्म भने जानियो तर ब्रह्म भने भइएन भने ब्रह्म जान्नाको के अर्थ ? के प्रयोजन ? जान्नु ज्ञान हो भने हुनु विज्ञान हो। त्यसैले त श्रीकृष्ण गीतामा आज्ञा हुन्छ – **ज्ञानं विज्ञानसहितं यज्ज्ञात्वा मोक्ष्यसेऽशुभात्।** *(श्रीमद्भगवद्गीता ९।१)*

अनुभवले युक्त परमगुप्त ब्रह्मविषयक ज्ञान म तिमीलाई बताउँछु। यो ब्रह्मको साक्षात्कार गराउने ज्ञान जानेर आफूमा आत्मसात् गरेपछि तिमी यो अशुभ संसारको संसृतिमा फेरी पर्ने छैनौ।

हामीलाई चाहिएको छ विज्ञान अर्थात् अनुभवसहितको ज्ञान। ज्ञानका लागि ज्ञान होइन, अपितु जीवनका लागि, व्यवहारमा प्रयोग गर्नका लागि, आफू मुक्त हुनका लागि, सबै प्रकारका दुःख छुटाउन र निरतिशय आनन्द र शान्तिको अनुभूतिका लागि हामीलाई ज्ञानी, ब्रह्मज्ञानी हुनु परेको छ। यसैमा मात्र हाम्रो कल्याण छ।

वेदान्तका दुई विषयहरू अत्यन्त महत्त्वपूर्ण छन्। ती हुन्– जाग्रदादि तीन अवस्थाको विवेचन र अन्नमयादि पाँच कोषहरूको विश्लेषण। तीन अवस्थामा पनि विशेष हो सुषुप्ति। सुषुप्ति ब्राह्मी स्थितिको अत्यन्त नजिक छ। अबोधपूर्वकको समाधि हो सुषुप्ति र बोधपूर्वकको सुषुप्ति हो समाधि। सुषुप्तिका पनि दुई भेद छन् – सुषुप्ति अवस्था र सुषुप्ति स्थिति। सुषुप्ति अवस्था हो जाग्रत्कालहरूमा आएर वर्णन गरेको, परामर्शकालको अवस्था। यस अवस्थामा अनुभव भएको होइन, अनुभव भएका बेलामा बोल्न मिल्दैन, बोल्ने साधन छैन।

सुषुप्ति स्थिति हो ब्राह्मी स्थिति। यहाँ जीव ब्रह्म भएर ब्रह्मानुभव गरिरहेको छ। त्यस्तो अद्वैतानन्दको अनुभव भन्न मिल्दैन। तर त्यस्तो अनुभव पनि परमार्थमा काम लाग्ने हुँदैन। किन भने त्यो ब्राह्मी स्थितिकै अनुभव भएता पनि बोधपूर्वक भएको होइन। आफ्नो तुरीय पद किंवा अवस्थातीत अवस्थामा पुग्नका लागि यसले ठूलो पाठ सिकाउँदछ। आफूमात्र भएको तर जगत् आदि केही नभएको कुरा आफूले थाहा पाएर आनन्दको अनुभव गरेको परमात्माका कृपाले मात्र सुषुप्ति अवस्था प्राप्त हुन्छ। फेरि परमात्माकै कृपाले मात्र सुषुप्तिलाई राम्ररी बुझ्न सकिन्छ र बुझेको सुषुप्तिलाई अनुभवमा उतार्न पनि सकिन्छ। सुषुप्तिलाई अनुभवमा ल्याउनु भनेको समाधिमा स्थित हुनु हो। नित्य, निरन्तर, दीर्घकालपर्यन्त तैलधारावत् समाधिको अभ्यास गरेपछि मात्र ब्रह्मसाक्षात्कार हुन्छ। मानव जीवनको परमपुरुषार्थ यही नै हो। कुरा भन्न जान्नु, पङ्क्ति कण्ठ गर्नु, तर्कमा सिपालु हुनु र ग्रन्थहरू लेख्नु ठूलो कुरो होइन तर जीवात्मा र परमात्माको ऐक्यज्ञान अनुभवमा आएर कृतकृत्य हुनु नै ठूलो कुरा हो।

ब्रह्मसाक्षात्कार गर्नु हाम्रो परम लक्ष्य हो। ब्रह्मसाक्षात्कार भइसकेपछिको अनुभूति हो। ब्रह्मसाक्षात्कारका लेखकमा श्रद्धा, विश्वास, अनुसन्धान र निष्ठा पूर्णमात्रामा देखिन्छ। यसलाई ठूलो उपलब्धि मान्नु पर्दछ। ब्रह्मसाक्षात्कारका स्रष्टा मेरा अत्यन्त हितैषी वेदान्ती मित्र, अध्यात्ममार्गका सहयात्री श्रीशरत्कुमार भट्टराईले विधिपूर्वक वेदान्त पढेको फल आज आएर फलेको अनुभव भएको छ। असल विरुवा समय पाएपछि हरित, पल्लवित, पुष्पित र फलित हुँदोरहेछ भन्ने कुरा आज भट्टराईज्यूले प्रमाणित गरेर देखाइदिनुभएको छ। जवानीमा,

जोसमा, पदमा प्रतिष्ठित हुँदा दण्डधारी भएर दण्ड चलाए पनि फुलेपछि, फुक्लेपछि पनि मौका पाएमा वेदान्तको पुरानो संस्कार ले मौलाउने मौका पाउँदो रहेछ। प्रशासनको उपल्लो तहसम्म पुगेर हिजो जगत्साक्षात्कार गर्ने शरत्कुमार भट्टराई आज बृहदारण्यक आदि उपनिषद्, श्रीमद्भागवद्गीता, ब्रह्मसूत्र, अद्वैतसिद्धि र खण्डनखण्डखाद्य आदिका स्वाध्यायी भएर ब्रह्मसाक्षात्कारतिर पुग्ने शरत्कुमार भट्टराई हुनुभएको छ। उहाँलाई हिजोले नै आज बनाएको हो तथापि अब उहाँ नित्य, निरन्तर, निष्ठापूर्वक आजमा अड्नुभएको छ। यो नै उहाँको साधना र निष्ठाको परिणाति हो। पारमार्थिक शरत्कुमारलाई चिन्न अब ब्रह्मसाक्षात्कार पढ्नै पर्दछ। अवधूत महाराज दत्तात्रेयले आफ्नो अत्यन्त प्रसिद्ध ग्रन्थ अवधूतगीतामा आफ्नो नामको प्रत्येक अक्षरको अर्थ गर्नेक्रममा भन्नुहुन्छ – (**'ब'** का सन्दर्भमा) –

**वर्तमानेषु वर्तेत वकार तस्य लक्षणम्।**

वर्तमानमा रहनु नै अवधूतका चार अक्षरमध्येको वकारको लक्षण हो। प्रसिद्ध रसियन कथाकार दार्शनिक लिओ टल्सट्वाई भन्छन् – Present time is the most important time अर्थात् वर्तमान समय नै सबभन्दा महत्त्वपूर्ण समय हो। वर्तमान ब्रह्ममय बन्यो भने अवश्य पनि ब्रह्मसाक्षात्कार हुन्छ।

यहाँ मैले शब्द पुष्पाञ्जलीद्वारा ब्रह्मसाक्षात्कारको यथाशक्ति, यथाभक्ति सामान्य अर्चनामात्र गरेको छु। विशेषपूजा गर्ने हो भने समयले स्थानले पनि दिँदैन। शरत्कुमारज्यूको ब्रह्मयज्ञमा अलिकति चरुको हवन गरेको मात्र हो। उहाँको परिश्रम, प्रस्तुति र परमात्माप्रतिको प्रेम प्रशंसनीय छ।

शरत्कुमार भट्टराईज्यूका तेत्तीस ओटा अत्यन्त प्रौढ, पाण्डित्यपूर्ण, अद्वैत वेदान्तपरक, प्रमाणहरूद्वारा प्रतिपादित, शास्त्रीय आधारमा प्रमाणित निबन्धहरूको सङ्कलन ब्रह्मसाक्षात्कार एउटा भव्य पठनीय ग्रन्थ बनेको छ । छोटोमा तीन पृष्ठको मुक्ति शीर्षक भएको निबन्धदेखि लिएर सबैभन्दा लामो उनन्तीस पृष्ठ भएको अद्वैतवेदान्तनामक निबन्धसमेत यस ग्रन्थभित्र समाविष्ट छन् । यसमा परेका अद्वैतवेदान्तपरक केही निबन्धहरू सामान्य पाठकका लागि केही दुरुहजस्तो लाग्न सक्तछन् । तर गहिरिएर पढ्न सकेमा यिनबाट कल्याण नै हुने देखिन्छ । भक्ति र ज्ञानबाट नै मुक्ति हुन्छ भन्ने हाम्रा प्राचीन आचार्यहरूका दार्शनिक भनाइहरूलाई यस ग्रन्थमा भट्टराईज्यूले आफ्ना भाषा र शैलीद्वारा अत्यन्त सफलतापूर्वक प्रतिपादन गरी प्रस्तुत गर्नुभएको छ ।

**अध्यास**बाट शुभारम्भ भएर **अद्वैतवेदान्त**मा टुङ्गिएको ३०७ पृष्ठको ब्रह्मसाक्षात्कार अद्वैतवेदान्त दर्शनको एउटा प्रामाणिक एवं समीक्षात्मक आधार ग्रन्थ नै बनेको छ । अद्वैतसिद्धिजस्ता महान् ग्रन्थको प्रौढ भाषामा पाण्डित्यपूर्ण ढङ्गले गरिएको विशद समीक्षाद्वारा शरत्कुमार भट्टराईज्यूको ज्ञान गरिमाको उच्च मूल्याङ्कन गर्न सकिन्छ । **शिशुब्राह्मण** र **मूर्तामूर्तब्राह्मण** बुझ्न भने हम्मे हम्मे नै पर्छ । तर **साधवः साधुभूषणाः, भक्ति, भक्तपरायण भगवान्, गोपी, चतुःश्लोकी भागवत**जस्ता निबन्धहरू भक्तिमा चुर्लुम्म डुबेकाले अत्यन्त रसिला, सरल र हृदयस्पर्शी छन् । यिनले भक्तिको यथार्थ रहस्यलाई उजागर गर्न महान् सफलता प्राप्त गरेका छन् । जाग्रत्, स्वप्न र सुषुप्तिजस्ता तीन अवस्था सहित चौथो तुरीय अवस्थाको समेत राम्रो विश्लेषण र विवेचना भएको हुँदा वेदान्तका

विद्यार्थीहरूका लागि अत्यन्त उपयोगी सिद्ध हुने मैले ठानेको छु। श्रीमद्भागवतमहापुराणका आधारमा हंसगीता, रुद्रगीता, ध्रुवगीता र भिक्षु गीताको प्रणयन गर्नुका साथै योगवासिष्ठ महारामायणको आधारमा सिद्धगीताको प्रणयनसमेत भट्टराईले गर्नुभएको छ। यी पञ्चगीताहरूले यस ग्रन्थलाई अरू उचाइमा उचालेका छन्।

**अध्यास, चिदाभास, ब्रह्म, साक्षी, मुक्ति**जस्ता वेदान्तका गम्भीर विषयको खुब राम्ररी विश्लेषण भएको छ। उपनिषद्, गीता, ब्रह्मसूत्र, श्रीमद्भागवत, आद्यजगद्गुरु शङ्कराचार्य, मधुसूदन सरस्वती आदिका उद्धरणहरू प्रशस्त दिएर प्रस्तुत विषयको प्रामाणिकता सिद्ध गर्नुका अतिरिक्त आफूले अध्ययन गरेका ग्रन्थहरूप्रतिको आस्था र निष्ठालाई अत्यन्न सफलतापूर्वक प्रस्तुत गरिएका ब्रह्मसाक्षात्कारभित्रका निबन्धहरूले भट्टराईज्यूको ज्ञानगरिमालाई राम्ररी प्रकाशित गरेका छन्। त्यसैले यो ग्रन्थ पठनीय, मननीय एवं दर्शनीय छ।

लक्ष्यलाई वा अनुभवलाई आधार मानेर सिङ्गो ग्रन्थको शीर्षक चयन गरिएको हुनाले र त्यही स्तरका निबन्धहरू परेकाले शीर्षक **ब्रह्मसाक्षात्कार** सार्थक सिद्ध भएको छ। शब्दान्तर, भाषान्तर, रूपान्तर, प्रकारान्तर एवं प्रसङ्गानुसार ग्रन्थको आरम्भदेखि अन्त्यसम्म नै ब्रह्मज्ञान, आत्मज्ञान, स्वरूपबोध, अपरोक्षानुभूति आदिकै चर्चा, विवेचना र विश्लेषण भएकाले पनि **ब्रह्मसाक्षात्कार** शीर्षक समीचीन देखिन्छ। प्रस्तुत ग्रन्थले ब्रह्मसाक्षात्कार गर्नका लागि तीव्र मुमुक्षु, तीव्र वैराग्यवान्, संयमी, विवेकी, अधिकारी आदिका लागि मार्ग प्रशस्त गरिदिएकाले, शास्त्रीय पद्धतिअनुसार बाटो देखाइदिएकाले साधकका लागि अत्यन्त रुचिकर भएको छ। वेदान्तका मीठमीठा

व्यञ्जनहरू पस्किदिएको हुनाले आरम्भदेखि अन्त्यसम्म नै **स्वादु स्वादु पदे पदे** *(भागवत ११।१९)* भएको छ ।

भक्तिपरक वा वेदान्तपरक कुनै पनि विषयको चयन गर्नु, त्यसमा विधिपूर्वक प्रवेश गर्नु, त्यसका पूर्वापर प्रसङ्ग कोट्याएर राम्रै चिरफार गरी एउटा शास्त्रीय निष्कर्षमा पुग्नु प्रस्तुत ग्रन्थको वैशिष्ट्य हो ।

दशौँवर्षदेखिको स्वाध्याय र वेदान्तसाधनाले भट्टराईज्यूलाई आज **ब्रह्मसाक्षात्कार**सम्म आइपुग्न कठोर तपस्या गर्नुपर्‍यो होला । तर उहाँ आफ्नो साधनामा तपस्यामा पूर्णमात्रामा सफल हुनुभएको उहाँका निबन्धहरूले देखाउँछन् । उहाँको अनुभव कस्तो छ त्यो त उहाँलाई नै थाहा होला ।

श्रीशरत्कुमार भट्टराईज्यूले मलाई किन हो कुन्नि थाहा छैन, असाध्य प्रेम गर्नुहुन्छ । म पनि त्यत्तिकै प्रेम र सम्मान गर्छु । हामी दुवै अद्वैत वेदान्त मार्गका सहयात्री हौँ । हामी दुवैको यात्रा गन्तव्यमा नै पुगेर टुङ्गियोस् भनेर सर्वान्तरयामी परब्रह्म परमात्मा पशुपतिनाथका पाउमा म प्रार्थना गर्दछु । उहाँको लेखनीले अझ सशक्तरूपमा भक्ति र वेदान्तका गूढ रहस्यमय गम्भीर विषयवस्तुलाई सरलभन्दा सरलरूपमा साधारण वेदान्तका पाठकका लागि सामाग्री र खुराकहरू पस्कनमा सफलता प्राप्त गरोस् । उहाँको स्वस्थता अर्थात् स्वरूपमा सम्यक्रूपको अवस्थिति सदा कायम रहिरहोस् भन्ने शुभकामना व्यक्त गर्दछु ।

– शिवमस्तु –

शिवमन्दिर
शान्तिकुना, ललितपुर

प्रा.शिवगोपाल रिसाल

# भूमिका

म सानो छँदा मेरा घरको वातावरण साहित्यिक र धार्मिक थियो । त्यसै वातावरणमा मेरो बाल्यजीवन व्यतीत भएको थियो । मैले २०१५ सालदेखि साहित्यतर्फ कलम चलाएको थिएँ । २०६२ साल सम्ममा मेरा केही समीक्षात्मक ग्रन्थहरू, केही कवितासङ्ग्रहहरू, केही खण्डकाव्यहरू, गीत र भजनसमेत गरेर एक दर्जनभन्दा बढी पुस्तकहरू प्रकाशित भइसकेका थिए । मलाई मानसिक शान्ति र आत्मसन्तुष्टि भने भएको थिएन । त्यसको कारण खोज्दा आफ्नू अवकाश प्राप्त जीवनलाई सहीरूपमा सदुपयोग गर्न नसकेको कुरा मैले महसूस गरेको थिएँ ।

मेरो बाल्यावस्थाको भक्तितर्फको संस्कार र विद्यार्थी अवस्थाको अद्वैतवेदान्तको अध्ययनको पृष्ठभूमिलाई मैले सदुपयोग गर्न नसकेको मलाई अनुभूति भएको थियो । हुन त अवकाश प्राप्त गर्नुभन्दा पहिलेदेखि नै सत्सङ्ग, धार्मिक तथा आध्यात्मिक प्रवचनको श्रवण र अद्वैतवेदान्तको अध्ययनतर्फ म लागिसकेको थिएँ । तै पनि ममा रिक्तताको अनुभूति घनीभूतरूपमा विद्यमान थियो । त्यस रिक्ततालाई हटाउँन धार्मिक तथा आध्यात्मिक ग्रन्थहरूको अध्ययन र अनुशीलन गर्न तीव्ररूपमा मैले शुरु गरेको थिएँ । श्रीमद्भागवतमहापुराणमा देवर्षि नारदले वेदव्यासलाई गर्नुभएको परमपावन उपदेशले मेरा पनि आँखा खोलिदिएको थियो । त्यसले मेरो आत्मिक असन्तुष्टिको रहस्यलाई खुलाइदिएको थियो । त्यसपछिमात्रै त्यतिन्जेलसम्मका मेरा धेरैजसो रचनाहरू सांसारिक कुराहरूमा सीमित र

**'वाचारम्भणं विकारो नामधेयम्'** *(छा.उ. ६।१।४)* मात्रै रहेछन् भन्ने मलाई थाहा भएको थियो। देवर्षि नारदको त्यस मार्मिक तथा हृदयग्राही उपदेशलाई यहाँ उद्धृत गर्नु म अत्यन्त सान्दर्भिक ठान्दछु –

**न यद्वचश्चित्रपदं हरेर्यशो जगत्पवित्रं प्रगृणीत कर्हिचित्।**
**तद्वायसं तीर्थमुशन्ति वायसा न यत्र हंसा निरमन्त्युशिक्षयाः॥**

*– भागवत १।५।१०*

अर्थात् जुन साहित्यमा वा रचनामा अलङ्कार, रस, भाव आदिको चित्रविचित्र संयोजन छ तापनि जगत्लाई पवित्र पार्ने भगवान्का महिमाको वर्णन भएको छैन भने त्यो रचना सर्वथा निरर्थक हो। त्यस्तो रचना ता कागहरूकालागि उच्छिष्ट फ्याँक्ने जुठेल्नु जस्तो अपवित्र हो। मानसरोवरको रमणीय कमलवनमा विचरण गर्ने हंसजस्ता भक्तज्ञानीहरू त्यस्ता अपवित्र रचनामा भुल्दैनन्। अर्थात् त्यस्ता अपवित्र साहित्यहरू उनीहरू पढ्दैनन्।

त्यसैगरेर भागवतको एक अर्को श्लोकले पनि मेरो सुतेको चेतनालाई जगाइदिएको थियो। जस्तै –

**नूनं दैवेन विहता ये चाच्युतकथासुधाम्।**
**हित्वा शृण्वन्त्यसद्गाथाः पुरीषमिव विड्भुजः॥**

*– भागवत ३।३२।१९*

अर्थात् अभागी मानिसहरू भगवान्को कथारूपी अमृतलाई छोडेर सुँगुर र कुकुर विष्टामा रमाएझैँ गरेर विषयवार्तामा रमाउँछन्।

त्यसपछि सांसारिक विषयतिर उन्मुख गराउने खालका रचनाहरू सिर्जना गर्न छोडेर भगवान्को यशोगान र ब्रह्मज्ञान भएका रचनाहरूतर्फ म लागेको थिएँ। फलस्वरूप केही फुट्कर

पद्यहरूको समच्छन्दमा र विषमच्छन्दमा पनि मैले अनुवाद गरेको थिएँ। फलस्वरूप श्रीमद्भागवतमहापुराणभित्रका ज्ञान र भक्ति सम्बन्धी केही पद्यहरूको अनुवाद पनि गरेको थिएँ। तिनै कविताहरूलाई सङ्गृहीत गरेर ज्ञान र भक्तिका नामबाट २०६३ सालमा श्रीराजर्षिजनकस्मृतिकोषले प्रकाशित गरिदिएको थियो।

मेरो अद्वैतवेदान्तको अध्ययन, सत्सङ्ग र श्रीमद्भागवत-महापुराणको स्वाध्याय गर्ने प्रवृत्ति झनै बढेर गएको थियो। भागवतलाई ज्ञान, भक्ति र वैराग्यको त्रिवेणी भनिन्छ। यसका सबै कुरा अनुपम छन्। त्यसमा पनि दशमस्कन्ध भागवतको हृदय अर्थात् मुटु हो भने त्यसमा पनि २९ औँ अध्यायदेखि लिएर ३३ औँ अध्यायसम्मका ५ अध्यायहरू जसलाई रासपञ्चाध्यायी पनि भनिन्छ, भागवतका पञ्चप्राणै हुन् । त्यस अलौकिक तथा चिन्मय रासपञ्चाध्यायीका सम्बन्धमा विद्वान्हरूमा रहेको मतमतान्तर र सामान्य व्यक्तिहरूमा रहेको गलत धारणालाईसमेत यथाशक्य निराकरण गर्ने उद्देश्यले मैले रासपञ्चाध्यायीको रचना गरेको थिएँ। त्यसलाई पनि २०६४ सालमा कोषले प्रकाशित गरिदिएको थियो।

त्यसपछि पनि अनुवाद गर्ने क्रम मैले जारी नै राखेको थिएँ। जसमा केही भागवत र उपनिषद्का अंशहरू पनि पर्दछन्। चतु:श्लोकीभागवतको अंश –

**ममात्रै नै थिएँ पैले थिएनन् सत् असत् पर।**
**अहिले पनि मै नै छु पछाडि पनि मै तर ॥१॥**
**नभए पनि देखिन्छ देखिँदैन भए पनि।**
**देखिन्छ सब यो माया आभास तम झैँ बनी ॥२॥**

**सम्पूर्ण भूतप्राणीमा पसेको छु र छैन म ।**
**ममा छैनन् कुनै केही सबैमा बस्छु टम्म म ॥३॥**
**तत्त्वजिज्ञासुले यो नै बुझ्नुपर्दछ तत्त्वतः ।**
**अन्वयव्यतिरेकादि विचारीकन वस्तुतः ॥४॥**

माण्डूक्योपनिषद्को अंश –

**प्रज्ञाका अंशुले नै चरअचरसँगै लोक सम्पूर्ण ढाकी ।**
**जाग्रत्को भोग भोगी त्यसपछि सपना देख्छ संस्कार डाकी ॥**
**यी सारा भोग भोगी अनिपछि तमका भित्र आनन्दसाथ ।**
**सुत्ने त्यो ब्रह्म चौथोकन नमन सधैँ गर्छु सद्भक्तिसाथ ॥१॥**
**जाग्रत्मा विश्व आत्मा शुभअशुभ दुवै भोग भोगेर फेरि ।**
**आफ्ना नै वासनाले विरचित सपना भोग्छ चिज्ज्योति हेरी ॥**
**बिस्तारै नै सबै ती सुगहन तमका भित्र राखेर साथ ।**
**सुत्ने हे ब्रह्म ! चौथा जय गर सबको पाउमा राख्छु माथ ॥२॥**

यसरी लेखनको क्रममा नै मैले केही अद्वैतवेदान्तपरक र केही भक्तिपरक लेखहरू पनि लेखेको थिएँ । तीमध्ये केही रचनाहरू मैले स्वाध्यायको क्रममा स्वाध्यायीहरूलाई सुनाएको पनि थिएँ । सुनाएका रचनाहरूमध्येमा अध्यास, चतु:श्लोकीभागवत, तुरीयतत्त्व, ब्रह्मदर्शन, सुषुप्ति, चिदाभास, एषणा, हृदयग्रन्थिभेदन, शिशुब्राह्मण, मूर्तामूर्तब्राह्मण, सिद्धगीता, हंसगीता र ब्रह्मसमेत पर्दछन् । मैले लेखेका ३३ ओटा रचनाहरूमध्ये केही रचनाहरू सुनेपछि श्रीशङ्कराचार्यमठका स्वाध्यायीहरूमध्ये नारायणीमातालगायतका जिज्ञासुहरूले जतिसक्तो चाँडो यस सङ्ग्रहलाई प्रकाशन गर्ने भनेर मलाई प्रेरित गर्नुभएको थियो । श्रीराजर्षिजनकस्मृतिकोषले यसलाई

पनि प्रकाशन गरिदिने तत्परता देखाएपछि यसको प्रकाशन सम्भव भएको हो । यसका लागि म श्रीराजर्षिजनकस्मृतिकोषलाई धन्यवाद अर्पण गर्दछु । सम्पादन गर्नेजस्तो सूक्ष्म काम श्रीविश्वनाथ रूपाखेतीले गरिदिनुभएकोमा म उहाँलाई हार्दिक धन्यवाद ज्ञापन गर्दछु ।

**ब्रह्मसाक्षात्कार**को दर्शन गरेपछि भन्ने सारगर्भित प्राक्कथन लेखेर यसको महत्त्वख्यापन गरिदिनुभएकोमा आदरणीय प्राध्यापक श्रीशिवगोपाल रिसालज्यूमा म हार्दिक कृतज्ञता अर्पण गर्दछु । वर्षौं अघिदेखि प्रवचन र स्वाध्यायको माध्यमद्वारा ब्रह्मज्ञानतर्फ प्रेरित गर्ने डा. स्वामी श्रीरामानन्द गिरिज्यू र गुरु प्रा.डा. श्रीदीर्घराज घिमिरेज्यूमा पनि म कृतज्ञता ज्ञापन गर्दछु । दशकौंदेखि श्रीराजर्षिजनकस्मृतिकोषको आयोजनामा चलिरहेको अद्वैतवेदान्तका स्वाध्यायमा संलग्न मित्रहरू श्रीरघुनाथ भण्डारी, श्रीशारदाप्रसाद दाहाल, श्रीविश्वनाथ रूपाखेती र श्रीमती इन्दिरा भट्टराईहरूसमेतले यो ग्रन्थको लेखन र प्रकाशनका लागि मलाई प्रेरणा दिनुभएकोमा म उहाँहरूलाई हृदयदेखि साधुवाद ज्ञापन गर्दछु । अन्त्यमा कम्प्युटर टाइप गरेर प्रत्यक्षरूपमा सहयोग पुऱ्याउने श्रीराजेन्द्रराज दाहाल र श्रीखड्गप्रसाद खनालका साथै अप्रत्यक्षरूपमा मलाई यसतर्फ प्रेरित गर्ने सबै मुमुक्षु तथा जिज्ञासु मित्रहरूलाई पनि धन्यवाद ज्ञापन गर्दछु । अस्तु । श्रीकृष्णार्पणमस्तु ।

२०६५ फागुन ७ गते

विनीत
शरत्कुमार भट्टराई

# सूचीपत्र

# अध्यास

अधि उपसर्गपूर्वक आस उपवेशने धातुबाट घञ् प्रत्यय भएर अध्यास शब्द बन्दछ । यसको अर्थ सामान्य भाषामा मिथ्या आरोप, मिथ्या ज्ञान, कल्पना आदि हुन्छन् । यसको विशेष अर्थ गर्दै वामनशिवराम आप्टेले भ्रमवश एउटा वस्तुमा अर्को वस्तु देखापर्नु, भ्रमवश डोरीमा सर्प देख्नु अर्थात् **'अवस्तुनि वस्त्वारोपः'** अध्यास हो भनेका छन् । यसको सामान्य अर्थ यही नै हुन्छ । तर अद्वैतवेदान्तमा अध्यासको सीमा यतिमात्र नभएर अत्यन्त व्यापक छ । अरू दर्शनहरूमा अध्यास शब्दका ठाउँमा ख्याति आदि शब्दहरूको प्रयोग गरेको देखिन्छ ।

अब अध्यासको सङ्क्षिप्त चर्चा आद्यजगद्गुरु श्रीशङ्कराचार्यद्वारा प्रणीत शारीरकमीमांसा अर्थात् ब्रह्मसूत्रभाष्यको उपोद्घातभाष्यको आधारमा गरिनेछ । अद्वैतवेदान्तको सम्पूर्ण धरातल अध्यारोप र अपवादमा अडेको छ । **'अध्यारोपापवादाभ्यां निष्प्रपञ्चं प्रपञ्च्यते'** अर्थात् अज्ञानद्वारा अधिष्ठान ब्रह्ममा द्वैतप्रपञ्चको अध्यारोप गरिएको छ । निष्प्रपञ्च ब्रह्मलाई सप्रपञ्च भनिन्छ । त्यस प्रपञ्चलाई अपवादद्वारा हटाएर शुद्ध ब्रह्मको ज्ञान गर्नु नै वेदान्तको प्रयोजन हो ।

दृश्य र द्रष्टाको परस्परमा अत्यन्त भिन्नता भए तापनि दुवैका धर्म एक अर्कामा छुट्याउन नसकिने भएर मिसिएका हुन्छन् । त्यसरी सत्य र असत्यलाई एकै ठाउँमा मिसाएर यो म र यो मेरो भन्ने लोकमा जुन नैसर्गिक व्यवहार चलिरहेको छ त्यो नै अध्यास हो । अझ यसलाई स्पष्ट पार्दै शङ्कराचार्यले लेख्नुभएको छ – **'स्मृतिरूपः परत्र पूर्वदृष्टावभासः'** अर्थात् संझनारूप तथा कुनै एकको कुनै

अर्कोमा झलकपर्नु अध्यास हो। **'तं केचिदन्यत्रान्यधर्मावभास इति वदन्ति'** अर्थात् त्यसलाई केही दार्शनिकहरू कुनै एक वस्तुको कुनै अर्को वस्तुमा धर्माध्यास हुनु नै अध्यास हो भन्दछन्। **'केचित्तु यत्र यदध्यासस्तद्विवेकाग्रहनिबन्धनो भ्रम इति'** अर्थात् एकको अर्कामा जहाँ जसको अध्यास हुन्छ त्यसको विवेक गर्न नसक्नु नै अध्यास अथवा भ्रम हो। **'अन्ये तु यत्र यदध्यासस्तस्यैव विपरीतधर्मत्वकल्पनामाचक्षत इति। सर्वथापि त्वन्यस्यान्य धर्मावभासतां न व्यभिचरति।'** अर्थात् अर्काथरी दार्शनिकहरू जहाँ जसको अध्यास छ उसैको विपरीतधर्मताको कल्पनामात्र हो भन्दछन्। जस्तै – सिपीमा चाँदीको भ्रम हुँदा सिपीको विवेक गर्न नसक्नुको कारण नै चाँदीको भ्रम भएको हो। जहाँ चाँदी छैन त्यहाँ चाँदीको कल्पनागर्नु विपरीत धर्मको कल्पनामात्र हो। यसबाट वास्तवमा त्यो देखाइ वास्तविक नभएर अध्यास वा भ्रमबाट मात्र भएको सिद्ध हुन आउँछ। लोकव्यवहारमा पनि यो कुरा मिल्न आउँछ। सिपीमा नभएको चाँदी देखापर्नु र नभएका दुइटा चन्द्रमा आकाशमा देखा पर्नु यसका उदाहरणहरू हुन्।

उपर्युक्तअनुसार अध्यासको कुरा गर्दा एउटा प्रश्न यहाँ खडा हुन आउँछ। त्यो प्रश्न हो, संसारमा अध्यस्त हुने र गरिने वस्तुहरू र तिनका धर्महरू प्रत्यक्ष छन्। जस्तै – चाँदीको आरोप गरिने अधिष्ठान सिपी र सर्पको आरोप गरिने डोरी पनि प्रत्यक्ष देखिन्छन्। प्रत्यगात्मा अर्थात् कूटस्थ आत्मामा आरोप वा अध्यस्त गरिने शरीर, इन्द्रिय आदि प्रत्यक्ष छन्। तर प्रत्यगात्मा प्रत्यक्ष छैन। त्यस्तो अप्रत्यक्ष आत्मामा शरीरादि वस्तुको कसरी अध्यास हुन सक्तछ ? भन्ने प्रश्न आउन सक्तछ। यो अत्यन्त स्वाभाविक प्रश्न

हो। यसरी बाहिरीरूपमा हेर्दा असम्भव जस्तो लाग्ने भए तापनि यो कुरा विचार गर्दा सर्वथा हुनै नसक्ने भने होइन। किनभने स्पष्ट प्रत्यक्षरूपमा देखिने विषयमा मात्रै अर्को विषयको अध्यास हुन्छ भनेर ठोकुवा लाएर भन्न सर्वथा सकिँदैन। आकाश खालिपन भएको विषय हो। त्यसमा पनि तलो र मलिनता आदिको आरोप गरिन्छ। त्यस्तै गरेर मको विषय भइरहेको कूटस्थआत्मामा पनि शरीर, इन्द्रिय आदि अनात्मवस्तुको आरोप अर्थात् अध्यास गर्न सकिने नै हुन्छ।

उपर्युक्त अध्यासलाई अविद्या वा अज्ञान भनिन्छ। त्यसलाई विवेक गरेर छुट्याउन सक्नुलाई नै विद्या भनिन्छ। जुन वस्तुको अध्यास जुन अर्को वस्तुमा हुन्छ, त्यसरी अध्यस्त भएको अधिष्ठान वस्तुमा अध्यास भएको अर्को वस्तुको गुण वा दोषले त्यस अधिष्ठानलाई कत्ति पनि प्रभाव पार्न सक्तैन। जस्तै अधिष्ठान डोरीमा अध्यस्त भएर देखापरेको सर्पले त्यस अधिष्ठान डोरीलाई कुनै प्रकारले पनि दूषित वा सम्पृक्त गराउन सक्तैन। यसै अध्यास वा अविद्याका कारणले नै सम्पूर्ण शास्त्रहरू र व्यवहार चलेका छन्। अध्यास वा अविद्याविना संसारको कुनै पनि अर्थात् ब्रह्मादेखि लिएर भुसुनासम्मको व्यवहार चल्न सक्ने देखिँदैन।

अध्यासलाई अझै स्पष्ट पार्दै श्रीशङ्कराचार्य आफ्नू भाष्यमा लेख्नु हुन्छ – **'अध्यासो नामाऽतस्मिंस्तद्बुद्धिः'** अर्थात् अध्यास भनेको जुन वस्तुमा त्यो छैन, त्यसैमा त्यो वस्तु देख्नु वा बुद्धि हुनु हो। अथवा अर्को शब्दमा भन्ने हो भने अध्यास भनेको जहाँ जुन कुरा छैन त्यहाँ त्यो कुरा देख्नु वा मान्नु हो। जस्तै – आफ्नू शरीरलाई मिथ्या आत्मा र स्त्रीपुत्रादिहरूलाई गौण आत्मा ठान्नु हो।

उपर्युक्तअनुसार बताइएको स्वरूपमात्र अध्यास नभएर बाहिरी अनन्त विश्वब्रह्माण्डदेखि लिएर भित्र आत्मासम्म पनि यसै अध्यासबाटै चलेका छन् । यस अध्यासको स्वरूप अनादि, अनन्त, नैसर्गिक, मिथ्यास्वरूप र आत्मामा कर्तृत्व, भोक्तृत्व आदि सृजना गर्ने खालको यो सर्वलोकप्रत्यक्ष पनि हो । यसैले नै जीवात्मालाई यस संसारको पारै पाइनसक्नु भुमरीमा कल्पकल्पान्तर, युगयुगान्तर र जन्मजन्मान्तरदेखि घुमाइरहेको छ । अनर्थको कारण भएको यस अध्यासलाई समूल नाश गर्नकालागि र आत्मैकत्व ज्ञानकालागि पनि सबै वेदान्तहरू आरम्भ गरिएका छन् । वेदान्तशास्त्रको मुख्य उद्देश्य पनि ब्रह्मात्मैकत्व नै हो ।

सारांशमा भन्ने हो भने अध्यासद्वारा नै यो संसार चलेको छ । यो बाहिरी सम्पूर्ण अखिल विश्वब्रह्माण्ड ब्रह्ममा अध्यस्त भएको हुँदा नभएको संसारको प्रपञ्च पनि देखापरेको छ । यो संसार नभएको सर्प अधिष्ठानरूपी डोरीमा देखापरेको जस्तै हो । यो नभएको प्रपञ्च ब्रह्मरूपी अधिष्ठानमा विवर्त भएर देखा परेको हो । विवर्त भनेको **'स्वस्वरूपमपरित्यज्य स्वरूपान्तरेण परिणमनम्'** अर्थात् आफ्नू वास्तविकस्वरूप नत्यागीकनै अर्को रूपमा देखापर्नु विवर्त हो । उदाहरणकालागि डोरी आफ्नू मूलभूत स्वरूप नत्यागीकनै सर्पका रूपमा देखापर्दछ । यो संसार इन्द्रजाल, गन्धर्वनगर र मृगमरीचिका जस्तै हो । जुन नभएर पनि देखापर्दछ ।

उपर्युक्त कुरा भयो अधिष्ठानसत्ता ब्रह्ममा अध्यस्त वा विवर्त भएर देखापरेको बाहिरी मिथ्या संसारको ओसारोपसारो । यसै अनुरूप हाम्रो पाञ्चभौतिक शरीर, इन्द्रिय र अन्तःकरणसमेत पनि अधिष्ठानसत्ता अर्थात् कूटस्थ आत्मामा अध्यस्त भएर रहेका

छन् । यस क्रममा सर्वप्रथम कूटस्थ आत्मा अर्थात् साक्षीचैतन्यको अध्यास चिदाभाससँग हुन्छ । चिदाभासको अध्यास बुद्धि वा अन्तःकरणसँग हुन्छ । अन्तःकरणको अध्यास क्रमशः इन्द्रिय, प्राण र शरीरसँग पनि हुन्छ । यहाँ अध्यास भनेको चेतन अधिष्ठानसत्ताको चेतना बाहिर अचेतन वस्तुसम्म सर्दै गएर चेतनायुक्त बनाउनु हो । सबै जडतत्त्वहरूलाई पनि चेतनायुक्त बनाएर चेतन जस्तो बनाउनु हो । उदाहरणका लागि हाम्रो भित्र रहेको चेतनतत्त्व अर्थात् साक्षीचैतन्यले आफ्नो चैतन्य क्रमशः बुद्धिदेखि शरीरसम्म प्रसारण गरेर यस शरीरलाई चेतनायुक्त तथा क्रियाशील बनाउने काम गर्दछ ।

यसरी भित्री संसार जस्तै बाहिरी संसारलाई पनि ब्रह्मले अन्तर्यामीरूपले र सर्वनियन्ताका रूपले पनि आफ्नो सत्ता र चेतना दिएर सञ्चालन र नियमन गर्दछ । उसलाई र उसको सत्तालाई कसैले पनि थाहा पाउन सक्तैन । उपनिषद्ले भनेको पनि छ – **'यः पृथिव्यां तिष्ठन् पृथिव्या अन्तरो यं पृथिवी न वेद यस्य पृथिवी शरीरं यः पृथिवीमन्तरो यमयत्येष त आत्मान्तर्याम्यमृतः । अदृष्टो द्रष्टाश्रुतः श्रोतामतो मन्ताविज्ञातो विज्ञाता नान्योऽतोऽस्ति द्रष्टा नान्योऽतोऽस्ति श्रोता नान्योऽतोऽस्ति मन्ता नान्योऽतोऽस्ति विज्ञातैष त आत्मान्तर्याम्यमृतोऽतोऽन्यदार्तम् ।'** *(बृ.उ.३/७/३, २३)* अर्थात् जुन ब्रह्म पृथिवी र पृथिवी भित्रपनि छ । जसलाई पृथिवी जान्दिनन् । पृथिवी जसको शरीर हो र जुन पृथिवीका भित्र बसेर पृथिवीको नियमन गर्दछ । त्यही आत्मा अन्तर्यामी अमृत हो । जुन देखिदैन तर ऊ सबैलाई देख्तछ । जुन सुनिदैन तर ऊ सुन्दछ । जो मनको विषय हुँदैन तर ऊ मनन गर्दछ । जो जानिदैन तर ऊ

सबैलाई जान्दछ। त्यो आत्मा हो, ब्रह्म हो। ब्रह्मदेखि बाहेक सबै नाशवान् हुन्।

अरू उपनिषद्हरूमा पनि ब्रह्मले यस संसारको सृष्टि गरेर सञ्चालन गरेको कुरा आउँछ। जस्तै **'तत्सृष्ट्वा तदेवानुप्राविशत्'** अर्थात् उसले यस संसारको सृष्टि गरेर ऊ यसैभित्र प्रवेश गऱ्यो। यसको अर्थ के हो भने, ब्रह्मले अध्यासद्वारा यस संसारको रचना गऱ्यो र अधिष्ठानसत्ताका रूपमा यसैभित्र रह्यो। किनभने एक वस्तुको जुन अधिष्ठानमा अध्यास हुन्छ त्यस अधिष्ठानको सत्ता रहेन भने अध्यस्त वस्तुको पनि सत्ता रहँदैन। जस्तै – डोरीरूपी अधिष्ठानमा अध्यस्त भएर देखापरेको सर्पलाई डोरीले आफ्नो सत्ता दिएन भने सर्प रहँदैन। ब्रह्मले आफ्नो सत्ता दिएन भने ब्रह्ममा अध्यस्त भएर रहेको संसार रहँदैन। त्यसैगरेर प्रत्येक प्राणीभित्र रहेको कूटस्थ वा साक्षीचैतन्यले आफ्नो सत्ता अन्तःकरणादि मायिक जडवस्तुलाई दिएन भने तिनको पनि अस्तित्त्व रहँदैन।

यस सम्बन्धमा सर्वप्रथम प्रत्येक प्राणीको भित्र अविद्यामा रहेको साक्षीचैतन्यको आभास अर्थात् प्रतिबिम्ब बुद्धिको सात्त्विक अंशमा परेपछि चिदाभास अर्थात् जीवभाव खडा हुन्छ। चिदाभास खडा हुँदा चिदाभासले आफ्नो चेतना बुद्धिलाई दिन्छ। त्यसलाई संसर्गाध्यास भनिन्छ। त्यसबाट जडबुद्धि वा अन्तःकरणमा चेतनाको सञ्चार हुन्छ। त्यसको साटो जडबुद्धि वा अन्तःकरणले पनि चिदाभास वा जीवात्मालाई कर्तृत्व, भोक्तृत्व आदि आफ्ना गुणहरू दिन्छ। जसलाई स्वरूपाध्यास भनिन्छ। त्यसपछि जीवात्मा वा चिदाभासमा प्रमातृत्व, कर्तृत्व, भोक्तृत्व आदि गुणहरू देखापर्दछन्। त्यसबाट निर्विकार आत्मामा पनि विकारहरू पैदा हुन्छन्। त्यसरी

बुद्धि र चिदाभासको एकअर्कामा अन्योऽन्याध्यास भएर अर्थात् एकले अर्काको धर्म लिएपछि शुद्ध आत्माका चिदचिद्ग्रन्थि, अहं, प्रमाता, जीवात्मा, क्षेत्रज्ञ, चिदाभास आदि नामहरू हुन्छन् । यही अध्यासबाट संसार चलेको छ र जीव संसारमा घुमिरहन्छ ।

विवर्त भन्नाले आफ्नोपनलाई नछोडीकन अर्कै रूपमा परिणत हुनु हो । **'अतत्त्वतोऽन्यथाप्रथा विवर्त इत्युदीरितः'** अर्थात् कुनै तत्त्व नभईकन पनि यो विशाल विश्वब्रह्माण्ड देखिनु विवर्त हो । यसैलाई अध्यास पनि भनिन्छ । अरू विभिन्न दार्शनिकहरूले विभिन्न ख्याति आदिका नामबाट अध्यासलाई बुझेका छन् । जबसम्म आफैँमा र यस विशाल विश्वब्रह्माण्डमा भएको अध्यासलाई सद्गुरु र सत्शास्त्रहरूका माध्यमबाट बुझेर यस अध्यास वा अविद्यालाई मान्छेले हटाउन सक्तैन, तबसम्म उसको मुक्ति हुन सक्तैन । यसैतर्फ नै शास्त्र र गुरुको पनि प्रयास केन्द्रित भएको देखिन्छ। यस अध्यास वा अविद्याको अभेद्य दुश्चक्र वा जालोलाई तोडेर सधैँकालागि मुक्त हुने पुरुषार्थ गर्नु नै सही पुरुषार्थ हो ।

यो अमूल्य मानव जीवन पाएर पनि सद्गुरुको उपदेश र सत्शास्त्र पढेर यस दुस्तर संसारबाट पार पाउन सक्तैन भने त्यो आत्मघाती हो । श्रुतिले पनि यही उद्घोषण गरेको छ । जस्तै –

**असुर्या नाम ते लोका अन्धेन तमसावृताः ।**
**तांस्ते प्रेत्याभिगच्छन्ति ये के चात्महनो जनाः ॥**

*– ईशावास्योपनिषद् ३।३*

अर्थात् ती असुरसम्बन्धी लोकहरू आत्माको अदर्शनरूप अज्ञानले आच्छादित छन् । जुन कुनै पनि आत्मघाती व्यक्ति मृत्युपश्चात् त्यहीँ गएर पर्दछ । अस्तु । श्रीकृष्णार्पणमस्तु ।

# आत्मोद्धार

यस अमूल्य मानवजीवनप्राप्तिको मूल उद्देश्य आत्मोद्धारका लागि नै हो। ८४ लाख योनिको दुश्चक्रमा पेलिँदै र घुम्दै प्राणीले मानव जीवन प्राप्त गरेको आत्मोद्धार अर्थात् मुक्तिका लागि नै हो। यस अमूल्य जीवनमा पनि मान्छेले आफ्नू उद्धार गर्न सकेन भने त्योभन्दा ठूलो विनाश कुनै पनि हुने छैन। **'न चेदिहावेदीन्महतीविनष्टिः।'** *(के.उ. २।५)* अर्थात्, यदि यहाँ नै त्यस ब्रह्मलाई मानिसले जानेन भने उसको ठूलो हानि हुन्छ। **"तांस्ते प्रेत्याभिगच्छन्ति ये के चात्महनोजनाः।"** अर्थात्, ती आत्मघातीहरू ब्रह्मज्ञानविना नै यहाँबाट मरेर जान्छन् भनेर श्रुतिले पनि भनेको छ।

आत्मोद्धारका सम्बन्धमा सम्पूर्ण शास्त्रहरूले सबै ठाउँमा एउटै कुरा भनेका छन्। भगवान्का विभिन्न युगमा भएका नानाथरी अवतारहरूको मुख्य उद्देश्य पनि प्राणीमात्रको उद्धार गर्नका लागि नै हो। सन्त, महात्मा र साधुपुरुषहरूको यहाँ अवतरण हुनु पनि त्यसै कामका लागि नै हो। गीतामा भगवान् श्रीकृष्ण अर्जुनलाई सम्बोधन गर्दै भन्नुहुन्छ–

**उद्धरेदात्मनात्मानं नात्मानमवसादयेत्।**
**आत्मैव ह्यात्मनो बन्धुरात्मैव रिपुरात्मनः॥**
**बन्धुरात्मात्मनस्तस्य येनात्मैवात्मनाजितः।**
**अनात्मनस्तु शत्रुत्वे वर्तेतात्मैव शत्रुवत्॥**

*– गीता ६।५–६*

अर्थात् यस दुःसह संसारमा दुःख पाएर घुमिरहेको मानिसले यो अमूल्य मानवशरीर पाएका बेलामा आफ्नो उद्धार झटपट

गरिहाल्नु पर्दछ । मानिसले आफ्नू अधोगति आफैंले गर्नु हुँदैन । किनभने मानिस आफ्नो मित्र पनि आफैं हो र आफ्नो शत्रु पनि आफैं हो । अमूल्य मानवजीवन पाएको समयमा भगवान्को भक्ति र ज्ञान गरेर आफूलाई सधैंका लागि यस असार संसारबाट मुक्त पनि गराउन सक्तछ । खराब मार्गतिर लागेर अमूल्य मानवजीवनलाई व्यर्थमा नै समाप्त गर्न पनि सक्तछ । मानिसले यस बेलामा पनि आफ्नू उद्धार गर्न सकेन भने त्यो आफू नै आफ्ना लागि ठूलो शत्रु हो । त्यसकारण मौका परेका बेला आफ्नू उद्धार गरिहाल्नु नै मानिसको बुद्धिमानी हो । आफ्नू उद्धार गर्न सकेमा मान्छे आफ्नू मित्र आफैं हो र आफ्नू उद्धार गर्न नसकेमा मान्छे आफ्नू शत्रु पनि आफैं हो ।

आत्मोद्धारका विषयमा श्रीमद्भागवतमहापुराणमा धेरै ठाउँमा उल्लेख गरेको पाइन्छ । तीमध्ये केही श्लोकहरू यहाँ उद्धरण गर्नु सान्दर्भिक ठान्दछु । जस्तै–

**निवृत्ततर्षैरुपगीयमानाद्भवौषधाच्छ्रोत्रमनोऽभिरामात् ।**
**क उत्तमश्लोकगुणानुवादात् पुमान् विरज्येत विनापशुघ्नात् ॥**

*– श्रीमद्भागवत १०।१।४*

अर्थात् भगवान् श्रीकृष्णको लीलाकथा सुन्नमा ठूलठूला योगी, सन्त, साधुहरू पनि लागेका हुन्छन् । केवल पशुघाती अर्थात् आत्मोद्धार गर्न नचाहने मनुष्यमात्रै भगवान्को गुणानुवादको श्रवणमा लाग्दैन । संसारमा तीनथरी मानिसहरू मुक्त, मुमुक्षु र संसारी हुन्छन् । ती सबैले भगवान्का लीलाकथाहरू सुन्नमा आफूलाई संलग्न गराउनु पर्दछ । जसले भगवान्का लीलाकथाहरू सुन्दैन त्यो पशुघाती अर्थात् आत्मघाती हो ।

यस सम्बन्धमा भगवान् श्रीकृष्णले श्रीमद्भागवतको एकादशस्कन्धमा उद्धवलाई उपदेश दिँदै भन्नु भएको छ–

**नृदेहमाद्यं सुलभं सुदुर्लभं प्लवं सुकल्पं गुरुकर्णधारम् ।**
**मयानुकूलेन नभस्वतेरितं पुमान् भवाब्धिं न तरेत् स आत्महा ॥**

*– भागवत ११।२०।१७*

अर्थात् मानिसले यो मनुष्यशरीर सजिलै पाएको जस्तो ठान्दछ । वास्तवमा मान्छेले यो शरीर सजिलै नपाएर धेरै जन्मजन्मान्तरको पुण्यको परिपाकपछिमात्रै पाएको हो । यो अत्यन्त दुर्लभ मानवशरीर हो । यो शरीर संसाररूपी समुद्रबाट पार तर्नका लागि अत्यन्त सुदृढ नौका हो । यस शरीरबाट भगवद्भक्ति र ब्रह्मज्ञान गरेर मानिस मुक्त हुन सक्तछ । भगवान्प्रतिको अनन्य भक्ति र शरणागतिले मानिसको शरीररूपी डुँगालाई भवसागरबाट पारि तार्न आफैँ माझी भएर म आउँछु भनेर भगवान्ले भन्नुभएको छ । भगवत्स्मरणरूपी अनुकूल हावा चलाएर मान्छेलाई भवसागर तर्न भगवान्ले सहयोग पुऱ्याउँछु भनेर पनि भन्नुभएको छ । यसरी सबै कुरा आफ्ना अनुकूल भएका बखतमा पनि मान्छेले आफ्नू उद्धार गर्न सकेन अर्थात् संसारसागरबाट पार पाउन सकेन भने त्यो आत्मघाती हो ।

यस संसारमा सामान्य मार्गदर्शन गरे तापनि कसैले पनि कसैको उद्धार गर्न भने सक्तैन । आफ्नू उद्धार आफैँले गर्नु पर्दछ । भगवान् नै छोरो, भाइ वा बाबु भएर आए पनि सोझै कसैलाई उद्धार गर्न सकेको देखिँदैन । भगवान् श्रीरामचन्द्रले आफ्ना पिता दशरथको उद्धार गर्न सक्नुभएको थिएन । त्यसैगरेर भगवान् श्रीकृष्णले आफ्ना बाबु वसुदेवको उद्धार गर्न सक्नु भएन । उद्धार

गर्न सकेको भए वसुदेवले देवर्षि नारदसँग उद्धारको उपाय सोध्नु पर्ने नै थिएन। जस्तै–

**ब्रह्मंस्तथापि पृच्छामो धर्मान् भागवतांस्तव।**
**याञ्छ्रुत्वा श्रद्धया मर्त्यो मुच्यते सर्वतोभयात्॥**
**यथा विचित्रव्यसनाद् भवद्भिर्विश्वतोभयात्।**
**मुच्येम ह्यञ्जसैवाद्धा तथा नः शाधि सुव्रत॥**

– *भागवत ११।२।७,९*

अर्थात् हे ब्रह्मन् ! यस संसारबाट तर्नका लागि तपाईंसँग भागवतधर्मका बारेमा जिज्ञासा राख्तछु। हे सुव्रत ! यस संसारमा दुःख पनि सुख जस्तो भएर आउँछ। यो संसार जन्म र मृत्युरूपी दुःखले पूर्ण छ। यस प्रकारको दुःखद संसारबाट म कसरी सजिलैसँग मुक्ति पाउँन सक्तछु ? मलाई यस बारेमा उपदेश गर्नुहोस्।

भगवान् कपिलले पनि आफ्नी आमा देवहूतिलाई आत्मोद्धारका उपायहरू बताउनु भएको थियो। तर पनि उहाँले आमालाई सोझै उद्धार गर्न भने सक्नुभएको थिएन। देवहूति आफ्नै साधनाले मुक्त भएर गएकी थिइन्। अजामिल पनि विष्णुका दूतहरूले यमराजका दूतहरूबाट छुटाएपछि आफैँले साधना गरेर मुक्त भएका थिए। मुचुकुन्द, युधिष्ठिर, अर्जुन, उद्धव आदि भगवान्का भक्त र सम्बन्धीहरूलाई पनि भगवान्ले आफू स्वधाम जाँदा सँगै लिएर जानुभएको थिएन। त्यतिमात्रै होइन, आफ्नै दाजु बलराम र पत्नीहरूसमेतलाई उहाँले साथमा लानुभएको थिएन। अतः आफ्नू उद्धार आफैँलै गर्नु बाहेक अरू कुनै उपाय नभएको स्पष्टै देखिन्छ। यही कुराको उपदेश बृहदारण्यकोपनिषद्मा मुमुक्षु आफ्नी पत्नी

मैत्रेयीलाई याज्ञवल्क्यले र राजा ऋषभदेवले अजनाभवर्षमा आफ्ना १०० भाइ छोराहरूलाई उपदेश गर्नुभएको थियो। यी सबै कुराहरूबाट शिक्षा लिएर मानिसले आफ्नू उद्धार आफैँले गर्नु पर्दछ। उपनिषद्को भनाइ पनि यही छ– **"नान्यःपन्था विद्यतेऽयनाय"** *(श्वेता.उ.६।१५)* अर्थात् ब्रह्मज्ञान र भगवान्को भक्ति बाहेक मुक्तिका लागि अरू कुनै बाटो छैन।

मानवजीवन पाउँन अत्यन्त मुश्किल हुने कुरा माथिका उदाहरणहरूबाट थाहा पाइन्छ । यस कुरालाई निम्न लिखित श्लोकले पनि पुष्टि गर्दछ। जस्तै–

**लब्ध्वा कथञ्चिन्नरजन्म दुर्लभं तत्रापि पुंस्त्वं श्रुतिपारदर्शनम्।**
**यस्त्वात्ममुक्तौ न यतेत मूढधीः स ह्यात्महा स्वं विनिहन्त्यसद्ग्रहात्॥**

अर्थात् अत्यन्त ठूला धर्मका प्रभावले मनुष्यको जीवन पाइन्छ। त्यसमा श्रुतिको अर्थ बुझ्ने पुरुषको शरीर पाएर पनि मूर्ख भएर जसले मुक्तिकालागि प्रयत्न गर्दैन भने त्यो आत्मघाती हो।

**एषा बुद्धिमतां बुद्धिर्मनीषा च मनीषिणाम्।**
**यत् सत्यमनृतेनेह मर्त्येनाप्नोति मामृतम्॥**

*– भागवत ११।२९।२२*

अर्थात् बाठा मान्छेको बठ्याइँ र बुद्धिमान्को बुद्धिमत्ता यसै कुराबाट सार्थक भएको देखिन्छ, जसले यस विनाश हुने शरीरको माध्यमबाट म अविनाशी ब्रह्मलाई प्राप्त गर्दछ।

**यावत्स्वस्थमिदं शरीरमरुजं यावज्जरादूरतो।**
**यावच्चेन्द्रियशक्तिरप्रतिहता यावत्क्षयो नायुषः॥**
**आत्मश्रेयसि तावदेव विदुषा कार्यः प्रयत्नो महान्।**
**सन्दीप्ते भवने तु कूपखननं प्रत्युद्यमः कीदृशः॥**

**जैलेसम्म रहन्छ शक्ति तनमा उत्साह राखी अति ।**
**सत्कैमा गरिहाल्नु पर्दछ छिटै सत्कार्य गर्ने जति ॥**
**बिस्तारै सकिएर शक्ति तनको उत्साह जाला जब ।**
**केही गर्न सकिन्न हुन्छ पछुतो बेकार होला सब ॥**

अर्थात् जबसम्म यो शरीर निरोगी रहन्छ, जबसम्म बुढ्याइँ आइसकेको हुँदैन, जबसम्म इन्द्रियहरूको शक्ति नाश भएको हुँदैन र आयु बाँकी नै रहेको हुन्छ, त्यसै बेलामा आफ्नू कल्याण हुने काम मान्छेले गरिहाल्नु पर्दछ । घरमा आगो लागिसकेपछि कुवा खनेर कुनै फाइदा हुँदैन । अस्तु । श्रीकृष्णार्पणमस्तु ।

# उपनिषद् र यसको महत्त्व

पाणिनीय व्याकरणको तिङन्तप्रकरण अन्तर्गत भ्वादिको विशरण गति र अवसादन अर्थ भएको उप र नि उपसर्गपूर्वक षद्लृ धातुबाट क्विप् प्रत्यय भएर उपनिषद् शब्द बन्दछ। यसको विशद व्याख्या आद्यजगद्गुरु श्रीशङ्कराचार्यले विभिन्न उपनिषद्हरूको भाष्यमा लेख्नुभएको छ। कठोपनिषद्को सम्बन्धभाष्यको शुरुमा नै उहाँले उपनिषद् शब्दको व्युत्पत्ति गर्नु भएको छ – **'सदेर्धातोर्विशरण–गत्यवसादनार्थस्योपनिपूर्वस्य क्विप्प्रत्ययान्तस्य रूपमुपनिषदिति।'** अर्थात् विशरण अथवा नाश, गति र अवसादन किंवा शिथिल पार्नु समेत तीन अर्थले युक्त उप र नि उपसर्ग अगाडि लागेको क्विप् प्रत्ययान्त सद् धातुबाट उपनिषद् रूप बन्दछ। **'उपनिषच्छब्देन च व्याचिख्यासित–ग्रन्थप्रतिपाद्यवेद्यवस्तुविषया विद्योच्यन्ते। केन पुनरर्थयोगेन उपनिषच्छब्देन विद्योच्यत इत्युच्यते।'** अर्थात् उपनिषद् शब्दले उसको प्रतिपाद्य र वेद्य ब्रह्मविषयक विद्याको प्रतिपादन गरिन्छ।

उपनिषद्हरू धेरै थरी छन्। तीमध्ये मुख्यरूपमा शास्त्रीयोपनिषद्, ब्रह्मोपनिषद्, विद्योपनिषद् आदि पर्न आउँछन्।

कुनचाँहि अर्थको योग हुँदा उपनिषद् शब्दले विद्यालाई बुझाउँछ, सो कुरा यहाँ बताइन्छ। **'ये मुमुक्षवो दृष्टानुश्रविकविषयतृष्णाः सन्त उपनिषच्छब्दवाच्यां वक्ष्यमाणलक्षणां विद्यामुपसद्योपगम्य तन्निष्ठतया निश्चयेन शीलयन्ति तेषामाविद्यादेः संसारबीजस्य विशरणाद्धिंसनाद् विनाशनादित्यनेनार्थयोगेन विद्या उपनिष–दित्युच्यते।'** अर्थात् जुन मोक्षकामी पुरुष लौकिक र पारलौकिक

विषयहरूबाट विरक्त भएर, उपनिषद् शब्दको वाच्य र अगाडि भनिने भएको लक्षणले युक्त भएको विद्याको समीपमा गएर अर्थात् उसलाई प्राप्त गरेर उसकै निष्ठाले निश्चयपूर्वक उसकै परिशीलन गर्दछ भने त्यसरी परिशीलन गर्ने पुरुषको संसारको निमित्त अर्थात् बीज भएका अविद्या आदि विशरण अर्थात् नाश हुन्छन्। अतः यसै अर्थको योग भएको कारण नै यस उपनिषद् शब्दलाई विद्या भनेर भनिएको हो।

मुण्डकोपनिषद्को सम्बन्धभाष्यमा श्रीशङ्करले उपनिषद् शब्दको निर्वचन गर्नुभएको छ। त्यसको केही अंश यहाँ उद्धृत गरिन्छ। **'य इमां ब्रह्मविद्यामुपायन्त्यात्मभावेन श्रद्धाभक्ति-पुरःसराः सन्तस्तेषां गर्भजन्मजरारोगाद्यनर्थपूगं निशातयति परं वा ब्रह्म गमयत्यविद्यादिसंसारकारणं चात्यन्तमवसादयति विनाश यतीत्युपनिषत्। उपनिपूर्वस्य सदेरेवमर्थस्मरणात्।'** अर्थात् जुन मान्छे श्रद्धाभक्तिपूर्वक आत्मभावले युक्त भएर ब्रह्मविद्याका नजिक जान्छ। गर्भ, जन्म, जरा र रोग आदि अनर्थसमूहहरू ब्रह्मविद्याद्वारा नाश भएर जान्छन्। विद्याद्वारा ब्रह्म प्राप्ति हुन्छ। अथवा यस उपनिषद् विद्याद्वारा संसारका कारणस्वरूप अविद्या आदिको अत्यन्त अवसादन किंवा विनाश हुन्छ। त्यसैकारणले नै यसलाई उपनिषद् भनिएको हो। किन भने, **'उप'** र **'नि'** पूर्वक सद् धातुको यही अर्थ मानिएको छ।

त्यसैगरी बृहदारण्यकोपनिषद्को सम्बन्धभाष्यमा पनि भाष्यकारले उपनिषद् शब्दको सङ्क्षिप्तरूपमा निर्वचन गर्नुभएको छ। **'सेयं ब्रह्मविद्या उपनिषच्छब्दवाच्या तत्पराणां सहेतोःसंसारस्यात्यन्तावसादनात्। उपनिपूर्वस्य सदेस्तदर्थ्यात्। तादर्थ्याद् ग्रन्थोऽप्युपनिषद् उच्यते।'** अर्थात् यस ब्रह्मविद्याले आफूमा लागेका पुरुषहरूको संसारलाई कारणसहित

अत्यन्त अवसाद अर्थात् उच्छेद गर्दछ। यसैकारण यसलाई उपनिषद् भनिन्छ। 'उप' र 'नि' उपसर्गपूर्वक सद्धातुको यही नै अर्थ हुन्छ। त्यस ब्रह्मविद्याको प्राप्तिरूप प्रयोजनयुक्त भएको हुँदा त्यस सम्बन्धी ग्रन्थलाई पनि उपनिषद् भनेर भनिएको हो।

तैत्तिरीयोपनिषद्मा **'उपनिषदिति विद्योच्यते, तच्छीलिनां गर्भजन्मजरादि निशातनात्तदवासनाद्वा ब्रह्मणोपनिगमयितृत्वा–दुपनिषण्णां वास्यां परं श्रेय इति। तदर्थत्वात् ग्रन्थोऽप्युपनिषत्'** अर्थात् उपनिषद् भनेर ब्रह्मविद्यालाई भनिन्छ। यसको सेवा गर्ने पुरुषका गर्भ, जन्म र बुढ्याइँ आदिको निशातन अर्थात् उच्छेद अथवा अवसादन अर्थात् नाश गर्ने भएको हुँदा नै यस शास्त्रलाई उपनिषद् भनिएको हो। यसले ब्रह्मका नजिक लैजान्छ भनेर पनि उपनिषद् भनिएको हो। त्यसै कुरालाई जनाउने भएकाले यस ग्रन्थलाई पनि उपनिषद् भनिएको हो।

यसैगरेर उपनिषद्का बारेमा ब्रह्मज्ञानी याज्ञवल्क्यले गर्नुभएको निर्वचनलाई यहाँ उद्धृत गरिन्छ। जस्तै –

**उपनीय तमात्मानं ब्रह्मापास्तद्वयं यतः।**
**निहन्त्यविद्या तज्जं च तस्मादुपनिषद्भवेत् ॥**

अर्थात् अविद्या र त्यसबाट निःसृत सम्पूर्ण द्वैत वस्तुलाई हटाएर आत्मालाई परब्रह्ममा समाहित गराउनु नै उपनिषद् हो।

**निहत्यानर्थमूलं स्वाविद्यां प्रत्यक्तया परम्।**
**नयत्यपास्त संभेदमतो वोपनिषद्भवेत् ॥**

अर्थात् आत्मामा अनर्थको मूल भएर रहेको भेदात्मक द्वैततत्त्वलाई हटाउने उपनिषद् हो।

**प्रवृत्तिहेतून्निःशेषांस्तन्मूलोच्छेदकत्वतः।**
**यतोऽवसादयेद्विद्यां तस्मादुपनिषद्भवेत् ॥**

अर्थात् संसारको प्रवृत्तिमा मूलकारण भएका सम्पूर्ण अविद्याकृत प्रपञ्चहरूलाई हटाएर विद्या अर्थात् ज्ञान प्राप्त गराउने नै उपनिषद् हो ।

उपनिषद् के हो भन्ने जिज्ञासामा **'सत्यस्यसत्यमिति'** *(बृ.उ.२।१।२०)* अर्थात् सत्यको पनि सत्य हो भनेर भनिएको छ ।

यसरी विचार गर्दा उपनिषद्को अर्थ अतद्वस्तुको व्यावृत्ति गरेर तद्वस्तुको प्राप्तिमा नै पर्यवसित हुने रहेछ । एतावता उपनिषद् शास्त्रको अध्ययनले पनि त्यही काम गर्ने नै हो । त्यति मात्रै नभएर उपनिषद् शास्त्रले त ब्रह्मप्राप्तिको प्रथम सोपान **'तत्त्वमसि'** उपदेश महावाक्यको श्रवणदेखि लिएर ब्रह्मप्राप्तिको **'अहं ब्रह्मास्मि'** अनुभवात्मक महावाक्यसम्म पुऱ्याएर ब्रह्मात्मैक्यबोध गराएर सधैँकालागि मोक्ष समेत गराउने भयो । यसरी सम्पूर्ण उपनिषद्हरूको तात्पर्य परमात्मा अर्थात् ब्रह्म र जीवको एकत्वमा नै छ । उपनिषद्को अन्तिम उद्देश्य पनि यही हो । उपनिषद्हरू सम्पूर्ण वेदहरूका अन्त्य किंवा शिरोभाग भएका हुँदा पनि यिनलाई वेदान्त भनिएको हो । यिनको उद्देश्य ब्रह्मको ज्ञान गराएर मुमुक्षुलाई जन्ममरणरूपी सांसारिक दुश्चक्रबाट छुटाएर सधैँकालागि मुक्त गराउनु नै हो ।

श्रीमद्भगवद्गीतामा पनि उपनिषद्लाई **'ब्रह्मसूत्रपदैः'** *(गीता १३।४)* भनेर भनिएको छ । यसको व्याख्या गर्दै स्वामी मधुसूदन सरस्वतीले **'ब्रह्मसूत्रपदैश्चैव ब्रह्मसूत्र्यते सूच्यते किञ्चिद्व्यवधानेन प्रतिपाद्यत एभिरिति ब्रह्मसूत्राणि । 'यतो वा इमानि भूतानि जायन्ते । येन जातानि जीवन्ति । यत्प्रयन्त्यभिसंविसन्ति' इत्यादीनि तटस्थलक्षणपराण्युपनिषद्वाक्यानि । तथा पद्यते ब्रह्मसाक्षात्प्रति-पाद्यत एभिरिति पदानि स्वरूपलक्षण सत्यं ज्ञानमनन्तं ब्रह्म'**

**इत्यादीनि तैर्ब्रह्मसूत्रैः पदैश्च ।'** अर्थात् जुन उपनिषद्का पदहरूले ब्रह्मलाई जनाउँदछन्, ती पदहरू हुन् । जसबाट यी सम्पूर्ण भूतप्राणीहरू जन्मन्छन्, जन्मेपछि पनि जसबाट बाँच्तछन् र अन्त्यमा उसमा नै यी सबै गएर मिल्दछन् भन्ने उपनिषद्को यो तटस्थ लक्षण र सत्य, ज्ञान र अनन्त भन्ने ब्रह्मको स्वरूपलक्षण बताएर जीवात्मालाई ब्रह्मप्राप्ति गराउनु नै उपनिषद्को उद्देश्य रहेको देखिन्छ, भनेर भन्नु भएको छ ।

वर्तमान समयमा प्राप्त ११२ उपनिषद्हरूमध्ये ईशादि ११ उपनिषद्हरू प्रसिद्ध छन् । तिनै ११ उपनिषद्हरूमा मात्रै आद्य जगद्गुरु श्रीशङ्कराचार्यले भाष्य लेख्नुभएको छ । ती उपनिषद्हरू हुन् – ईशावास्य, केन, कठ, प्रश्न, मुण्डक, माण्डूक्य, तैत्तिरीय, ऐतरेय, छान्दोग्य, बृहदारण्यक र श्वेताश्वतर ।

विषयका दृष्टिले वेदका ३ भाग छन् । ती हुन् – कर्मकाण्ड, उपासनाकाण्ड र ज्ञानकाण्ड । विश्वको मूलतत्त्वको विचार ज्ञानकाण्डमा गरिएको छ । कर्म र उपासना यसका साधनमात्र हुन् । वेदको ज्ञानकाण्डलाई नै उपनिषद् भनिन्छ । उपनिषद्को निर्वचन किंवा व्युत्पत्ति माथि नै गरिसकियो । यसैलाई वेदान्त अथवा आम्नायमस्तक पनि भनिन्छ । ब्रह्मविद्याका आदिस्रोत उपनिषद्हरू नै हुन् ।

ब्रह्मविद्या अथवा उपनिषद्को महिमाको ज्ञान सनातन वैदिक धर्मका अनुयायीहरूमामात्रै नभएर अन्य धर्मका अनुयायीहरूमा पनि प्राचीनकालदेखि नै रहँदै आएको देखिन्छ । यसका अनुसन्धाता र उपासकहरूमा धेरै पश्चिमी संसारका क्रिश्चियनधर्मावलम्बी विद्वान्हरू पनि देखिन्छन् । खास गरेर म्याक्समूलर, शोपेनहावर, गोल्डस्टकर, रोनाल्ड, निक्सन, विल्सन आदि विद्वान्हरू प्रसिद्ध

छन् । यीमध्ये जर्मनविद्वान् शोपेनहावर त उपनिषद् पढेर अत्यन्त गद्गद भएका थिए । उनले उपनिषद्लाई जर्मनभाषामा अनुवाद गरेर प्रचार गरेका थिए । उनले उपनिषद्को मुक्तकण्ठले प्रशंसा गरेका थिए । उपनिषद्हरूको अध्ययनको तुलनामा अरू कुनै पनि अध्ययन अधिक उपायदेय र उदात्त हुन सक्तैन भन्दै उपनिषद् मेरो जीवनको सम्बल अर्थात् आधार हो र साथै मृत्युपछि सम्बल वा बाटोखर्च हो भन्ने भाव व्यक्तगरेका थिए । उनले उपनिषद्का बारेमा लेखेका थिए । जस्तै – "It has been the solace of my life and it will be solace of my death"

वेदान्त र उपनिषद् शास्त्रका प्रेमीहरूमा इस्लाम धर्ममान्नेहरूमा मंसूर, सर्मद, फैजी, बुल्लाशाह, दाराशिकोह आदि देखिन्छन् । अनाम अरू पनि धेरै विदेशीहरू उपनिषद्सिद्धान्त अर्थात् अद्वैतवेदान्तका अनुयायी भएको पाइन्छ । आजको विश्वमा अद्वैतवेदान्तका प्रेमीहरू सर्वत्र देखिन्छन् । यसमा उपनिषद्को नै वर्चस्व निर्विवाद छ । जवानीका बेलामा यस अद्वैतवेदान्तको महत्त्व प्रायः मान्छेले बुझ्दैनन् । तर जीवनका अन्तिम समयमा योभन्दा अरू कुनै शास्त्रले पनि मान्छेलाई आत्मिक शान्ति एवं सन्तुष्टि प्रदान गर्न सक्तैन । यसैभएर पनि यो शास्त्र सबैको प्रिय हुँदै गएको हुनसक्तछ ।

उपनिषद्मा ब्रह्मलाई औपनिषद पुरुष भनेर उल्लेख गरिएको छ । उपनिषद् र ब्रह्मलाई समान अधिकरण अर्थात् उपनिषद् शास्त्रलाई ब्रह्मको पर्यायवाची शब्दका रूपमा लिइएको छ । यसको कारण उपनिषद्हरूले नै ब्रह्म बुझाउने हुँदा उपनिषद्लाई पनि ब्रह्मकै रूपमा व्यवहार गरिएको देखिन्छ । वास्तवमा उपनिषद्हरू ब्रह्मलाई

बुझाउने साधन हुन् । बृहदारण्यकोपनिषद्को ज्ञानवल्क्य र शाकल्यका बीचमा भएको संवादमा याज्ञवल्क्यले शाकल्यलाई **'औपनिषदं पुरुषं पृच्छामि'** *(बृ.उ.३/९/२६)* भनेका थिए । यहाँ औपनिषदं पुरुषम् भन्नाले ब्रह्म नै बुझिन्छ ।

कहीं कहीं साधनलाई पनि साध्यकै रूपमा लिने गरेको पाइन्छ । श्रीमद्भगवद्गीताको १३ औं अध्यायको ७ औं श्लोकमा व्यक्त **'अमानित्वम्'**देखि लिएर ११ औं श्लोक **'एतज्ज्ञानम्'**सम्म दर्शाइएका ज्ञानका साधनहरूलाई पनि ज्ञान भनेर भनिएको छ। आद्यजगद्गुरु श्रीशङ्कराचार्यले यसैलाई आफ्नू भाष्यमा यसरी लेख्नु भएको छ – **'एतद् अमानित्वादितत्त्वज्ञानार्थदर्शनान्तमुक्तं ज्ञानमिति प्रोक्तं ज्ञानार्थत्वात् ।'** अर्थात् अमानित्वदेखि लिएर तत्त्वज्ञानको आलोचनासम्ममा ज्ञानका साधनहरूलाई पनि ज्ञान नै भनेर भनिएको छ। यही कुरा **'औपनिषदं पुरुषम्'**मा पनि लागू हुन्छ। उपनिषद्को स्वार्थ भनेको ब्रह्मात्मैकत्व प्रतिपत्ति अर्थात् ब्रह्मज्ञान गराउनु हो। उपनिषद्को मुख्य काम भनेको ब्रह्मज्ञानरूप प्रमा अर्थात् यथार्थज्ञान उत्पन्न गराउनु नै हो। शोकमोहादिको निवृत्ति नै ब्रह्मैकत्वज्ञानको परम्पराबाट प्रत्यक्षरूपमा प्राप्त हुने फल हो। उपनिषद् सुनेर भएको ज्ञान साधारण ज्ञान हो। त्यसपछि मनन र निदिध्यासन गर्नु पर्दछ। उपनिषद् सुनेर मात्रै मोक्ष हुँदैन। ब्रह्मात्मैकत्वप्रतिपत्ति उपनिषद् सुन्ने बित्तिकै असंस्कृत मन भएकाले गर्न सक्तैन। यस कुरामा भामतीकार वाचस्पति मिश्र पनि सहमत छन्। श्रवण, मनन र निदिध्यासन पछि शोकमोह आदि हट्तछन्। त्यसपछि मात्रै ब्रह्मैकत्वज्ञान हुने सम्भावना रहन्छ। अथवा श्रवण, मनन र निदिध्यासन पछि ब्रह्मात्मैकत्वज्ञान हुन्छ र त्यसपछि मात्रै शोकमोहादि हट्न सक्तछन्। श्रीमद्भगवद्गीतामा

अर्जुनले **'नष्टो मोहःस्मृतिर्लब्धा त्वत्प्रसादान्मयाऽच्युत। स्थितोऽस्मिगतसन्देहः करिष्ये वचनं तव"** भनेर भगवान् कृष्णलाई भनेका थिए। त्यसै गरेर श्रीमद्भागवतमा राजा परीक्षित्ले पनि श्रवण, मन र निदिध्यासन पछि नै **'सिद्धोऽस्म्यनुगृहीतोऽस्मि भवता करुणात्मना। श्रावितो यच्च मे साक्षादनादिनिधनो हरिः॥ अज्ञानं च निरस्तं मे ज्ञानविज्ञाननिष्ठया। भवता दर्शितं क्षेमं परं भगवतः पदम्॥'** भनेर श्रीशुकदेव मुनिलाई भनेका थिए। श्रीमद्भागवत भनेको पनि वेद र उपनिषद्कै सार भएको कुरा भागवतको माहात्म्यमा उल्लेख भएको छ – **'वेदोपनिषदां साराज्जाता भागवती कथा।'** अर्थात् वेद र उपनिषद्हरूको सारबाट जन्मेको भागवतको कथा हो।

उपनिषद्शास्त्रको ज्ञान हुन पनि विषयप्रतिको आसक्ति हटेर वैराग्यको भावना सुदृढ हुँदै जानुपर्छ। अन्यथा उपनिषद् अर्थात् वेदान्त बुझिँदैन भन्ने वेदान्तका विद्वान्हरूको भनाइ छ। उपनिषद्को व्याख्या गर्दै भाष्यमा श्रीशङ्कराचार्यले लेख्नुभएको छ। **'कासावुपनिषदित्याह सत्यस्य सत्यमिति। सा हि सर्वत्र चोपनिषदलौकिकार्थत्वाद् दुर्विज्ञेयार्था इति तदर्थमाचष्टे प्राणा वै सत्यं तेषामेष सत्यमिति।'** अर्थात् उपनिषद् के हो ? भन्ने सम्बन्धमा श्रुति भन्दछ, सत्यको पनि सत्य बताउनु नै यसको विशेषता हो। अलौकिक अर्थलाई भन्ने भएको हुँदा यस उपनिषद्को अर्थ सर्वत्र अत्यन्त दुर्विज्ञेय छ। त्यसैकारण श्रुतिले यो कुरा बुझाउन क्रमैसँग प्राण नै सत्य हो, आत्मा नै सत्य हो भनेको हो। प्राण सत्य, पञ्चभूत सत्य, इन्द्रिय सत्य भन्दै बीचमा रहेका सबैलाई सत्य भन्दै लगेर अन्त्यमा सबैको अधिष्ठान परम सत्य

ब्रह्मको उपदेश गर्नु नै उपनिषद्को अन्तिम लक्ष्य हो। भागवतलाई पनि उपनिषद्को त्यही परं सत्यले शुरुमा र अन्त्यमा समेत दुई पटक गरेर पुटित गरेको छ। जस्तै –

**धाम्ना स्वेन सदा निरस्तकुहकं सत्यं परं धीमहि।**

*– भागवत १।१।२*

अन्त्यमा गएर पनि त्यही परं सत्य आएको छ। जस्तै –

**तच्छुद्धं विमलं विशोकममृतं सत्यं परं धीमहि।**

*– भागवत ११।१३।१२*

त्यही परं सत्यको वर्णन गर्नु नै उपनिषद्को परं लक्ष्य हो। ब्रह्मको व्याख्या गर्ने शास्त्र भएको हुँदा नै उपनिषद्लाई पनि ब्रह्म भनिएको हो। अस्तु। श्रीकृष्णार्पणमस्तु।

# एषणा

एषणा शब्द एष् धातुबाट ल्युट् र णा प्रत्यय भएर बनेको हो । यसले कामना, इच्छा, खोज आदिलाई बुझाउँछ । अद्वैतवेदान्तमा एषणा भनेर पुत्रैषणा, वित्तैषणा र लोकैषणा गरेर तीनथरी एषणाहरूलाई बुझाउँछ । जबसम्म यी एषणाहरूलाई कुनै पनि मुमुक्षुले पूर्णरूपमा छोड्न सक्तैन तबसम्म उसलाई ज्ञान प्राप्त हुन सक्तैन । यी तीनथरी एषणाहरूले नै मानिसहरूलाई जन्ममृत्युको अन्तहीन चक्रमा घुमाइरहन्छन् । एषणाहरूका परिपूर्तिका लागि नै मान्छेले जीवनभरि नै सङ्घर्ष र नानाथरीका कुकर्महरू गरिरहन्छ । तर उसका कामना वा एषणाहरू कहिल्यै पनि पूरा हुँदैनन् । यसैकारणले नै अद्वैतवेदान्तमा प्रवेश गर्न चाहने जिज्ञासु मुमुक्षुहरूका लागि साधनचतुष्टयसम्पन्न हुनुपर्ने पूर्वशर्त आद्यजगद्गुरु श्रीशङ्कराचार्यले राख्नुभएको छ । ती साधनहरूमा शब्दान्तरले एषणाहरूको त्याग पनि पर्दछ । सोही कुरा तत्त्वबोधमा उल्लेख भएको पाइन्छ । जस्तै– **'इहामुत्रार्थभोगविरागः ।'** यस लोकको र परलोकको समेत फलको इच्छा वा एषणाबाट विरक्त हुनुपर्दछ । ब्रह्मज्ञानको सबभन्दा ठूलो बाधक एषणा नै हो ।

नचिकेतालाई यमराजले नानाथरीका प्रलोभनहरू देखाएर सबैथरीका एषणाहरू पूरा गरिदिने लोभ देखाउनुभएको थियो । तर ती प्रलोभन र एषणाहरूबाट माथि उठेर नचिकेताले अमृतत्वको इच्छा व्यक्त गरेका थिए । अर्थात् उनले ब्रह्मज्ञान प्राप्त गर्ने जिज्ञासा व्यक्त गरेका थिए । उनले सबै एषणाहरूलाई तिलाञ्जलि

दिएर ब्रह्मज्ञान गर्न चाहेका थिए । जबसम्म एषणा रहन्छ तबसम्म ब्रह्मजिज्ञासा हुनै सक्तैन । एषणा वा कामना अज्ञान हो । अज्ञान भनेको अविद्या हो । अविद्या भनेको अन्धकार हो । अज्ञान भनेको असत्य हो र भ्रम हो । ज्ञान भनेको एषणारहित अवस्था हो, अपरिग्रह हो । ज्ञान भनेको प्रकाश हो, चिन्मयस्वरूप हो । जहाँ प्रकाश रहन्छ, त्यहाँ अन्धकार रहन नै सक्तैन । जहाँ सूर्यको प्रकाश रहन्छ, त्यहाँ रातको अन्धकार रहन सक्तैन । त्यसकारण एषणा र ब्रह्मज्ञानको समानाधिकरण हुन सक्तैन । जबसम्म अन्तस्करणमा एषणाको मल रहन्छ, तबसम्म ब्रह्मज्ञान त के कुरा ब्रह्मको जिज्ञासासम्म पनि हुन सक्तैन । एषणा भन्नाले इच्छित वस्तुहरू सबै प्राप्त हुनुपर्छ भन्ने छैन । तर केवल एषणा वा कामनाको जालो अन्तस्करणभित्र पालेर बस्नु पनि एषणा नै हो । एषणाको परिपूर्तिभन्दा पनि अपरिपूर्ति झन् खराब हो । एषणाको परिपूर्तिले एक सीमाबाट अर्को सीमातर्फ अगाडि बढाउँछ भने अपरिपूर्तिले पतनतर्फ बढाउँदै मान्छेलाई झन् हिंस्रक र क्रूर बनाउन सक्तछ । त्यसकारण एषणाको परिपूर्ति र अपरिपूर्ति दुवै नै ब्रह्मज्ञानका लागि बाधक नै हुन् भन्ने ठान्नु पर्दछ । अतः ब्रह्मज्ञानतर्फ उन्मुख जिज्ञासुले सबै प्रकारका एषणाहरूलाई तुरुन्त नै त्याग गरिहाल्नु पर्दछ ।

मान्छे एषणाहरूबाट कहिल्यै पनि तृप्त हुँदैन । यो कुराको परिपुष्टि म केही उदाहरणहरूबाट गर्न चाहन्छु । यो कुरा श्रीमद्भागवत महापुराणमा वर्णित राजा ययातिको उदाहरणबाट बुझ्न सजिलो हुने छ । ययातिका दुइटी रानीहरू र अरू थुप्रै रखौटीहरू पनि थिए । उनी अत्यन्त स्त्रीलम्पट र कामुक व्यक्ति

थिए । आफ्नै ससुरा शुक्राचार्यबाट बूढो हुने श्राप पाएपछि उनले आफ्ना युवा पुत्रबाट जवानी लिएर धेरैवर्षसम्म आफ्नू एषणा वा कामना पूरा गर्ने दुष्प्रयास गरेका थिए । तर जति गरे पनि उनको कामना परिपूर्ति नभएपछि उनले त्यसबाट विरक्त भएर राजपाठसमेत छोडेर संन्यास लिएका थिए । त्यसैगरेर भागवतमा एक कदर्य ब्राह्मणको कथा आउँछ । उनको धनको अत्यन्त एषणाबाट आफ्ना स्वजनहरू सबै उनका विपरीत भएका थिए । अन्त्यमा उनी पनि एषणाबाट विरक्त भएर आत्माराम भिक्षु बनेका थिए ।

एषणाको अतिबाट भएको परिणामका सम्बन्धमा पश्चिमी साहित्यका प्रसिद्ध राजा मिदासको उदाहरण पनि दिन सकिन्छ । धनको अत्यन्त एषणाले अन्त्यमा आफ्नू खाना र एकमात्र छोरीबाट पनि उनले वञ्चित हुनुपरेको थियो । त्यो एषणाको परिणति थियो । अर्कातर्फ ग्रीसका तत्कालीन राजा सिकन्दरको विश्वको चक्रवर्ती सम्राट् हुने एषणाको कारण उनले युवावस्थामा नै संसारबाट सधैंका लागि बिदा हुनुपरेको थियो । सिकन्दरका गुरु डायोनेसिसले सिकन्दरलाई विश्वसम्राट् बन्ने महत्त्वाकाङ्क्षा अर्थात् एषणाबाट टाढा रहन अर्थात् विश्वविजयको अभियान छोड्न भनेका थिए । किनभने विश्वविजय गरे पनि विश्वविजयी अन्त्यमा रित्तै हुन्छ र उसले खाली हात नै संसारबाट जानुपर्दछ भन्ने गुरुको उपदेश नमानेर सिकन्दर आफ्नू एषणा पूरा गर्न विश्वविजयको अभियानमा निस्किएका थिए । अन्ततोगत्वा सिकन्दरका गुरुको भनाइ सत्य सावित भयो । सिकन्दरले आफ्नू मृत्युका अन्तिम घडीमा आफ्ना गुरुको वचनलाई सम्झिएर रोएका थिए । आफ्ना मृतशरीरका खाली हातहरू कात्रोबाट

सबैले देख्नेगरी बाहिर निकालेर विश्वसम्राट् सिकन्दर आखिरी केही पनि साथमा नलिएर खालि हात गयो भनेर देखाइदिनु भन्ने उनको अन्तिम इच्छा थियो ।

यी माथिका उदाहरणहरूबाट एषणाहरूले मानिसलाई दुःखमात्रै दिन्छन् र सुख दिँदैनन् भन्ने थाहा हुन्छ । एषणाले केवल दुःख दिनेमात्र होइन यसबाट मानिसको पतन पनि हुन्छ । एषणाको अर्को नाम परिग्रह पनि हो । ज्यादा परिग्रह आफैँमा हिंसा हो । ज्यादा परिग्रह गर्ने मान्छे चोर हो र त्यसले दण्ड पाउनु पर्छ भनेर नीतिशास्त्रहरूमा पनि उल्लेख भएको पाइन्छ । यही कुरा श्रीमद्भागवत महापुराणको सप्तमस्कन्धको चौधौँ अध्यायको आठौँ श्लोकमा देवर्षि नारदले राजा युधिष्ठिरलाई उपदेश गर्ने क्रममा बताउनु भएको छ । जस्तै–

**यावद्भ्रियेत जठरं तावत्स्वत्वं हि देहिनाम् ।**
**अधिकं योऽभिमन्येत स स्तेनो दण्डमर्हति ॥**

अझ ब्रह्मज्ञानका जिज्ञासुहरूका लागि त एषणा ठूलो बाधा नै हो भन्न सकिन्छ । एषणारहित जीवन नै सबभन्दा सार्थक जीवन मान्न सकिन्छ । अर्को शब्दमा भन्ने हो भने जिज्ञासुका लागि त एषणा अभिशाप बन्दछ र एषणाराहित्य वरदान साबित हुन्छ । ब्रह्मज्ञानी ब्राह्मण जडभरतमा कुनै प्रकारका एषणाहरू थिएनन् । त्यसैकारण त उनलाई सुख, दुःख, जीवन र मृत्यु बराबर थिए । उनमा एषणा नभएको हुँदा देहाभिमान पनि थिएन, इच्छा र आकाङ्क्षाहरू पनि थिएनन् । एषणा नै संसृति र दुःखको परम कारण हुन्छ भन्ने कुरा यसबाट बुझ्न सकिन्छ । राजा रहूगणलाई उपदेश दिने क्रममा जडभरतले यही कुरा भन्नुभएको छ । जस्तै–

**अहं पुरा भरतो नाम राजा विमुक्तदृष्टश्रुतसङ्गबन्धः ।**
**आराधनं भगवत ईहमानो मृगोऽभवं मृगसङ्गाद्धतार्थः ।**
**अथो अहं जनसङ्गादसङ्गो विशङ्कमानोऽविवृतश्चरामि ॥**

*- भागवत ५।१२।१४-१५*

अर्थात् पूर्वजन्ममा म भरत नाम गरेको चक्रवर्ती राजा थिएँ । विरक्त भएर म भगवान्को आराधनामा लागेको थिएँ । तर मेरो एउटा मृगसँगको आसक्तिको कारण मैले मृग भएर जन्मनु परेको थियो । त्यसैकारण अहिले म जनसंसर्गबाट टाढै रहेर गुप्तरूपमा हिँड्ने गर्दछु ।

यसरी एषणाको विद्यमानताले मानिसलाई कुनै पनि अवस्थामा श्रेयोमार्गमा प्रवृत्त हुन दिँदैन । एषणाको शून्यता नै मानिसको अझ खास गरेर मुमुक्षुका लागि श्रेयस्कर हुन्छ । मुमुक्षुले एषणा सर्वांशमा त्याग गर्नु पर्दछ । त्यसैकारण प्रह्लादले भगवान्सँग मनमा एषणाको उत्पत्तिसम्म पनि नहोओस् भनेर वर मागेका थिए । यो नै एक सच्चा जिज्ञासुले भगवान्सँग माग्ने वरदान हो । जस्तै-

**यदि रासीश मे कामान् वरांस्त्वं वरदर्षभ ।**
**कामानां हृद्यसंरोहं भवतस्तु वृणे वरम् ॥**

*- भागवत ७।१०। ७*

अर्थात् हे वरदाता भगवन् ! यदि हजूर मैले मागेअनुसारको वर दिन चाहनुहुन्छ भने मलाई यस्तो वर दिनुहोस् जुन वरबाट मेरा हृदयमा कहिल्यै कामना अर्थात् एषणाको बीज उम्रनै नपाओस् ।

वास्तवमा एषणा वा कामना नै संसारको बीज हो । एषणाबाट निर्मुक्त भएपछि फेरि संसृतिको झन्झटमा जीवले पर्नु पर्दैन । एषणालाई पुत्रैषणा, वित्तैषणा र लोकैषणा भनेर तीनथरी

एषणाहरूमा बाँडिएको छ । वास्तवमा एषणाहरू अनन्त हुनसक्तछन् । एउटै एषणाबाट अरू थरीथरीका एषणाहरूको जन्म हुन्छ । एषणाको मूलरूप भने एउटा नै हो । अरू त केवल विशेषणहरूमात्रै हुन् । सानू कामनाको बीजले थुप्रै एषणाहरूलाई जन्माउँन सक्तछ । एउटा सानू आगाको झिल्काले सम्पूर्ण वन नै डढाउन सक्तछ । एउटा सानू बीजले विशाल वटवृक्षको सृजना गर्न सक्तछ । त्यस्तै अन्तस्करणमा उम्रिएको सानू एषणाको बीजले मान्छेलाई संसारमा घुमाइरहन सक्तछ ।

यसरी एषणाको विवेचना गर्दा एषणाको त्याग कसरी गर्न सकिन्छ भन्ने कुराको जिज्ञासा हुन सक्तछ । यस सन्दर्भमा एकथरीको भनाइमा सर्वप्रथम एषणाको त्याग गर्नु पर्दछ । त्यसपछिमात्रै आत्मबोध अर्थात् ब्रह्मज्ञान हुन्छ भन्ने छ । अर्काथरीको भनाइमा प्रत्यगात्मा नै ब्रह्म हो भन्ने बुझेपछिमात्रै एषणाको त्याग हुन्छ भन्ने पनि देखिन्छ । ज्ञानप्राप्तिका लागि संसार वा एषणा वा कामनाबाट वैराग्य उत्पन्न हुनुपर्दछ । त्यसबाट नै कामनाहरू स्वतः निर्मूल भएर जान्छन् । त्यसपछिमात्रै ब्रह्मज्ञान हुन सक्तछ भन्ने अर्काथरीको भनाइ भएको पाइन्छ । तर अन्तस्करण एषणामुक्त नभएसम्म स्वच्छ हुँदैन र अन्तस्करण स्वच्छ नभएसम्म ज्ञान हुन नसक्ने कुरा घाम जत्तिकै छर्लङ्ग भएको हुँदा मुमुक्षुका लागि सर्वप्रथम विरक्ति, त्यसपछि एषणा निर्मुक्ति र अनि त्यसपछिमात्र ज्ञान हुने कुरा बुझ्नु आवश्यक छ । एषणा रहुन्जेल ज्ञान कुनै पनि हालतमा हुन सक्तैन । किनभने एषणा मायिक, अविद्यात्मक र तमोमय हो । जबसम्म हृदयमा एषणारूपी अन्धकारको निवास हुन्छ तबसम्म ज्ञानरूपी प्रकाशको उदय हुन सक्तैन । अन्धकार र प्रकाश एककालावच्छेदेन एकै

ठाउँमा रहनै सक्तैनन्। एषणा भनेको अज्ञान हो र अज्ञान भनेको अन्धकार हो। ज्ञान भनेको प्रकाश हो। अज्ञान र ज्ञानको समानाधिकरण कुनै हालतमा पनि हुन सक्तैन। अज्ञान नहटीकन ज्ञान हुन सक्तैन। अतः मुमुक्षु जिज्ञासुहरूले ब्रह्मज्ञानका लागि सम्पूर्ण एषणाहरूको त्याग पूर्वशर्तका रूपमा लिनु पर्दछ। श्रुतिले पनि भनेको छ– **'किं प्रजया करिष्यामो येषां नाऽयमात्मायं लोकः।'** *(बृ.उ. ४।४।२२)* अर्थात् हामीहरूले यी एषणाहरूलाई लिएर के हुन्छ, हामीहरूलाई त ब्रह्मप्राप्ति हुनुपर्दछ।

यसरी सङ्क्षिप्तरूपमा एषणाहरूको विवेचना गर्दा मुक्त हुन चाहने मुमुक्षुहरूका लागि एषणा सर्वथा त्याज्य देखिन्छ। पूर्वजन्मदेखि सञ्चित भएर रहेका कर्महरू एकातर्फ अन्तस्करणमा थुप्रिएर बसेका छन् भने अर्कातर्फ यस जन्ममा कर्मगरेर सङ्ग्रह गरेका थुप्रै कर्महरू छन्। एषणाहरूको जालोमा सामान्य गृहस्थदेखि लिएर महात्मा संन्यासीहरूसमेत जेलिएर यस संसारको दुश्चक्रमा घुमिरहेका देखिन्छन्। यस दुश्चक्रबाट पार हुनका लागि सामान्य मुमुक्षुदेखि लिएर उपदेष्टा गुरु र महात्माहरूसमेत मुक्त हुनुपर्ने देखिन्छ। यस सम्बन्धमा श्रुतिले पनि भनेको छ। जस्तै– **'न कर्मणा न प्रजया धनेन त्यागेनैकेन अमृतत्वमानशुः'** *(कैवल्य १।२)*। अर्थात् कर्मले र धनले होइन, त्यागले नै मोक्ष प्राप्त हुन्छ। **'यदासर्वे प्रमुच्यन्ते कामा येऽस्य हृदि श्रिताः। अथ मर्त्योऽमृतो भवत्यत्र ब्रह्म समश्नुते'** *(क.उ. २।३।१४)* अर्थात् हृदयमा आश्रित भएर बसेका सम्पूर्ण कामना अर्थात् एषणाहरू जुन समयमा समाप्त हुन्छन्, त्यसै समयमा नै त्यो मरणधर्मा मान्छे अमर हुन्छ। यसै शरीरबाट नै ऊ ब्रह्मभावमा प्राप्त हुन्छ।

एषणाहरूको परित्यागका बारेमा बृहदारण्यकोपनिषद्ले अझ स्पष्टरूपमा नै भनेको छ। जस्तै – **'तमेतं वेदानुवचनेन ब्राह्मणा विविदिषन्ति यज्ञेन दानेन तपसानाशकेनैतमेव विदित्वा मुनिर्भवति एतमेव प्रव्राजिनो लोकमिच्छन्तः प्रव्रजन्ति। एतद्ध स्म वै तत्पूर्वे विद्वासः प्रजां न कामयन्ते किं प्रजया करिष्यामो येषां नोऽयमात्मायं लोक इति ते ह स्म पुत्रैषणायाश्च वित्तैषणायाश्च लोकैषणायाश्च व्युत्थाय भिक्षाचर्यं चरन्ति या ह्येष पुत्रैषणा सा वित्तैषणा या वित्तैषणा सा लोकैषणोभे ह्येते एषणे एव भवतः।'** *(बृ.उ.४।४।२२)* अर्थात् त्यस आत्मालाई ब्राह्मणहरू वेदको स्वाध्याय, यज्ञ, दान र निष्काम तपको माध्यमबाट जान्ने इच्छा गर्दछन्। यसलाई जानेर नै उनीहरू मुनि बन्दछन्। यसै आत्मलोकको इच्छा गरेर त्यागी पुरुषहरू सम्पूर्ण कुराहरूको त्याग गरेर संन्यासी हुन्छन्। पहिलेका विद्वान्हरू सन्तानको इच्छा गर्दैनथे। सन्तानबाट केही पनि प्राप्त हुँदैन भन्ने उनीहरू सम्झन्थे। उनीहरू पुत्रैषणा, वित्तैषणा र लोकैषणाबाट माथि उठेर भिक्षाचर्या गर्दथे। जुन पुत्रैषणा हो त्यो नै वित्तैषणा हो। जुन वित्तैषणा हो त्यही नै लोकैषणा हो। यी सबै एषणाहरूको त्याग गरेपछि मात्रै ब्रह्म ज्ञान हुनसक्तछ। एषणाहरूको परित्याग नगरेसम्म कुनै हालतमा पनि ब्रह्मज्ञान हुनै सक्तैन।

अन्त्यमा सारांशमा एषणाले मान्छेलाई अधोगतितर्फ लैजान्छ भने एषणानिर्मुक्त जीवनले माथितिर लैजान्छ। अतः संन्यासी, महात्मा, साधु पुरुषहरू र जिज्ञासु गृहस्थहरूले पनि सम्पूर्ण एषणाहरूको त्याग गरेर ब्रह्मचिन्तनतर्फ नै लाग्नु पर्दछ। यसैमा नै हामी सबैको कल्याण छ। अस्तु। श्रीकृष्णार्पणमस्तु।

# ऋते ज्ञानान्नमुक्तिः

शास्त्रहरूमा **'ईश्वरानुग्रहादेव पुंसामद्वैतवासना'** अर्थात् ईश्वरको अनुग्रहबाट नै मनुष्यलाई ब्रह्मज्ञान हुन्छ भनेर भनिएको छ। **ज्ञा अवबोधने** धातुबाट ल्युट् प्रत्यय भएर ज्ञान शब्द बन्दछ। यस शब्दले जान्नु, सिक्नु, परिचित हुनु आदि अर्थहरू बुझाउँछ। ज्ञानशब्दले सामान्य घटपटादिदेखि लिएर ब्रह्मसम्मलाई बुझाउँछ। आजको यस प्रसङ्गमा घटपट बुझाउने ज्ञानको कुरातिर नलागेर ब्रह्म बुझाउने ज्ञानतर्फ नै कलम चलाइनेछ। केही पनि नमिसिएको शुद्ध ज्ञानलाई स्वयं प्रकाश ब्रह्म नै मानिएको छ। ज्ञान शब्द ब्रह्मको स्वरूपलक्षणभित्र पर्दछ। श्रुतिमा **'सत्यं ज्ञानमनन्तं ब्रह्म'** *(तै.उ.)* भनेर ज्ञान शब्दलाई पनि ब्रह्मको पर्यायवाची शब्दका रूपमा लिएको देखिन्छ। ज्ञानशब्द ब्रह्मबोधक शब्द भएको हुँदा पनि ज्ञानविना मुक्ति हुन सक्तैन। यसैकारण **'ऋते ज्ञानान्नमुक्तिः'** भनेर श्रुतिले पनि गर्जना गरेको हो।

ज्ञानविना मुक्ति नहुने कुरामा वेददेखि लिएर **उपनिषद्, महाभारत, रामायण, पुराण** र अरू **शास्त्रहरू** पनि एकमत छन्। श्रुतिले धेरै ठाउँमा यसको उद्घोष गरेको छ। जस्तै **'ज्ञानादेव तु कैवल्यम्'** अर्थात् ज्ञानबाट नै कैवल्य प्राप्ति हुन्छ। **'प्रज्ञानं ब्रह्म'** *(ऐ.उ. ३।३)* ज्ञान नै ब्रह्म हो इत्यादि। त्यसै गरेर श्रीमद्भगवद्गीतामा भगवान्ले ज्ञानको सर्वोपरि स्थान रहेको कुरा उपदेश गर्नु भएको छ। जस्तै –

**अपि चेदसि पापेभ्यः सर्वेभ्यः पापकृत्तमः।**
**सर्वं ज्ञानप्लवेनैव वृजिनं संतरिष्यसि॥**

*– गीता ४।३६*

अर्थात् हे अर्जुन ! तिमी सबै पापीहरूभन्दा ठूला पापी भए पनि अर्थात् युद्धमा धेरै मानिसहरू मार्ने पाप भविष्यमा गर्ने भए तापनि ज्ञानरूपी डुँगामा चढेर तिमी पार हुनेछौ ।

**यथैधांसि समिद्धोऽग्निर्भस्मसात्कुरुतेऽर्जुन ।**
**ज्ञानाग्निः सर्वकर्माणि भस्मसात्कुरुते तथा ॥**

– *गीता ४।३७*

अर्थात् हे अर्जुन ! जसरी दनदनी बलेको आगोले दाउरालाई खरानी पारेर समाप्त गर्दछ । त्यसैगरेर ज्ञानरूपी अग्निले सम्पूर्ण सञ्चित कर्महरूलाई भस्म गराउँछ ।

**न हि ज्ञानेन सदृशं पवित्रमिह विद्यते ।**
**तत्स्वयं योगसंसिद्धः कालेनात्मनि विन्दति ॥**

– *गीता ४।३८*

अर्थात् हे अर्जुन ! यस संसारमा ज्ञानबराबरको पवित्र अरू कुनै पनि वस्तु छैन । त्यसप्रकारको ज्ञानलाई धेरै कालपछि शुद्ध अन्तःकरण भएका सिद्ध पुरुषहरूले आफ्नै अन्तःकरणमा अनुभव गर्दछन् ।

उपर्युक्त अनुसार मुमुक्षुले आफ्ना अन्तःकरणमा रहेको सम्पूर्ण अविद्या, काम, कर्म र फलसमेत डढाएर विशुद्ध अन्तःकरण बनाउँदछ । त्यस्ता मुमुक्षुलाई विद्वान्हरूले पण्डित भनेर भनेकाछन्, जस्तै–**'ज्ञानाग्निदग्धकर्माणं तमाहुः पण्डितं बुधाः'***(गीता ४।१९)*

भगवान्का ४ प्रकारका भक्तहरू आर्त, जिज्ञासु, अर्थार्थी र ज्ञानी हुन्छन् । ती भक्तहरूमध्येमा पनि ज्ञानीभक्तलाई गीताले सर्वश्रेष्ठ भक्त भनेर मानेको छ । जस्तै – **'तेषां ज्ञानी नित्ययुक्त एकभक्तिर्विशिष्यते । प्रियो हि ज्ञानिनोऽत्यर्थमहं स च मम प्रियः॥'** *(गीता ७।१६)* भक्तहरूमा पनि मलाई नै एकमात्र परम

आश्रय मानेर एकत्वभावले स्थित रहने ज्ञानीभक्त नै मेरो अत्यन्त प्रिय छ । किनभने ज्ञानीभक्तको म अत्यन्त प्रिय छु र मेरा पनि उनी अत्यन्त प्रिय छन् ।

त्यतिमात्रै होइन भगवान् श्रीकृष्ण त ज्ञानीलाई आफ्नू आत्मा नै ठान्नु हुन्छ । जस्तै– **'ज्ञानी त्वात्मैव मे मतम्'** (गीता ७।१८) ज्ञानी र अज्ञानीका बीचको भेद देखाउँदै भगवान् श्रीकृष्ण उद्धवलाई आज्ञा हुन्छ । जस्तै–

**देहस्थोऽपि न देहस्थो विद्वान् स्वप्नाद् यथोत्थितः ।**
**अदेहस्थोऽपि देहस्थः कुमतिः स्वप्नदृग् यथा ॥**

*– भागवत ११।११।८*

अर्थात् ज्ञानसम्पन्न पुरुष मुक्त पुरुष हो । जसरी सपना देखेर बिउँभिएको मान्छेले सपनामा देखेको शरीरसँग कुनै ममता राख्तैन । त्यसैगरेर ज्ञानी पुरुषले स्थूल र सूक्ष्मशरीरमा रहेर पनि ती शरीरहरूसँग कुनै ममता राख्तैन । तर यसका विपरीत अज्ञानी पुरुष भने सम्बन्ध नभएका कुरामा पनि अहं बुद्धि र मम बुद्धि गरेर सधैँ बाँधिएर बस्तछ । जसरी सपना देख्ने मान्छे सपनाको अवधिभरि सपनाकै संसारमा बाँधिएर बस्तछ ।

भगवान् श्रीकृष्णले महाभारतको युद्धमैदानमा गीताको दोस्रो अध्यायको ११ औँ श्लोक **'अशोच्यानन्व'**देखि लिएर १८ औँ अध्यायको ७२ औँ श्लोक **'कच्चिदेतच्छ्रुतम्'**सम्म औपनिषद्महावाक्य तत्त्वमसि अर्थात् त्यो ब्रह्म भनेको तिमी नै हौ भनेर परमात्मतत्त्वको ज्ञान अर्जुनलाई दिनुभएपछि अर्जुनका अन्तस्करणमा जन्मजन्मान्तर र युगयुगान्तरदेखि जमेर रहेका मलदोष, विक्षेपदोष र आवरणदोषसमेत समाप्त भएरगएका थिए । त्यसपछि उनलाई ब्रह्मज्ञान भएको थियो ।

ब्रह्मज्ञान भएपछि गीताको १८ औँ अध्यायको ७३ औँ श्लोकमा गएर **'नष्टो मोहः स्मृतिर्लब्धा त्वत्प्रसादान्मयाऽच्युत। स्थितोऽस्मि गतसन्देहः करिष्ये वचनं तव॥'** गीताको ७२ औँ श्लोकमा श्रीकृष्णले हे अर्जुन ! मैले उपदेश गरेको तत्त्वमसि महावाक्य अर्थात् गीताज्ञान तिमीले एकाग्र चित्तले सुन्यौ ? तिम्रो अज्ञानजन्य मोह नष्ट भयो ? भनेर सोध्नु भएको थियो। तिनै प्रश्नहरूका उत्तरमा अर्जुनले हे अच्युत ! हजूरका परमकृपाले मेरो मोह नष्ट भयो र मलाई स्मृति प्राप्त भयो। म सम्पूर्ण संशयहरूदेखि मुक्त भएँ। अब म हजूरको आज्ञा पालना गर्छु भनेर अनुभवात्मक महावाक्य अर्थात् अहं ब्रह्मास्मिको बोध भएको कुरा भगवान् श्रीकृष्णलाई अर्जुनले निवेदन गरेका थिए।

श्रीमद्भागवतमहापुराणमा पनि श्रीशुकदेव स्वामीले दोस्रो स्कन्धको प्रथम अध्यायको प्रथम श्लोकदेखि म्रियमाण राजा परीक्षित्लाई तत्त्वमसि महावाक्यको उपदेश गर्नु भएको थियो –

**वरीयानेष ते प्रश्नः कृतो लोकहितं नृप।**
**आत्मवित्सम्मतः पुंसां श्रोतव्यादिषु यः परः॥**
**तस्माद्भारत सर्वात्मा भगवानीश्वरो हरिः।**
**श्रोतव्यः कीर्तितव्यश्च स्मर्तव्यश्चेच्छताऽभयम्॥**

*– भागवत २।१।१ र ५*

अर्थात् हे राजन् ! तपाईंले लोकहितकालागि गर्नुभएको प्रश्न अत्यन्त उत्तम छ। भगवान्को लीलाकथाको श्रवण गर्नु, स्मरण गर्नु र कीर्तन गर्नुभन्दा ठूलो श्रेयोमार्ग मान्छेका लागि अरू केही हुन सक्तैन। त्यसकारण हे परीक्षित् ! जुन मान्छेले अभयपद प्राप्त गर्न चाहन्छ, त्यसले सर्वात्मा सर्वशक्तिमान् भगवान् श्रीहरिका

लीलाकथाहरूको श्रवण, कीर्तन र स्मरण गर्नुपर्दछ। यसबाट नै उसको आत्यन्तिक कल्याण हुन्छ। त्यसपछि द्वादशस्कन्धको पाँचौं अध्यायको १२ औं श्लोकसम्म नै श्रीशुकदेवले **'तत्त्वमसि'**को उपदेश गर्नुभएको देखिन्छ। त्यसपछि अन्त्यमा– **'अहं ब्रह्म परंधाम ब्रह्माहं परमं पदम्। एवं समीक्षन्नात्मानमात्मन्याध्याय निष्कले॥ दशन्तं तक्षकं पादे लेलिहानं विषाननैः। न द्रक्ष्यसि शरीरं च विश्वं च पृथगात्मनः॥'** *(भागवत १२।५।११,१२)* अर्थात् हे राजन्! म नै सर्वाधार ब्रह्म हुँ र परमपद ब्रह्म पनि म नै हुँ भन्ने विचारगरेर तिमी अखण्डरस ब्रह्मभावमा स्थित होऊ। त्यसरी तिमी ब्राह्मीस्थितिमा अवस्थित भएपछि आफ्नू भयङ्कर विषाक्त जिब्रो लपलपाउँदै आएर तक्षक नागले तिम्रा पाउमा डसेछ भने पनि तिमीलाई केही थाहा हुने छैन। त्यसबेला तिमी आफ्नू आत्मस्वरूपमा अवस्थित भएर सारा विश्वलाई आफूभन्दा पृथक् देख्नेछैनौ। यसरी अन्तिम अहं ब्रह्मास्मिको उपदेश श्रीशुकदेवबाट सुनेपछि राजा परीक्षित् अहं ब्रह्मास्मि भन्ने अनुभवात्मक ब्राह्मीस्थितिमा पुगेका थिए। त्यसपछि सोही ब्रह्मात्मैक्यबोधको आफ्नो अनुभव राजा परीक्षित्ले स्वामी श्रीशुकदेवलाई सुनाएका थिए। जस्तै–

**सिद्धोऽस्म्यनुगृहीतोऽस्मि भवता करुणात्मना।**
**श्रावितो यच्च मे साक्षादनादिनिधनो हरिः॥**
**अज्ञानं च निरस्तं मे ज्ञानविज्ञाननिष्ठया।**
**भवता दर्शितं क्षेमं परं भगवतः पदम्॥**

*– भागवत १२।६।२ र ७*

अर्थात् हे ब्रह्मन्! करुणामूर्ति हजूरले ममाथि कृपा गरेर अनादिनिधन परब्रह्मस्वरूप भगवान् श्रीहरिको कथा सुनाउनु भयो।

अब म हजूरबाट कृतकृत्य भएँ र मुक्त पनि भएँ । हजूरले उपदेश गर्नु भएको ज्ञान र विज्ञानयुक्त वचनले मेरो अज्ञान सधैँका लागि समाप्त भयो । हजूरले मलाई भगवान्को परम कल्याणकारी ब्रह्मस्वरूप साक्षात्कार गराइदिनुभयो भनेपछि राजा परीक्षित् मुक्त भएका थिए ।

राजा जनकलाई अष्टावक्रले ब्रह्मज्ञानको उपदेशबाट विदेहमुक्त बनाउनुभएको थियो । अष्टावक्रगीतामा राजा जनकलाई अष्टावक्रले दिएको उपदेश मुमुक्षुकालागि अत्यन्त मननीय छ । जस्तै–

**यदि देहं पृथक्कृत्य चिति विश्राम्य तिष्ठसि ।**
**अधुनैव सुखी शान्तो बन्धमुक्तो भविष्यसि ॥**

अर्थात् हे राजन् ! यदि यस पाञ्चभौतिक शरीरलाई आफूदेखि पृथक् गरेर चित्स्वरूपमा अवस्थित हुन सक्तछौ भने अहिले नै तिमी मुक्त हुने छौ ।

यसरी माथि उल्लेख भएका विभिन्न दृष्टान्तहरूबाट एउटा ज्ञानमात्रै मुक्तिको बाटो रहेछ भन्ने प्रमाणित हुन आउँछ । निष्काम कर्म र भक्ति ब्रह्मज्ञानकालागि परम्परया साधन हुन सक्तछन् र साक्षात् साधन भनेको त ज्ञानमात्रै हो । त्यसै हुनाले ब्रह्मसूत्रको प्रथम सूत्रमा नै **'अथातो ब्रह्मजिज्ञासा'** भन्ने सूत्रको रचना गरेर मुमुक्षुहरूलाई ब्रह्मज्ञानतिर लाग्ने सदुपदेश श्रीवेदव्यासले दिनुभएको छ । श्रुतिहरूले पनि बारम्बार **'ऋते ज्ञानान्नमुक्तिः' 'ज्ञानादेव तु कैवल्यम्' 'तमेव विदित्वाऽतिमृत्युमेति नान्यः पन्था विद्यतेऽयनाय ।'** भनेका छन् । जीवित रहँदै ब्रह्मज्ञान गरिहालौँ । यसमा नै कल्याण छ । अस्तु । श्रीकृष्णार्पणमस्तु ।

# चिदाभास

चिदाभास शब्द चित् र आभाससमेत दुइटा शब्द मिलेर बन्दछ। पहिलो चिती संज्ञाने धातुबाट क्विप् प्रत्यय भएर चित् शब्द बन्दछ। यसको अर्थमा आत्मा, प्रकाश, ज्ञान, बुद्धि, ब्रह्म, चैतन्य, चित्तवृत्ति, मन आदि पर्न आउँछन्। दोस्रो आङ् उपसर्गपूर्वक भासृ दीप्तौ धातुबाट अच् प्रत्यय भएर आभास शब्द बन्दछ। आभास शब्दका सम्बन्धमा वामनशिवराम आप्टेले आफ्नु संस्कृतशब्दकोशमा यसको अर्थ चमक, प्रकाश, कान्ति, प्रतिविम्ब, आकृति, छायापुरुष र अवास्तविक वा आभासी रूपसमेत दिएका छन्। यसका अरू पनि धेरैथरी पर्यायवाची शब्दहरू उक्त कोशले दिएको छ। वेदान्तसँग सम्बन्धित एउटा श्लोक पनि त्यसै शब्दकोशमा पाइन्छ। जस्तै– **'तत्राज्ञान धिया नश्येदाभासात्तु घटःस्फुरेत्'** अर्थात् ज्ञानबाट अज्ञानको नाश हुन्छ र आभासबाट घटको स्फुरण हुन्छ। त्यसैगरेर संस्कृत नेपाली बृहत्शब्दकोशमा आभास शब्दको अर्थ चमक, भावना, समानता, झलक, झूटोज्ञान, मतलब र सङ्केतसमेतको उल्लेख गरेको पाइन्छ। नेपाली बृहत्शब्दकोषमा पनि चिदाभासको अर्थ अरू शब्दकोशहरूमा दिएकै सरह मिथ्याज्ञान, भान, झझल्को आदि दिइएको छ।

यसरी चिदाभास शब्दको अर्थ विभिन्न शब्दकोशहरूमा विभिन्न परिप्रेक्ष्यमा र सन्दर्भमा मिल्नेगरी दिएको पाइन्छ। तर अद्वैतवेदान्तमा अत्यन्त महत्त्वकासाथ चर्चा गरिएको आभास शब्दको अर्थ यतिमात्रै नभएर अत्यन्त विस्तृत तथा गहनरूपमा

दिएको पाइन्छ । यसरी चित् र आभास दुई शब्दहरू मिलेर चिदाभास शब्द बन्दछ ।

अद्वैतवेदान्तमा चिदाभासलाई जीव, प्राण, जीवात्मा, अहम् चिदचिद्ग्रन्थि, क्षेत्रज्ञ आदि पर्यायवाची शब्दहरूबाटसमेत सम्बोधन गरिएको पाइन्छ । अद्वैतवेदान्तका यी आफ्ना पारिभाषिक शब्दहरू भएका हुँदा अरू सन्दर्भमा यी शब्दहरू नमिल्ने पनि हुनसक्तछन् ।

चिदाभासको स्वरूप र यसको महत्त्वका सन्दर्भमा सर्वप्रथम यसको सङ्क्षिप्त परिचर्चा र परिचय दिइसकेपछिमात्रै यसको अरू केही चर्चा गर्नु उपयुक्त हुने देख्तछु । चिदाभास भनेको अहं शब्दले चिनिने जीव अर्थात् म नै हूँ । म अहिले आफ्नै सक्कली परिचय दिनेतर्फ अग्रसर भइरहेको छु । अहिले यो पङ्क्ति लेखुञ्जेलसम्म पनि मैले मेरो आफ्नू परिचय बाहिरी मिथ्या मायिक नाम र रूपको आधारमा नै दिइरहेको थिएँ भने अब मिथ्या नै भए पनि भित्री स्वरूपको परिचय दिने म प्रयास गर्दैछु ।

चिदाभास, चित् र अन्तःकरणको परस्पर सम्बन्ध भएर अर्थात् अनोऽन्याध्यास भएर जीवात्मा खडा हुन्छ । चिदाभास भन्नाले यसको व्युत्पत्ति **'चित आभासः'** हुन्छ । यसको अर्थ चितः साक्षीचैतन्यको आभासः झल्को वा प्रतिबिम्ब भन्ने बुझ्नु पर्छ । यहाँ ३ थरी तत्त्व मिलेर चिदाभास खडा भएको देखिन्छ । जस्तै– साक्षीचैतन्य, अन्तःकरण र अन्तःकरणमा परेको चित्को प्रतिबिम्ब वा चित्को आभास । यो दृष्टान्त हामीभित्रको कुरा भएको हुँदा सजिलैसँग बुझ्न नसकिने देखिन्छ । यसलाई सम्झाउनकालागि बुझिने गरी बाहिरको दृष्टान्त पनि दिनुपर्ने देखिन्छ ।

उक्त कुरालाई सम्झाउँन यहाँ दृष्टान्तकालागि घाँटीमाथिको

मुख, स्वच्छ तथा नहल्लिएको ऐना र त्यसमा परेको मुखको प्रतिबिम्बलाई लिन सकिन्छ। यहाँ साक्षीचैतन्यका ठाउँमा घाँटीमाथिको मुख, अन्तःकरण अर्थात् बुद्धिका ठाउँमा स्वच्छ तथा नहल्लिएको ऐना र चिदाभासका ठाउँमा मुखाभासलाई लिनुपर्दछ। ऐनामा देखिएको मुखाभास जस्तै नै चिदाभास हो। चिदाभास र साक्षीचैतन्यको वास्तविक अर्थ नबुझीकन मोक्षमार्गमा अग्रसर हुन सकिँदैन। यो इन्द्रियवेद्य नभएको हुँदा बुझ्न सजिलो छैन। त्यसैकारण घाँटीमाथिको मुख, मुखाभास र ऐनाको उदाहरण दिएर सम्झाउने प्रयास शास्त्रकारहरूले गरेको देखिन्छ। ब्रह्मज्ञान अनुभवमा उत्रिनु अति आवश्यक छ। शास्त्रमा भनिएको पनि छ– **'अनुभवावसाना हि ब्रह्मविद्या'** अर्थात् अनुभवमा आएपछिमात्रै ब्रह्मज्ञान हुन्छ। तत्त्वमसि महावाक्य गुरुबाट श्रवण गरेपछि धेरै लामो समयसम्म मनन र निदिध्यासन आदि गरेपछि जब साधकलाई **'अहं ब्रह्मास्मि'**को अनुभव हुन्छ। त्यही हो अपरोक्षानुभूति अर्थात् ब्रह्मज्ञान। त्यसपछि ब्रह्मज्ञानको साधना पूरा भएको मान्न सकिन्छ।

चिदाभास वा जीवका सम्बन्धमा पञ्चदशीकार विद्यारण्य स्वामीले अत्यन्त विशदरूपमा वर्णन गर्नु भएको छ। त्यसको सारांश यहाँ दिनु सान्दर्भिक ठान्दछु। भ्रम अर्थात् बुद्धि, इन्द्रिय आदिको अधिष्ठान भएको कूटस्थ, साक्षीचैतन्यको आभास मायिक अन्तःकरण अर्थात् बुद्धिमा परेपछि चित् र जडको अन्योऽन्याधास भएर चिदाभास वा जीवभाव खडा हुन्छ। यसैलाई पुरुष पनि भनिन्छ। यसै कुरालाई पञ्चदशीको तृप्तिदीपप्रकरणको छैटौँ श्लोकमा उल्लेख गरिएको छ। जस्तै–

**साधिष्ठाने विमोक्षादौ जीवोऽधिक्रीयते न तु ।**
**केवलो निरधिष्ठानविभ्रान्तेः क्वाप्यसिद्धितः ॥**

अर्थात् कूटस्थरूप अधिष्ठान अथवा साक्षीचैतन्य स्वर्गदेखि लिएर मोक्षसम्म नै चिदाभासका साथै रहन्छ । चिदाभासकोमात्रै कुनै अस्तित्व हुँदैन । किनभने अधिष्ठानविनाको भ्रान्ति हुन सक्तैन । जस्तै डोरी अधिष्ठान नभईकन सर्पको भ्रम हुन सक्तैन र सिपी अधिष्ठान नभईकन चाँदीको भ्रम हुन सक्तैन । जीवात्माले जब साक्षीचैतन्यको अंश अर्थात् शक्ति पाउँछ त्यसैबेलादेखि नै उसले भ्रमको अंश अर्थात् सूक्ष्मशरीर र स्थूल शरीरसमेतलाई अध्यासद्वारा प्राप्त गर्दछ । त्यसपछि जीवात्मा अर्थात् चिदाभास आफूलाई संसारी भएको मानेर संसारमा घुमिरहन्छ । त्यस भ्रमांशलाई समातेर संसारको दुश्चक्रमा घुमिरहेको जीव वा चिदाभासले भ्रमांशलाई चट्क्कै छोडेर जब आफ्नू अधिष्ठानसत्ता अर्थात् साक्षीचैतन्यतर्फ फर्कन्छ, त्यसपछिमात्रै उसले आफूलाई संसारी ठान्न छोडेर असङ्ग चिदात्मा हुँ भन्न सक्तछ ।

जुन मान्छेले अहं वा चिदाभासको भ्रमांशलाई समातेर अहं वा म भन्दछ र त्यही अनुसारको व्यवहार गर्दछ, त्यो अज्ञानी हो । जसले भ्रमांशलाई छोडेर अधिष्ठानांश अर्थात् साक्षीचैतन्यलाई समातेर अहं वा म भन्छ । त्यो ज्ञानी हो । त्यही कूटस्थ वा साक्षीसहितको चिदाभासलाई नै श्रुतिमा पुरुष भनेर भनिएको छ । जस्तै– **'स वा अयं पुरुषः सर्वासु पूर्षु पुरिशयः'** *(बृ.२।५।१८)*

अधिष्ठानांश भनेको कूटस्थ अर्थात् साक्षीचैतन्य हो । भ्रमांश भनेको माया र मायाको कार्य हो । यी दुवैथरीको अन्योऽन्याध्यास भएपछि चिदाभास किंवा जीव बन्दछ । त्यही नै प्रमाता, कर्ता र

भोक्ता पनि हो । कठोपनिषद्मा पनि यही कुराको उल्लेख गरिएको छ । जस्तै– **'आत्मेन्द्रियमनो युक्तं भोक्तेत्याहुर्मनीषिणः ।'**

चिदाभासबाट ब्रह्मतिर अर्थात् अधिष्ठान चैतन्यतर्फ उन्मुख हुनु भनेको मोक्षको बाटोतर्फ लाग्नु भनेको हो । यसको प्रतिकूल चिदाभासबाट तलतिर अर्थात् सूक्ष्मशरीर र स्थूलशरीर हुँदै माया र मायाको कार्यतिर लाग्नु भनेको अधोगतितर्फ लाग्नु भनेको हो ।

जतिसुकै गुरुका मुखबाट शास्त्र श्रवण गरे तापनि, **तत्त्वमसि** महावाक्यको श्रवण गरेर चिन्तन, मनन र निदिध्यासन गरे तापनि ब्रह्मात्मैक्यबोध हुनु ता कता हो कता आफ्नै नजिकैको अधिष्ठानसत्ता, कूटस्थ अर्थात् साक्षीचैतन्यको पनि अपरोक्षानुभूति हुनसकेको छैन भनेर मुमुक्षु साधक सधैँ चिन्तित हुने गरेको पाइन्छ । यस सम्बन्धमा यसको कारण पञ्चदशीकारले पञ्चदशीमा दर्शाउनुभएको छ । जस्तै–

**जलव्योम्ना घटाकाशो यथा सर्वस्तिरोहितः ॥**
**तथा जीवेन कूटस्थः सोऽन्योऽन्याध्यास उच्यते ॥**

*– पञ्चदशी चित्र. २४ र २५*

अर्थात् घडामा रहेको घटाकाशलाई घडामा पानी भरेपछि जसरी घडामा जलाकाश खडा भएर घडाको घटाकाशलाई त्यस जलाकाशले छोपिदिन्छ । त्यस्तै गरेर चिदाभास जीवात्माले कूटस्थ आत्मालाई छोपिदिएको छ । यसरी ढाक्नुलाई नै शास्त्रहरूमा अन्योऽन्याध्यास भनेको छ । जस्तै अधिष्ठान डोरीलाई ढाकेर सर्प खडा हुन्छ र अधिष्ठान शुक्तिलाई ढाकेर चाँदी खडा हुन्छ । यसै कुरालाई अझ स्पष्ट पार्दै भनिएको छ । जस्तै –

**अयं जीवो न कूटस्थं विविनक्ति कदाचन ।**
**अनादिरविवेकोऽयं मूलाविद्येति गम्यताम् ॥**

अर्थात् यस चिदाभासरूपी जीवात्माले आफ्नो नै अधिष्ठान कूटस्थ आत्मालाई कहिल्यै पनि चिन्न सक्तैन। आफ्ना नै साथमा रहेको आफ्नै अधिष्ठान आत्मालाई जीवले विवेक गर्न सक्तैन। यसको कारण मूला अविद्या नै हो। जबसम्म ज्ञानद्वारा यस मूला अविद्या वा अनादि वासना वा अज्ञानलाई मुमुक्षुले नाश गर्न सक्तैन तबसम्म यो मूला अविद्याको निवृत्ति हुनसक्तैन। श्रुतिले भनेको पनि छ– **'ऋते ज्ञानान्नमुक्तिः'** अर्थात् ज्ञानविना मुक्ति हुन सक्तैन।

चिदाभास मिथ्या हो। यस सम्बन्धमा पञ्चदशीको तृप्तिदीप प्रकरणमा विद्यारण्य स्वामीले श्रुति र अनुभवसमेतबाट प्रमाणित भएको कुरा उल्लेख गर्नुभएको छ। जस्तै–

**मायिकोऽयं चिदाभासः श्रुतेरनुभवादपि।**
**इन्द्रजाल जगत्प्रोक्तं तदन्त्यं पात्ययं यतः॥**

अर्थात् श्रुति र अनुभवबाट पनि यो चिदाभास मिथ्या सिद्ध हुन्छ। विद्वान्हरूले यो जगत्लाई इन्द्रजाल जस्तो हो भनेर भनेका छन्। यो चिदाभास पनि जगत्भित्रै अर्थात् मायाको पेटभित्र नै पर्ने हुँदा यो चिदाभास पनि मिथ्या नै हो।

त्यसैगरेर यस चिदाभासलाई मिथ्या नै हो भनेर श्रुतिले पनि उद्घोष गरेको छ। जस्तै– **'जीवेशावाभासेन करोति माया चाविद्या च स्वयमेव भवति।"** *(नृसिंहोत्तरतापनीयोपनिषद् ९)* यतिमात्रै नभएर यो चिदाभास सुषुप्ति आदि अवस्थामा विलय अर्थात् हराएको कुरा साक्षीले स्पष्टरूपमा सधैँ अनुभव गरिरहन्छ। यसबाट पनि चिदाभासको खास आफ्नू अस्तित्व नभएको देखिन्छ।

त्यसैगरेर चिदाभास र साक्षीका बारेमा श्वेताश्वतरोपनिषद्मा पनि वर्णन गरिएको छ। जस्तै–

**द्वा सुपर्णा सयुजा सखाया समानं वृक्षं परिषस्वजाते ।**
**तयोरन्यः पिप्पलं स्वाद्वत्यनश्नन्नन्यो अभिचाकशीतिः ॥**

*– श्वे.उ. ४/६*

अर्थात् सधैँ साथसाथै मिलेर दुइटा चराहरू एउटा रुखमा बसेका छन् । ती दुई चराहरूमध्ये एउटा चरो भने त्यस रुखमा फलेको फल खान्छ । तर अर्को चरो भने त्यस रुखमा फलेको फल नखाएर केवल हेरेरमात्रै त्यहाँ बस्तछ । ती दुई चराहरू भनेका मानिसका देहरूपी वृक्षमा अर्थात् अन्तःकरणमा साथसाथै बस्ने चिदाभास वा जीवात्मा र कूटस्थ अथवा साक्षीचैतन्य हुन् । जीवात्मा आफ्नो प्रारब्ध कर्मको फल भोग्दछ भने साक्षीचैतन्य त्यस कर्मफलको भोग नगरेर केवल साक्षीको रूपमा हेरेरमात्रै बसिरहन्छ । एकै ठाउँमा साथसाथै बसेता पनि जीवात्माले कूटस्थ आत्मालाई चिन्न सक्तैन । एकातर्फ चिदाभास यस अनादि दुःखमय संसारमा आफ्नू कर्मफलको भोग गरेर घुमी नै रहन्छ भने अर्कोतर्फ साक्षीचैतन्य त्यो सबै हेरेर बसिरहन्छ ।

यसैकुरालाई श्रीमद्भागवतमहापुराणको चतुर्थस्कन्धको २५ औँ अध्यायदेखि २९ औँ अध्यायसम्म र पञ्चमस्कन्धको १३ औँ र १४ औँ अध्यायमा वर्णन गरिएको पुरञ्जनोपाख्यान र भवाटवीको वर्णन पनि यही जीवात्मा अर्थात् चिदाभास र परमात्मा अर्थात् कूटस्थ साक्षीचैतन्यको नै हो । यी कथाहरू पनि हाम्रै कथा हुन् । अत्यन्त शुद्ध अन्तःकरण बनाएर मनोयोगपूर्वक बुझ्ने प्रयास गरेमा यसलाई बुझ्न सकिन्छ ।

म्लेच्छसँगको संसर्गले पतित भएको ब्राह्मण प्रायश्चित्त गरेर फेरि आफ्नै ठाउँमा फर्क्यो भने त्यो ब्राह्मणै हुन्छ भन्ने कुरा

विद्यारण्य स्वामीले पञ्चदशीमा एउटा सानू कथाको प्रसङ्ग ल्याएर उल्लेख गर्नु भएको छ । त्यस्तै चिदाभासले पनि भ्रमांशबाट हटेर अधिष्ठानांशतिर फर्किएर अहं ब्रह्मास्मिको अपरोक्षानुभूति गर्‍योभने म्लेच्छको संसर्गबाट फर्किएर प्रायश्चित्त गरेपछि पतित ब्राह्मण फेरि शुद्ध ब्राह्मण भए जस्तै यो मिथ्या चिदाभास पनि ब्रह्म हुनसक्तछ । जस्तै–

**गृहीतो ब्राह्मणो म्लेच्छैःप्रायश्चित्तं चरन् पुनः ।**
**म्लेच्छैःसङ्कीर्यते नैव तथाऽऽभासः शरीरकैः ॥**

*– पञ्चदशी तृप्ति २३९*

यो चिदाभास भनेको मिथ्या आत्मा हो । यसैका माध्यमबाट नै मोक्ष प्राप्त गर्नु पर्दछ । अनादि अविद्याले सिर्जना गरेको मिथ्या संसारलाई यसै मिथ्या आत्माको माध्यमबाट नै काटेर सत्‌चित्‌आनन्दस्वरूप ब्रह्मलाई प्राप्त गर्नु अर्थात् ब्रह्मात्मैक्यबोध हुनु नै मनुष्य जीवनको परम उद्देश्य हो । यदि मनुष्यजीवन पाएर पनि मोक्ष प्राप्त गर्न सकेन भने त्यसले आत्मघात गरेको ठहर्छ । यो महान् हानि हो भनेर शास्त्रहरूले एकैस्वरले उद्‌घोष गरेका छन् । अतः यही मिथ्या चिदाभासको माध्यमद्वारा नै अनादि अविद्याजनित मिथ्यारूप संसारको बन्धनलाई सधैँकालागि समाप्त गर्नु नै मानवजीवनको सार्थकता हो । अस्तु । श्रीकृष्णार्पणमस्तु ।

# ब्रह्मदर्शन

**'ब्रह्मवेद ब्रह्मैव भवति'** *(मु.उ.३।२।९)* अर्थात् ब्रह्म जान्ने ब्रह्म नै हुन्छ भन्ने श्रुतिको वचन अनुसार जन्ममरणको यस दुश्चक्रबाट सधैँकालागि पार हुन ब्रह्मज्ञान गर्नु अनिवार्य देखिन्छ। ब्रह्मज्ञान नगरीकन अरू उपाय नै छैन। श्रुतिले धेरै ठाउँमा उद्घोष गरेको छ **'नान्यः पन्था विद्यतेऽयनाय' 'ऋतेज्ञानान्नमुक्तिः'** अर्थात् मुक्तिका लागि अरू कुनै पनि बाटो छैन। ज्ञानविना मुक्ति हुँदैन। ब्रह्मदर्शन अथवा ब्रह्मज्ञानविना यो संसाररूपी समुद्रबाट पारि तर्ने अरू कुनै उपाय नै छैन।

**न चक्षुषा गृह्यते नापि वाचा नान्यैर्देवैस्तपसा कर्मणा च।**
**ज्ञान प्रसादेन विशुद्धसत्त्वस्ततस्तु तं पश्यते निष्कलं ध्यायमानः॥**

अर्थात् यो आत्मा न आँखाद्वारा ग्रहण गर्न सकिन्छ। न वाणीद्वारा ग्रहण गर्न सकिन्छ। न अरू इन्द्रियहरूद्वारा ग्रहण गर्न सकिन्छ। न तपस्याद्वारा प्राप्त गर्न सकिन्छ। न कर्मद्वारा नै प्राप्त गर्न सकिन्छ। ज्ञानका प्रसादद्वारा नै मुमुक्षुको चित्त शुद्ध हुन्छ। तर ध्यान गर्नाले त्यस निष्कल ब्रह्मतत्त्व अर्थात् आत्मतत्त्वको साक्षात्कार मुमुक्षुले गर्दछ भनेर शास्त्रमा उल्लेख भएको छ।

**नायमात्मा प्रवचनेन लभ्यो न मेधया न बहुना श्रुतेन।**
**अयमेवैष वृणुते तेन लभ्यस्तस्यैष आत्मा विवृणुते तनुं स्वाम्॥**

*– मुण्डकोपनिषद् ३।२।३*

अर्थात् यो आत्मा न प्रवचनबाट प्राप्त हुनसक्तछ। यो आत्मा न मेधा अर्थात् धारणाशक्तिबाट प्राप्त हुनसक्तछ। न यो

आत्मा अधिक श्रवण गर्दैमा प्राप्त हुन सक्तछ। जुन मुमुक्षु विद्वान्ले ब्रह्मप्राप्तिको इच्छा गर्दछ, उसले आफ्नू स्वरूपभूत आत्मा अर्थात् ब्रह्मलाई प्राप्त गर्न सक्तछ।

ब्रह्मज्ञानकालागि श्रोत्रिय ब्रह्मनिष्ठ गुरुबाट वेदान्तमहावाक्यहरूको श्रवण गर्ने, त्यसलाई मनन र निदिध्यासन गर्ने, त्यसपछिमात्रै ब्रह्मज्ञान हुने कुरामा शास्त्रहरू एकमत छन्। सुगमताकालागि शास्त्रकारले भनेका छन्। जस्तै–

**श्रोतव्यः श्रुतिवाक्येभ्यो मन्तव्यश्चोपपत्तिभिः।**
**मत्त्वा च शततं ध्येय एते दर्शनहेतवः॥**

अर्थात् श्रुतिवाक्यहरूबाट सुन्नु, सुनेका श्रुतिवाक्यहरूलाई उपपत्तिपूर्वक मनन गर्नु र मनन गरेको कुरालाई ध्यान गर्नु।

बृहदारण्यकोपनिषद्को मैत्रेयीब्राह्मणमा याज्ञवल्क्यले आफ्नी जिज्ञासु तथा मुमुक्षु पत्नी मैत्रेयीलाई ब्रह्मज्ञानको उपदेश दिँदै भन्नु भएको छ। जस्तै– **'आत्मा वा अरे द्रष्टव्यः श्रोतव्यो मन्तव्यो निदिध्यासितव्यो मैत्रेय्यात्मनि खल्वरे दृष्टे श्रुते मते विज्ञात इदं सर्वं विदितम्'** *(बृ.उ. ४।५।६)*

ध्यान कसरी गर्ने, कुन माध्यमबाट र कुन बेलामा गर्ने भन्ने सम्बन्धमा विभिन्न विचारहरू र सिद्धान्तहरू प्रतिपादन गरिएका पाइन्छन्। आलम्बनविना निरुपाधिक ब्रह्मको ध्यान गर्न नसकिने हुँदा पहिले साकार ब्रह्मको ध्यान गर्ने र बिस्तारै निराकार तथा निरूपाधिक ब्रह्मको ध्यान गर्ने भन्ने सम्बन्धमा शास्त्रहरूमा र विभिन्न सम्प्रदायहरूमा पनि विभिन्न ध्यानपद्धतिहरू प्रचलित छन्। श्रीमद्भागवतमहापुराणमा पनि यसको वर्णन गरिएको छ। जस्तै–

**एवं हरौ भगवति प्रतिलब्धभावो-**
**भक्त्या द्रवद्धृदय उत्पुलकः प्रमोदात् ।**
**औत्कण्ठ्यबाष्पकलया मुहुरर्द्यमान-**
**स्तच्चापि चित्तबडिशं शनकैर्वियुङ्क्ते ।।**

*– भागवत ।३।२८।३४।*

अर्थात् ध्यानका अभ्यासबाट भगवान्मा साधकको चित्तवृत्ति दृढ हुन जान्छ। साधकको हृदय भक्तिबाट द्रवित बन्दछ। अत्यन्त आनन्दित भएर शरीर रोमाञ्चित हुन्छ। उत्कण्ठाजन्य प्रेमाश्रुका धाराले शरीर भिज्दछ। सबीज योगको माध्यमबाट साधकका चित्तले भगवान्लाई माछा पक्रने माझीले बल्छी हालेर माछो पक्रे झैँ गरेर त्यसरी पक्रन सफल भएपछि निर्बीज योग अर्थात् निर्गुण तथा निराकार ब्रह्मको ध्यान गर्न चाहने साधकले आफ्नू चित्तले पक्रिएको त्यस सगुण साकार ध्येयब्रह्मलाई पनि बिस्तारै छोडेर ज्ञेयब्रह्मको ध्यान गर्नु पर्दछ।

**मुक्ताश्रयं यर्हि निर्विषयं विरक्तं**
**निर्वाणमृच्छति मनः सहसा यथार्चिः ।**
**आत्मानमत्र पुरुषोऽव्यवधानमेक-**
**मन्वीक्षते प्रतिनिवृत्तगुणप्रवाहः ।।**

*– भागवत ३।२८।३५*

अर्थात् जसरी तेल, घिउ आदि बर्तन समाप्त भएपछि दीपशिखा आफ्नू कारण तेजमा गएर मिल्दछ। त्यसैगरेर आश्रय, विषय र रागसमेत समाप्त भएपछि मन शान्त हुन्छ। यस अवस्थामा पुगेपछि जीवात्माका गुणप्रवाहरूप देहादि उपाधिहरू समाप्त हुन्छन्। त्यसपछि ध्याता, ध्येय र ध्यान आदि त्रिपुटीयुक्त

भेद पनि समाप्त भएर जान्छ । साधकले सर्वत्र भेदरहित अखण्ड ब्रह्म नै देख्न थाल्दछ ।

उक्त कुरा नै बौद्धदर्शनका महाकवि अश्वघोषले आफ्नू महाकाव्य सौन्दरनन्दनमा पनि लेख्नु भएको छ। बौद्धदर्शन अनुसार लेखिएको भए तापनि यस प्रसङ्गसँग अत्यन्त मिल्ने हुँदा ती दुई श्लोकहरूको मैले यहाँ उद्धरण गरेको छु। जस्तै–

**दीपो यथा निर्वृतिमभ्युपेतो नैवावनिं गच्छति नान्तरिक्षम् ।**
**दिशं न काञ्चिद्विदिशं न काञ्चित् स्नेहक्षयात्केवलमेति शान्तिम् ॥**

**एवं कृती निर्वृतिमभ्युपेतो नैवावनिं गच्छति नान्तरिक्षम् ।**
**दिशं न काञ्चिद्विदिशं न काञ्चित्क्लेशक्षयात्केवलमेति शान्तिम् ॥**

अर्थात् तेल, घिउ आदि बर्तन समाप्त भएर निभेको बत्तीको प्रकाश न अन्तरिक्षमा जान्छ, न कुनै दिशामा जान्छ, न कुनै विदिशामा जान्छ, केवल निर्वाणमा प्राप्त हुन्छ। त्यसै गरेर मानिसका पञ्चक्लेशहरू अर्थात् अविद्या, अस्मिता, राग, द्वेष र अभिनिवेशको समाप्त भएपछि ऊ स्वतः निर्वाणमा प्राप्त हुन्छ ।

त्यसैगरी विदेहमुक्त ब्रह्मज्ञानीका **'नतस्य प्राणा उत्क्रामन्ति अत्रैव समवलीयन्ते'** अर्थात् त्यसका प्राणहरू कतै पनि उत्क्रमण गर्दैनन्, तर यहीँ नै विलीन हुन्छन् भनेर श्रुतिले उद्घोष गरेजस्तै महाकवि अश्वघोषले पनि आफ्नू महाकाव्यमा त्यही कुरा उद्घोषित् गर्नु भएको छ ।

भागवतकारले ध्यानको चरम अवस्थाको वर्णन गर्दै लेख्नुभएको छ। जस्तै –

**सोऽप्येतया चरमया मनसोनिवृत्त्या**
**तस्मिन्महिम्न्यवसितः सुखदुःखबाह्ये ।**

**हेतुत्वमप्यसति कर्तरि दुःखयोर्यत्**
**स्वात्मन् विधत्त उपलब्धपरात्मकाष्ठः ॥**

*– भागवत ३।२८।३६*

अर्थात् उपर्युक्त अनुसार योगाभ्यासबाट प्राप्त गरेको चित्तको त्यस अविद्यारहित लयरूप निवृत्तिमा पुगेपछि साधकले सुखदुःखरहित अखण्ड ब्रह्मरूपको अपरोक्षानुभूति गर्दछ । त्यसरी परमात्मतत्त्वको साक्षात्कार गरिसकेपछि त्यस योगीले पहिले सुखदुःखको भोक्ता आफैँ नै हुँ भन्ने ठान्दथ्यो भने त्यसपछि चाहिँ उसले अहङ्कार नै भोक्ता हो भन्ने जान्दछ ।

**देहं च तं न चरमः स्थितमुत्थितं वा**
**सिद्धो विपश्यति यतोऽध्यगमत्स्वरूपम् ।**
**दैवादुपेतमथ दैववशादपेतं**
**वासो यथा परिकृतं मदिरामदान्धः ॥**

*– भागवत ३।२८।३७*

अर्थात् जसरी रक्सी लागेर मातेको मान्छेले आफूले शरीरमा लगाएका लुगाहरू झरेको पनि थाहा पाउँदैन । त्यसैगरेर ब्रह्मज्ञानको चरमावस्थामा पुगेर परमानन्दको स्थितिमा रहेको ब्रह्मज्ञानीले पनि आफ्नू पाञ्चभौतिक शरीरका बारेमा केही पनि थाहा पाउँदैन । उसको शरीर बसेको, उठेको, दैववश हिँडेको, कहीँ गएको र फर्किएकोसमेत केही पनि उसलाई थाहा हुँदैन ।

**देहोऽपि दैववशगः खलु कर्म यावत्**
**स्वारम्भकं प्रतिसमीक्षत एव सासुः ।**
**तं सप्रपञ्चमधिरूढसमाधियोगः**
**स्वाप्नं पुनर्न भजते प्रतिबुद्धवस्तुः ॥**

*– भागवत ३।२८।३८*

अर्थात् ब्रह्मज्ञानीको शरीर उसको अधीनमा नरहेर प्रारब्धका अधीनमा रहेको हुन्छ । जबसम्म त्यस शरीरको आरम्भक प्रारब्धकर्म बाँकी रहन्छ तबसम्म उसले जीवित रहनु नै पर्दछ । तर परमतत्त्वको साक्षात्कार गरिसकेपछि त्यस ब्रह्मज्ञानीले आफ्ना स्त्री, पुत्र, धनसम्पत्तिसमेतमा सपनाका वस्तुजस्तै असत्य ठानेर आफ्ना हुन् भन्ने अहन्ता र ममतासमेत राख्दैन। सबै कुराहरूबाट विरक्त भएर ऊ निर्विकार रहन्छ। यसरी भगवान् कपिलदेवले आफ्नी आमा देवहूतिलाई उपर्युक्त अनुसार उपदेश गर्नु भएको छ ।

निरुपाधिक ब्रह्मको सजिलैसँग चिन्तन हुन नसक्ने भएको हुँदा सो चिन्तनको उपयुक्त समयलाई लिएर विभिन्न शास्त्र र विद्वान्हरूले आ–आफ्ना विचारहरू व्यक्त गरेका छन्। जाग्रत्, स्वप्न र सुषुप्ति यी तीन अवस्था बुद्धिका अवस्था हुन् । यी तीनै अवस्थाभन्दा विलक्षण तर यी तीनै अवस्थासँगै अनुगत भएर रहने एक अर्को चौथो अवस्था पनि छ । त्यो चौथो अवस्था हो । यसै अवस्थालाई नै जाग्रत् र सुषुप्तिका बीचको सन्धिको अवस्था हो भनेर भनिएको छ । त्यस अवस्थामा पुग्न सकेमा साधक मुक्त अवस्थामा पुगेको ठहर्छ । त्यसपछि मोक्षको अवस्था आउँछ । यस सन्दर्भमा महर्षि रमणले आफ्नू विचार यसरी व्यक्त गर्नु भएको छ। जस्तै–

**निद्रा न विद्या ग्रहणं न विद्या गृह्णाति किञ्चिन्न यथार्थबोधे ।**
**निद्रापदार्थग्रहणेतरा स्याच्चिदेव विद्या विलसत्यशून्या ॥**

अर्थात् निद्रा अज्ञानको अवस्था भएको हुँदा त्यस अवस्थामा आत्मज्ञान हुन सक्तैन। जाग्रत् र सपनाका अवस्थामा पनि मायानिर्मित मिथ्या पदार्थकै ग्रहण गरिन्छ। यी तीनै थरी अवस्थामा ब्रह्मदर्शन हुन सक्तैन । यी तीन अवस्थाका अतिरिक्त

एउटा अर्को चौथो अवस्था पनि छ । जुन अवस्थामा पूर्ण निद्रा पनि हुँदैन र जाग्रत् पनि हुँदैन । त्यसै दुर्लभ अवस्थामा अत्यन्त सजगताका साथ ब्रह्मको दर्शन गर्न सकिन्छ । त्यो दुर्लभ अवस्था शून्यको अवस्था पनि होइन र जाग्रत्को अवस्था पनि होइन ।

ब्रह्मचिन्तन गर्ने साधकले ध्यान गर्ने र अपरोक्षानुभूति गर्ने उपयुक्त समय कुन हो ? जुन समयमा मन विक्षिप्त पनि नहओस्, लय पनि नहओस् र कसाय अर्थात् तटस्थरूपमा पनि नरहोस् । त्यस्तो उपयुक्त समय छान्नुपर्ने हुन्छ । यस सम्बन्धमा श्रीमद्भागवत महापुराणमा सूत्रात्मकरूपमा उल्लेख गरेको पाइन्छ, जस्तै–

**सुप्तप्रबोधयोः सन्धावात्मनो गतिमात्मदृक् ।**
**पश्यन्बन्धं च मोक्षं च मायामात्रं न वस्तुतः ॥**

*– भागवत ७।१३।५*

अर्थात् आत्मा र परब्रह्मको समान अधिकरण हुनै सक्तैन, किनभने जीव नित्य बद्ध हो र परब्रह्म नित्य मुक्त हो । अर्को शब्दमा भन्ने हो भने जन्यज्ञानको अधिकरण जीवात्मा हो र नित्यज्ञानको अधिकरण आत्मा हो । यसप्रकारको भेददृष्टिलाई पर हटाएर आत्मदर्शी मुमुक्षुले सुषुप्ति र जाग्रत्का सन्धिकालमा आफ्नू स्वरूपको दर्शन गर्नु पर्दछ । बन्धन र मोक्ष भनेको केवल मायामात्र हो ।

यो संसार भुलभुलैयामात्र हो र यसमा वास्तविकता केही पनि छैन भन्ने कुरा मुमुक्षुले बुझ्नु पर्दछ । सुषुप्तिका अवस्थामा जीवात्मालाई घोर अन्धकारले ढाकेको हुन्छ भने जाग्रत् र सपनाका अवस्थामा ऊ विक्षिप्त भएको हुन्छ । त्यसकारण सुषुप्तिको घोर अज्ञानको अवस्थाबाट बिउँभिएर यता जाग्रत्को

घोर प्रपञ्चमा आइनपुग्दैको सन्धिकालको अनुपम चौथो क्षणको मौका छोपेर साधकले ब्रह्मसाक्षात्कार गरिहाल्नु पर्दछ। त्यो सन्धिकाल अत्यन्त छोटो हुनेहुनाले मुमुक्षु साधकले अत्यन्त सतर्कताका साथ त्यस अमूल्य क्षणलाई पक्रिएर त्यसमा स्थित भएर ब्रह्मचिन्तन र ब्रह्मसाक्षात्कार गर्नसक्नु पर्दछ। यस क्षणमा गरेको ब्रह्मसाक्षात्कारबाट साधक सधैँकालागि संसारबाट मुक्त हुन सक्तछ। त्यस क्षणमा साधक आफ्नू अखण्डाकारवृत्तिमा ब्रह्मचैतन्य आरूढ गराउन सक्तछ। त्यस साधकको लेशाविद्या बाँकी रहे तापनि त्यो मुक्त हुन सक्तछ। साधकको अविद्या नाश भएर ब्रह्मप्राप्ति भइसकेपछि पनि लेशाविद्या भने बाँकी नै रहेको हुन्छ। त्यसले उसलाई संसारमा अरू साधारण संसारी मान्छे सरह व्यवहार गराइरहन्छ। यसैलाई अविद्यालेश पनि भनिन्छ। मुमुक्षु साधक अखण्डाकारवृत्तिमा आरूढ ब्रह्मचैतन्यद्वारामात्रै मुक्त हुन सक्तछ।

ब्रह्मको स्वरूपज्ञानलेमात्र मुमुक्षु मुक्त हुन सक्तैन। ब्रह्मचिन्तन किंवा ब्रह्मदर्शन गर्ने उपयुक्त समयका बारेमा योगग्रन्थमा पनि वर्णन गरिएको छ। जस्तै–

**निद्रादौ जागरस्यान्ते यो भाव उपजायते।**
**तं भावं भावयन्नित्यं मुच्यते नेतरो यतिः॥**

अर्थात् सुषुप्ति अवस्थामा पुग्नु अगाडि र जाग्रत् अवस्थाबाट सुतिसकेपछिको सन्धिकालमा जुन खालको भाव उत्पन्न हुन्छ। त्यही भाव साधक योगीले सधैँ राख्नुपदर्छ। त्यसै भावबाट उसको मुक्ति हुन सक्तछ। उसको अरू उपायबाट मुक्ति हुन सक्तैन।

यसरी योगग्रन्थले सुत्ने बित्तिकै र सुषुप्ति अवस्थामा नपुग्दैको सन्धिकाल अर्थात् चौथो अवस्थामा ब्रह्मको चिन्तन गरेर योगी मुक्त हुन सक्तछ भनेर निर्देशन गरेको छ ।

उपर्युक्त जाग्रत् र सुषुप्तिको सन्धिकाललाई नै प्रकारान्तरले योगवासिष्ठमा पनि वर्णन गरेको पाइन्छ । जस्तै–

**यत्र प्राणोऽस्तमायाति यत्रापानोऽस्तमेति च ।**
**यत्र द्वावप्यनुत्पन्नौ तत् चित्तत्त्वमुपास्महे ॥**

अर्थात् प्राणरूपी सूर्य जब बाहिर निस्किएर विलीन हुन्छ र अपानरूपी चन्द्रमा उदय भएको हुँदैन । त्यस अन्तरालमा जो शुद्ध चिदाकाश ब्रह्म विद्यमान रहन्छ । त्यसै ब्रह्मको नै उपासना गर्नु पर्दछ । त्यस अपूर्व क्षणमा साधकले ब्रह्मको चिन्तन गरेर सधैँका लागि मुक्ति प्राप्तगर्न सक्तछ ।

ब्रह्मसाक्षात्कार गर्ने उपायका सम्बन्धमा श्रीमद्भगवद्गीतामा भगवान् श्रीकृष्णले अर्जुनलाई बताउनु भएको छ । जस्तै–

**स्पर्शान्कृत्वा बहिर्बाह्यांश्चक्षुश्चैवान्तरे भ्रुवोः ।**
**प्राणापानौ समौ कृत्वा नासाभ्यन्तरचारिणौ ॥**
**यतेन्द्रियमनोबुद्धिर्मुनिर्मोक्षपरायणः ।**
**विगतेच्छाभयक्रोधो यः सदा मुक्त एव सः ॥**

*– गीता ५।२७–२८*

अर्थात् जुन योगीले शब्दादि विषयहरू श्रोत्रादि इन्द्रियहरूद्वारा आफ्ना अन्तःकरणका भित्र प्रवेश गराएको छ, तिनको चिन्तन नगर्नु नै तिनलाई अन्तःकरणबाट बाहिर निकाल्नु हो । त्यसरी ती विषयहरूलाई बाहिर निकालेपछि आफ्ना दुइटै आँखाको दृष्टिलाई भृकुटीका मध्यस्थानमा राखेर र नाकको भित्र विचरण गर्ने

प्राणवायु र अपान वायुलाई समान गरेर योगीले राख्नुपर्दछ। जुन योगीका इन्द्रिय, मन र बुद्धिहरू वशमा भएका छन्। जो ईश्वरका स्वरूपको मनन गर्दागर्दै मुनि भएको छ। जो शरीरमा रहेरै पनि मोक्षपरायण भएको छ। जो भय र क्रोधबाट माथि उठिसकेको छ। जसका इच्छा, भय र क्रोधहरूसमेत समाप्त भएका छन्। त्यस्तो संन्यासी सधैँ मुक्त नै छ र उसले अरू कुनै प्रकारको मुक्ति प्राप्तगर्नु पर्दैन। उसले ब्रह्मसाक्षात्कार गरिसकेको छ।

त्यसरी ध्यानबाट ब्रह्मदर्शन गरेर मुक्त हुन साधना गर्ने मुमुक्षुको साधना अत्यन्त सूक्ष्म र दृढ हुनु आवश्यक छ। ब्रह्मदर्शनका लागि निष्काम र भगवदर्पित कर्म, भक्ति, ध्यान र समाधिसमेत परम्परया साधन हुन्। ब्रह्मदर्शन गर्नचाहने मुमुक्षुले निरन्तर ब्रह्माभ्यास गर्नु अति आवश्यक छ। जस्तै–

**तच्चिन्तनं तत्कथनमन्योऽन्यं तत्प्रबोधनम्।**
**एतदेकपरत्वं च ब्रह्माभ्यासं विदुर्बुधाः॥**

अर्थात् मुमुक्षुले ब्रह्मकै विषयमा सधैँ चिन्तन गरिरहनु, ब्रह्मसम्बन्धी यथार्थ कुरा बुझ्नका लागि मुमुक्षुहरूका बीचमा निरन्तर छलफल गरिरहनु र ब्रह्ममा नै एकनिष्ठ भएर सधैँ रहनु नै ब्रह्माभ्यास हो भनेर ज्ञानीहरू भन्दछन् भन्ने कुरा पञ्चदशीमा विद्यारण्य स्वामीले लेख्नु भएको छ। यही कुरा श्रीमद्भगवद्गीतामा पनि भगवान् श्रीकृष्णाले अर्जुनलाई उपदेश गर्नु भएको छ। जस्तै–

**मच्चिता मद्‌गतप्राणा बोधयन्तः परस्परम्।**
**कथयन्तश्च मां नित्यं तुष्यन्ति च रमन्ति च॥**

*– गीता १०/९*

अर्थात् परमात्मा परब्रह्ममा नै आफ्नो मन प्राणहरू समर्पण

गर्ने ज्ञानी भक्तहरू आफूआफूमा मेरै चर्चा गर्दछन्। सधैँ नै उनीहरू म परमात्माकै कुरा गर्दछन् । त्यसैबाट उनीहरू रमाउँछन् र सन्तुष्ट पनि हुन्छन् ।

यसरी गुरुबाट ब्रह्मका बारेमा श्रवण गर्ने, श्रवण गरेका कुराको मनन गर्ने र मननपछि ब्रह्मकै निरन्तर ध्यान गरिरहने मुमुक्षुले ब्रह्मज्ञान प्राप्त गर्न सक्तछ । त्यस्ता मुमुक्षुले जन्ममरणको दुश्चक्रमा फेरि फर्कनु पर्दैन र ऊ सधैँकालागि मुक्त हुन्छ । जुन मुमुक्षुले ब्रह्म जान्दछ त्यो ब्रह्म नै हुन्छ । **'ब्रह्मविद् ब्रह्मैव भवति'** भनेर श्रुतिले पनि भनेको छ। ब्रह्मदर्शन भइसकेपछि ब्रह्मज्ञानी अन्त्यमा नदीहरू समुद्रमा गएर एकाकार भएजस्तै ब्रह्ममै गएर मिल्दछन् भनेर उपनिषद्ले पनि भनेको छ । जस्तै–

**यथा नद्यः स्यन्दमाना समुद्रेऽस्तं गच्छन्ति नामरूपे विहाय ।**
**तथा विद्वान्नामरूपाद्विमुक्तः परात्परं पुरुषमुपैति दिव्यम् ॥**

*– मुण्डकोपनिषद् ३।२।८*

अर्थात् जसरी निरन्तर बगिरहने नदीहरू आफ्ना नाम र रूपहरूसमेत त्याग गरेर समुद्रमा पुगेर अस्त हुन्छन्। त्यसै गरेर ब्रह्मज्ञानी विद्वान् पनि आफ्नू नाम र रूपबाट मुक्त भएर परात्पर दिव्यपुरुष परब्रह्ममा नै एकाकार हुन्छ ।

ब्रह्मज्ञानीका सञ्चित कर्महरू तुरुन्त नै नाश हुने कुरा विवेकचूडामणिमा आद्यजगद्गुरु श्रीशङ्कराचार्यले उल्लेख गर्नु भएको छ । जस्तै–

**अहं ब्रह्मेति विज्ञानात्कल्पकोटिशतार्जितम् ।**
**सञ्चितं विलयं यान्ति प्रबोधात्स्वप्नकर्मवत् ॥**

अर्थात् सुतेर बिहान उठेपछि जसरी सपनाका सम्पूर्ण कार्यहरू

नाश हुन्छन् । त्यसैगरेर अहं ब्रह्मास्मि अर्थात् म ब्रह्म हुँ भन्ने ज्ञान हुनेबित्तिकै करोडौं जन्मदेखिका सञ्चित कर्महरू तुरुन्तै नाश भएर जान्छन् ।

सोही कुरालाई प्रकारान्तरले भागवतमा पनि उल्लेख गरेको पाइन्छ । जस्तै-

**निवृत्तबुद्धयवस्थानो दूरीभूतान्यदर्शनः ।**
**उपलभ्यात्मनाऽऽत्मानं चक्षुषेवार्कमात्मदृक् ।।**

*- भागवत ३।२७।१०*

अर्थात् आत्मदर्शी मुनि बुद्धिका जाग्रत्, स्वप्न र सुषुप्ति समेतका तीनै अवस्थाबाट पनि अलग हुन्छ । परमात्मादेखि बाहेक अरू कुनै कुरा पनि उसले देख्तैन । जसरी आँखाले सूर्यलाई देख्तछ । त्यसै गरेर आफ्नू शुद्ध अन्तःकरणद्वारा ब्रह्मलाई साक्षात्कार गरेर त्यही अद्वितीय ब्रह्मपदमा आत्मज्ञानी पुग्दछ ।

त्यसरी आत्माले आत्मालाई प्राप्त गर्ने भन्दा एउटै आत्माले त्यसै आत्मालाई कसरी प्राप्त गर्ने भन्ने प्रश्न आउन सक्तछ । किनभने द्वैतवादीहरूले मानेजस्तो गरेर अद्वैतवादीहरूले धेरैथरी आत्मा नमानेर एउटा सर्वव्यापक आत्मामात्र मान्दछन् । आत्माले आत्मालाई प्राप्त गर्ने भन्दा त आत्माश्रय दोष पर्दछ । यसै कुरालाई प्रष्ट गर्नकालागि यस श्लोकमा चक्षुअवच्छिन्न सूर्यले आकाशमा रहेको सूर्यलाई प्राप्त गरेजस्तै अहङ्कारावच्छिन्न आत्माले शुद्ध आत्मालाई प्राप्त गर्ने भनेको हो । एउटै सूर्य भएता पनि जसरी चक्षु उपाधि भएको सूर्यले आकाशमा रहेको सूर्यलाई देख्तछ । त्यसै गरेर एउटै आत्मा भए पनि अहङ्कार उपाधि भएको आत्माले शुद्ध ब्रह्मलाई प्राप्त गर्दछ भनेको हो । ब्रह्मदर्शनका विषयमा

भागवतमा भनिएको छ –

**यत्रेमे सदसद्रूपे प्रतिषिद्धे स्वसंविदा ।**
**अविद्ययाऽऽत्मनि कृते इति तद्ब्रह्मदर्शनम् ।।**

*– भागवत १।३।३३*

अर्थात् यी स्थूल र सूक्ष्म शरीरहरू अविद्याद्वारा नै आत्मामा आरोपित भएका हुन् । आत्मस्वरूपको ज्ञान हुने बित्तिकै यसको नाश हुन्छ । त्यसपछि नै ब्रह्मको साक्षात्कार अर्थात् ब्रह्मदर्शन हुन्छ ।

ब्रह्मज्ञानी पुरुषका बारेमा श्रुतिले पनि भनेको छ –

**प्राणोह्येष यः सर्वभूतैर्विभाति विजानन्विद्वान्भवते नातिवादी ।**
**आत्मक्रीड आत्मरतिः क्रियावानेष ब्रह्मविदां वरिष्ठः ।।**

*– मुण्डकोपनिषद् ३।१।४*

अर्थात् यो जुन सम्पूर्ण भूतका रूपमा भासमान भइरहेको छ, त्यो प्राण हो । यो कुरा जान्यो भने विद्वान् अतिवादी हुँदैन । आत्मामा नै क्रीडा गर्ने र आत्मामा नै रमण गर्ने क्रियावान् पुरुष नै ब्रह्मवेत्तामा सर्वश्रेष्ठ हुन्छ ।

ब्रह्मप्राप्ति अर्थात् ब्रह्मदर्शन गर्ने उपायहरू माथि उल्लेख भए अनुसार हुन सक्तछन् । यही कुराको विचार मुमुक्षुले सधैँ गरिरहनु पर्दछ । यही कुरा अरू शास्त्रहरूमा पनि उल्लेख भएको पाइन्छ । जस्तै–

**आसुप्तेरामृतेःकालं नयेद् वेदान्तचिन्तया ।**
**दद्यान्नावसरं किञ्चित्कामादीनां मनागपि ।।**

अर्थात् जागा भएदेखि लिएर नसुतेसम्म र जन्मेदेखि लिएर मृत्यु पर्यन्त मुमुक्षुले सधैँ ब्रह्मचिन्तन नै गरिरहनु पर्दछ । कामक्रोधादि विषयहरूलाई कुनै पनि हालतमा आफूभित्र छिर्न दिनुहुँदैन । अस्तु । श्रीकृष्णार्पणमस्तु ।

# विनागुरु ज्ञान हुँदैन

**अखण्डमण्डलाकारं व्याप्तं येन चराचरम् ।**
**तत्पदं दर्शितं येन तस्मै श्रीगुरवे नमः ॥**

*– गुरुगीता*

अर्थात् जसले बलयाकार यो सम्पूर्ण चराचर जगत्लाई ढाकेर राखेको छ । त्यस्तो ब्रह्मतत्त्वलाई जसले ज्ञान गराइदियो । त्यस्ता गुरुलाई म नमस्कार गर्दछु ।

कुनै पनि विषयको ज्ञान गुरुविना हुन सक्तैन। घटपटादि विषयको ज्ञान गरेजस्तो ब्रह्मज्ञान होइन । घटपटादिको ज्ञान सामान्य गुरुबाट पनि हुन सक्तछ भने ब्रह्मको ज्ञान श्रोत्रिय ब्रह्मनिष्ठ गुरुदेखि बाहेक अरूबाट हुन सक्तैन। ब्रह्मज्ञानकालागि सर्वप्रथम गुरूपसत्ति गर्नुपर्दछ। शिष्यले समिधा हातमा लिएर गुरुकहाँ जानुपर्दछ। मुण्डकोपनिषद्ले यही निर्देश गरेको छ। जस्तै–

**परीक्ष्य लोकान्कर्मचितान्ब्राह्मणो निर्वेदमायान्नास्त्यकृतः कृतेन ।**
**तद्विज्ञानार्थं स गुरुमेवाभिगच्छेत् समित्पाणिः श्रोत्रियं ब्रह्मनिष्ठम् ॥**

*– मु.उ. १।२।१२*

अर्थात् कर्मद्वारा प्राप्त भएका लोकहरूको परीक्षा गरेर ब्राह्मण विरक्त बनोस्। किनभने यो संसार अनित्य हो। यस अनित्य संसारबाट मोक्ष प्राप्ति हुँदैन भन्ने जानेर नित्यवस्तु अर्थात् ब्रह्म जान्नकालागि मुमुक्षु पुरुष हातमा समिधा लिएर श्रोत्रिय ब्रह्मनिष्ठ गुरुका शरणमा जाओस् ।

आद्यजगद्गुरु श्रीशङ्कराचार्यले गुरुशब्दको निर्वचन यसरी गर्नु भएको छ । जस्तै–

**गूढा विद्या योगमाया देहमज्ञानसम्भ्रमम् ।**
**उदयः स्वप्रकाशेन गुरुशब्देन कथ्यते ॥**

अर्थात् गूढरूपमा लुकेर बसेकी विद्या योगमाया हुन् । यो शरीर अज्ञानबाट उत्पन्न भएको हो । अज्ञानबाट उत्पन्न शरीरका भित्र रहेको अन्धकारलाई हटाएर जुन ब्रह्मचैतन्यस्वप्रकाशको उदय गराउँछ त्यही नै गुरुशब्दवाच्य हो ।

**गुकारस्त्वन्धारश्च रुकारस्तेज उच्यते ।**
**अज्ञानग्रासकं ब्रह्म गुरुरेव न संशयः ॥**

– *गुरुगीता*

अर्थात् गुकारको अर्थ अन्धकार हो । रुकारको अर्थ प्रकाश हो । त्यही अन्धकार नाश गरिदिने गुरु नै ब्रह्म हुन् ।

गुरुविना ज्ञान हुनसक्तैन । जस्तोसुकै अवतारी पुरुष भए पनि गुरुबाट विद्या प्राप्त गर्नैपर्दछ । गुरुमुखी नभईकन विद्यामा चमक आउँदैन । चमक नआउने मात्रै नभएर त्यस्तो विद्यामा सिद्धि पनि हुँदैन । त्यस्तो विद्याबाट कोही पनि विद्वान् हुन सक्तैन र अझ श्रोत्रिय ब्रह्मनिष्ठ गुरुविना त ब्रह्मज्ञान कुनै हालतमा पनि हुन सक्तैन । यदि कसैले आफ्नू महत्ता देखाउन मैले गुरुविना नै ज्ञान प्राप्त गरेको हुँ भन्दछ भने त्यसबाट उसको महत्ता देखिँदैन, बरू लघुता नै देखिन्छ ।

गुरु कस्तो हुनु पर्छ भन्ने सम्बन्धमा श्रीशङ्कराचार्यले स्पष्ट शब्दमा गीताको आफ्नू भाष्यमा लेख्नुभएको छ – **'असम्प्रदायवित् सर्वशास्त्रविद् अपि मूर्खवद् एव उपेक्षणीयः ।'** अर्थात् जुन

व्यक्तिले गुरुसम्प्रदाय अनुसार विधिपूर्वक गुरुसँग विद्या पढेको छैन भने त्यस्तो व्यक्ति सबै शास्त्रमा निष्णात भए पनि मूर्ख जस्तै ठानेर त्यसलाई उपेक्षा गर्नुपर्दछ ।

श्रीशङ्कराचार्यको भनाइ अनुसार त्यस्तो व्यक्तिलाई गुरु बनाएर विद्या पढ्नुहुँदैन । त्यस्ता गुरुसँग पढेको विद्याबाट सिद्धि प्राप्त हुँदैन ।

भगवान् श्रीरामले ब्रह्मर्षि परमज्ञानी वसिष्टसँग योगवासिष्ठ आदि ग्रन्थहरू पढ्नुभएको थियो । भगवान् श्रीकृष्णले काश्यगोत्रका सान्दीपनि गुरुका गुरुकुल उज्जयिनीमा गएर पढ्नुभएको थियो । आद्यजगद्गुरु श्रीशङ्कराचार्य जस्तो ८ वर्षको उमेरमा नै सबै शास्त्र जानिसकेका व्यक्तिले पनि श्रीगोविन्दपादलाई गुरु बनाएर आफ्नू विद्यालाई पूर्णतामा पुऱ्याउनु भएकोथियो । श्रीवेदव्यासले अन्त्यमा देवर्षि श्रीनारदलाई गुरु बनाएर श्रीमद्भागवत महापुराणको रचना गर्नुभएको थियो । गुरुविना ज्ञान नहुने कुरा यिनै उदाहरणहरूबाट पनि स्पष्ट हुन्छ ।

गुरुका सम्बन्धमा तन्त्रसारमा उल्लेख भएको छ । जस्तै–

**गुकारः सिद्धिदःप्रोक्तो रेफः पापस्य हारकः ।**
**उकारो विष्णुरव्यक्तस्त्रितयात्मा गुरुः परः ॥**

अर्थात् गुकार सिद्धिदाता हो । रेफ पापनिवारक हो । उकार अव्यक्त विष्णु हुन् । यी तीनै तत्त्वको समष्टिरूप नै परात्पर गुरुतत्त्व हो ।

गुरु शब्दको निर्वचन गर्दा गुं रौतीति हुन्छ । गृ धातुबाट कु र उत्त्व भएर गुरु शब्द बन्दछ । गुरु शब्दका धेरै अर्थ हुन्छन् । तर यस प्रसङ्गमा चाहिँ गुरु शब्दले ब्रह्मविद्या प्रदान गर्ने गुरुलाईमात्रै लिएको छ । शास्त्रहरूमा ज्ञानदाता गुरुलाई परब्रह्म नै मानिएको छ । जस्तै–

**गुरुर्ब्रह्मा गुरुर्विष्णुर्गुरुर्देवो महेश्वरः ।**
**गुरुः साक्षात् परब्रह्म तस्मै श्रीगुरवे नमः ॥**

– *गुरुगीता*

अर्थात् गुरु भनेका ब्रह्मा हुन्, विष्णु हुन् र महेश्वर हुन् । त्यतिमात्रै नभएर गुरु साक्षात् परब्रह्म नै हुन् । त्यस्ता गुरुलाई म नमस्कार गर्दछु ।

यसैगरेर सर्ववेदान्तसारमा पनि गुरुका बारेमा उल्लेख गरिएको छ । जस्तै–

**अविद्याहृदयग्रन्थिबन्धमोक्षो यतो भवेत् ।**
**तमेव गुरुरित्याहुर्गुरुशब्देन योगिनः ॥**

अर्थात् अविद्या नाश गरेर ब्रह्मको ज्ञान गराउने गुरुलाई गुरु शब्दले जनाउँछ ।

भागवतमा गुरु शब्दको निर्वचन यसरी गरिएको छ । जस्तै–

**तस्माद् गुरुं प्रपद्येत जिज्ञासुः श्रेय उत्तमम् ।**
**शाब्दे परे च निष्णातं ब्रह्मण्युपशमाश्रयम् ॥**

– *भा. ११।३।२१*

अर्थात् त्यसकारण जुन मान्छे परम कल्याण अथवा ब्रह्मज्ञानको जिज्ञासु छ, त्यसले गुरुका शरणमा जानुपर्दछ । गुरु वेदमा निष्णात र परब्रह्ममा पनि परिनिष्ठित तत्त्वज्ञानी हुनुपर्दछ । त्यतिमात्रै नभएर त्यस्ता तत्त्वज्ञानी गुरु शान्तचित्त भएका र व्यावहारिक प्रपञ्चबाट पनि माथि उठेका हुनुपर्दछ ।

भगवान् श्रीकृष्णले गुरुको महत्त्व यसरी व्यक्त गर्नुभएको छ । जस्तै–

**आचार्यं मां विजानीयान्नावमन्येत कर्हिचित् ।**
**न मर्त्यबुध्याऽसूयेत सर्वदेवमयो गुरुः ॥**

*– भागवत ११।१७।२७*

अर्थात् हे उद्धव ! तिमी मलाई आचार्य भनेर जान । मलाई यो मान्छे नै त हो भनेर हेलाँ नगर । किनभने आचार्य अर्थात् गुरु सर्वदेवमय हुन्छन् ।

विद्या र मन्त्रदान गर्ने ब्राह्मणलाई नै आचार्य अथवा गुरु भनेर शास्त्रहरूमा उल्लेख गरेको पाइन्छ ।

**विद्यां श्रुत्वा ये गुरुं नाद्रियन्ते प्रत्यासन्ना मनसा कर्मणा च ।**
**तेषां पापं भ्रूणहत्याविशिष्टं तेभ्यो नान्यः पापकृच्चास्ति लोके ॥**

*– महाभारत*

अर्थात् विद्यादाता गुरुलाई जसले आदर गर्दैन । मन र वचनले गुरूप्रति समर्पित हुँदैन भने त्यसलाई भ्रूणहत्या गरेको पाप लाग्दछ । त्यो सरह पाप गर्ने यो संसारमा अरू कोही पनि हुँदैन । यसरी विद्यादाता गुरुलाई हेलाँ गर्दा लाग्ने पापका बारेमा महाभारतमा उपर्युक्त अनुसार उल्लेख गरेको पाइन्छ ।

अवधूतशिरोमणि दत्तात्रेयका शरीरसमेत गरेर आफैंले बनाएका २५ गुरुहरू थिए । ती सबैबाट उहाँले शिक्षा लिनुभएको थियो । उहाँ भगवान्कै अंश मानिनुहुन्छ । उहाँले एउटामात्रै गुरुका भरमा नपरेर धेरैथरी गुरुहरू बनाउनुपर्छ भनेर राजा यदुलाई भागवतमा उपदेश गर्नुभएको छ । जस्तै–

**न ह्येकस्माद् गुरोर्ज्ञानं सुस्थिरं स्यात् सुपुष्कलम् ।**
**ब्रह्मैतदद्वितीयं वै गीयते बहुधर्षिभिः ॥**

*– भागवत ११।९।३१*

अर्थात् एउटै गुरुबाटमात्रै यथेष्ट र सुदृढ ज्ञान हुन सक्तैन। ज्ञानकालागि आफ्ना बुद्धिले पनि धेरै कुराहरू गर्नु र शोच्नु आवश्यक छ। यसैकारणले नै ऋषिमुनिहरूले एकमात्र अद्वितीय ब्रह्मका बारेमा विभिन्न विधाबाट उपदेश गर्नुभएको छ। विभिन्न विषयहरूका धेरै थरी गुरुहरू माने तापनि ब्रह्मज्ञान गराउने गुरु चाहिँ श्रोत्रिय ब्रह्मनिष्ठ एउटै गुरु हुन्छन् भन्ने यसको तात्पर्य हो।

**नित्यं शुद्धं निराभासं निराकारं निरञ्जनम्।**
**नित्यबोधं चिदानन्दं गुरुं ब्रह्म नमाम्यहम्॥**

– *गुरुगीता*

अर्थात् नित्य, शुद्ध, आभासरहित, निराकार, निर्मल, नित्यबोध र चिदानन्द ब्रह्मरूप गुरुलाई म नमस्कार गर्दछु।

आद्यगुरु श्रीशङ्कराचार्यले आफ्ना ग्रन्थहरूका मङ्गलाचरणमा प्रायः गरेर निर्गुण ब्रह्मलाई नै गुरु मानेर स्तुति गर्नुभएको पाइन्छ। तीमध्ये केही पद्यहरू यस प्रकार छन् –

**येनेरिताःप्रवर्तन्ते प्राणिनः स्वेषु कर्मसु।**
**तं वन्दे परमात्मानं स्वात्मानं सर्वदेहिनाम्॥**
**यस्य पादांशुसम्भूतं विश्वं भाति चराचरम्।**
**पूर्णानन्दं गुरुं वन्दे तं पूर्णानन्दविग्रहम्॥**

– *केनोपनिषद्*

अर्थात् जसका प्रेरणाले प्राणीहरू आ–आफ्ना काममा प्रवृत्त हुन्छन्। सम्पूर्ण प्राणीमात्रका आत्मस्वरूप परमात्मालाई म नमस्कार गर्दछु। जसका प्रकाशपुञ्जबाट निःसृत भएको यो विश्वब्रह्माण्ड जसका आभाबाट देदीप्यमान भइरहेको छ। तिनै पूर्णानन्द गुरुलाई म नमस्कार गर्दछु।

**इतः पूर्णं ततः पूर्णं पूर्णात्पूर्णं परात्परम् ।**
**पूर्णानन्दं प्रपद्येऽहं सद्गुरुं शङ्करं स्वयम् ॥**

– *प्रश्नोपनिषद्*

अर्थात् यताबाट पनि पूर्ण, उताबाट पनि पूर्ण, पूर्णबाट पनि पूर्ण, परभन्दा पनि पर, पूर्णानन्दस्वरूप सद्गुरु स्वयं शङ्करलाई म नमस्कार गर्दछु ।

**प्रज्ञानांशुप्रतानैः स्थिरचरनिकरव्यापिभिर्व्याप्य लोकान् ।**
**भुक्त्वा भोगान्स्थविष्ठान्पुनरपि धिषणोद्भासितान्कामजन्यान् ॥**
**पीत्वा सर्वान्विशेषान् स्वपिति मधुरभुङ् मायया भोजयन्नो ।**
**मायासङ्ख्यातुरीयं परममृतमजं ब्रह्म यत्तन्नतोऽस्मि ॥**

– *माण्डूक्योपनिषद्*

अर्थात् जाग्रत् अवस्थामा जसले आफ्ना चराचरव्यापिनी ज्ञानरश्मिहरू फैलाएर स्थूल विषयहरूको भोग गर्दछ । त्यसपछि स्वप्न अवस्थामा गएर जसले बुद्धिद्वारा प्रकाशित वासनाजनित सम्पूर्ण भोगहरूलाई पान गरेर मायाद्वारा हामी सबै जीवहरूलाई भोग गराउँदछ । त्यसपछि सुषुप्तिमा आफैं आनन्दको भोक्ता भएर गाढा निद्रामा सुत्तछ । त्यही परम अमृत तथा अजन्मा ब्रह्म मायाको तुरीय अर्थात् चौथो सङ्ख्यामा पर्दछ । त्यस्तो तुरीय ब्रह्मलाई म नमस्कार गर्दछु ।

**यो विश्वात्मा विधिजविषयान्प्राश्य भोगान् स्थविष्ठान् ।**
**पश्चाच्चान्यान्स्वमतिविभवाञ्ज्योतिषा स्वेन सूक्ष्मान् ॥**
**सर्वानेतान्पुनरपि शनैः स्वात्मनि स्थापयित्वा ।**
**हित्त्वा सर्वान्विशेषान् विगतगुणगणः पात्वसौ नस्तुरीयः ॥**

– *माण्डूक्योपनिषद्*

अर्थात् जुन सर्वात्मा जाग्रत् अवस्थामा शुभाशुभकर्मजनित स्थूलभोगहरूको भोग गरेर फेरि स्वप्न अवस्थामा आफ्नो बुद्धिद्वारा परिकल्पित सूक्ष्म विषयहरूको आफ्नै प्रकाशद्वारा भोग गर्दछ। त्यसपछि सुषुप्ति अवस्थामा बिस्तारै यी सबैलाई आफैँमा स्थापित गरेर अर्थात् यी सबै विषयहरूलाई त्याग गरेर आनन्दसँग गाढा निद्रामा निदाउँदछ। त्यसपछि सबै गुणहरूलाई छोडेर गुणातीत तुरीय अवस्थामा अवस्थित हुन्छ। त्यस्ता परब्रह्म परमात्माले हामीहरू सबैको रक्षा गरून्।

गुरुका बारेमा गुरुगीताबाट केही श्लोकहरू तल उद्धृत गरिन्छन्। जस्तै–

**अज्ञानतिमिरान्धस्य ज्ञानाञ्जनशलाकया।**
**चक्षुरुन्मिलितं येन तस्मै श्रीगुरवे नमः॥**

– *गुरुगीता*

अर्थात् अज्ञानरूपी अन्धकारले अन्धो भएको मान्छेलाई ज्ञानरूपी गाजलको कोषले आँखा खुलाइदिने गुरुलाई म नमस्कार गर्दछु।

**ब्रह्मानन्दं परमसुखदं केवलं ज्ञान मूर्तिं**
**द्वन्दातीतं गगनसदृशं तत्त्वमस्यादि लक्ष्यम्।**
**एकं नित्यं विमलमचलं सर्वधीसाक्षिभूतं**
**भावातीतं त्रिगुणरहितं सद्गुरुं तं नमामि॥**

– *गुरुगीता*

अर्थात् ब्रह्मानन्दरूप, परमसुखका दाता, केवल ज्ञानस्वरूप, सुखदु:खादिद्वन्द्वभन्दा पर, आकाश समान, तत्त्वमसि आदि महावाक्यहरूका लक्ष्य भएका, एक, नित्य, विमल, अचल, प्राणीमात्रका बुद्धिका साक्षीस्वरूप, भावातीत र गुणातीतरूपमा

रहेका सद्गुरु परब्रह्मलाई म नमस्कार गर्दछु ।

**'नैषा तर्केण मतिरापनेया'** *(क.उ.१।२।९)* अर्थात् तर्कद्वारा बुद्धि प्राप्त हुन सक्तैन। त्यसै गरेर अर्को श्रुतिमा **'आचार्यवान् पुरुषो वेद'** *(छा.उ. ६।१४।२)* अर्थात् आचार्यवान् पुरुष ब्रह्मलाई जान्दछन् । श्रुतिले त्यसो किन भनेको हो ? भन्ने सम्बन्धमा श्रुतिको अर्को मन्त्रले भनेको छ –**'आचार्याद्धैव विद्या विदिता साधिष्ठं प्रापदिति'** *(छा.उ. ४।९।३)* अर्थात् आचार्यबाट प्राप्त भएको विद्या नै सार्थक हुन्छ। यसरी गुरुबाट विद्या प्राप्त गर्नका लागि **'तद्विद्धि प्रणिपातेन परिप्रश्नेन सेवया'** *(गी.४।३४)* अर्थात् गुरुलाई दण्डवत् गरेर प्रश्न गर्नुपर्दछ ।

त्यसरी गुरुलाई खुशी पारेपछिमात्रै ज्ञान प्राप्त गर्न सकिन्छ । यो बाहेक अरू कुनै पनि उपायले गुरुबाट ज्ञान प्राप्त गर्न सकिँदैन ।

श्रीमद्भागवतमा गुरुका महत्ताका बारेमा अत्यन्त महत्त्वकासाथ उल्लेख गरिएको छ। जस्तै –

**अनुव्रतानां शिष्याणां पुत्राणां च परन्तप ।**
**अनापृष्ठमपि ब्रूयुर्गुरवो दीनवत्सलाः ।।**

*– भागवत ३।७।३६*

अर्थात् हे द्विजश्रेष्ठ ! दयालु गुरुहरू आफ्ना प्रिय शिष्यहरू र पुत्रहरूलाई उनीहरूले नसोधेता पनि उनीहरूको भलो हुने कुरा स्वतः भन्ने गर्दछन् । यसरी गुरुहरूले विनाप्रश्न पनि आफ्ना भक्त शिष्य र छोराहरूलाई गुह्य कुराहरू पनि भन्दछन् ।

गुरु र सद्गुरुका बीचमा के फरक छ ? भन्ने सम्बन्धमा बुझ्नु आवश्यक देखिन्छ। आद्यजगद्गुरु श्रीशङ्कराचार्यले आफ्ना ग्रन्थहरूमा धेरैठाउँमा सद्गुरुको उल्लेख गर्नु भएको पाइन्छ।

वर्तमान समयमा पनि प्रायः सद्‌गुरु शब्दको प्रयोग यत्रतत्र भएको देखिन्छ। यदि गुरु र सद्‌गुरुको एउटै अर्थ हुने भए गुरुका अगाडि सत् शब्दको प्रयोग गर्नुको अर्थ रहने देखिँदैन। अतः सद्‌गुरुको अर्थ स्पष्ट बुझ्नु आवश्यक देखिन्छ। सो कुरा ब्रह्मवैवर्त पुराणमा उल्लेख भएको पाइन्छ। जस्तै–

**शिष्यपृष्ठमपृष्ठं वा व्याख्यानं कुरुते च यः।**
**स सद्‌गुरुः सतां श्रेष्ठो योग्यायोग्ये च यः समः॥**

अर्थात् आफ्ना शिष्यहरूले प्रश्न गरे वा नगरे तापनि योग्य र अयोग्यको कुनै विचारै नगरीकन सबै शिष्यहरूलाई बराबर सम्झिएर जुन गुरुले तत्त्वको व्याख्यान गर्दछन् तिनै गुरु सज्जनहरूमध्येमा श्रेष्ठ सद्‌गुरु हुन्।

अन्त्यमा सम्पूर्ण ब्रह्माण्डको सृष्टि, स्थिति र संहार गर्ने विश्वनियन्ता भगवान् श्रीकृष्ण नै सम्पूर्ण चराचर जगत्‌का गुरु हुनुहुन्छ। जगद्‌गुरु श्रीकृष्णलाई नै नमस्कार गर्दै म कलमलाई विराम दिन्छु।

**वसुदेवसुतं देवं कंसचाणूरमर्दनम्।**
**देवकीपरमानन्दं कृष्णं वन्दे जगद्‌गुरुम्॥**

– *गीतापुष्पाञ्जलि*

अस्तु। श्रीकृष्णार्पणमस्तु।

# साधवः साधुभूषणाः

**तितिक्षवः कारुणिकाःसुहृदःसर्वदेहिनाम् ।**
**अजातशत्रवः शान्ताः साधवः साधुभूषणाः ॥**

*– भागवत ३।२५।२१*

अर्थात् जो सहनशील छन् । जो करुणायुक्त छन् । जो सबैका हितचिन्तक छन् । जो कसैसँग पनि शत्रुभाव राख्तैनन् । जो शान्त छन् । जो सरल छन् । जो सज्जनहरूको सम्मान गर्दछन् । ती व्यक्तिहरू नै साधुहरूका आभूषण हुन् ।

**राधसाध संसिद्धौ** भन्ने धातुबाट साध्मा उन प्रत्यय भएर साधु शब्द बन्दछ । साधु भन्नाले महात्मा, ऋषिमुनि, योगी, संन्यासीसमेतलाई जनाउँछ ।

भगवान् श्रीकृष्ण मिथिलामा श्रुतदेव ब्राह्मणका घरमा गएका बेला श्रुतदेवलाई आज्ञाभएकोथियो । सो कुरा भागवतमा वर्णन गरिएको छ । जस्तै–

**ब्रह्मंस्तेऽनुग्रहार्थाय सम्प्राप्तान् विद्धचमून् मुनीन् ।**
**सञ्चरन्ति मया लोकान् पुनन्तः पादरेणुभिः ॥**
**देवाः क्षेत्राणि तीर्थानि दर्शनस्पर्शनार्चनैः ।**
**शनैः पुनन्ति कालेन तदप्यर्हत्तमेक्षया ॥**

*– भागवत १०।८६।५१,५२*

अर्थात् हे ब्रह्मन् ! यी ठूलाठूला ऋषिमुनिहरू तपाईंलाई अनुग्रह गर्न र आफ्ना चरणरजबाट मनुष्यहरूलाई पवित्र पार्न मेरा साथमा आएका छन् । देवता, पुण्यक्षेत्र र तीर्थहरू दर्शन, स्पर्शन,

पूजा र अर्चना आदिबाट धेरै समयपछि मानिसलाई पवित्र पार्दछन् भने साधुपुरुषहरू चाहिँ आफ्ना हेराइबाट नै मानिसहरूलाई तुरुन्तै पवित्र पार्दछन् ।

साधुपुरुषहरू अत्यन्त कष्ट सहेर पनि संसारी मान्छेहरूका भलाइका लागि निरन्तर प्रवृत्त भइरहेका हुन्छन् । यसको पहिलो उदाहरणाका रूपमा देवर्षि नारदलाई लिन सकिन्छ । उहाँ लोककल्याणकालागि भगवान्को पवित्र नाम जप्तै सम्पूर्ण लोकमा निर्वाधरूपले घुम्नेगर्दछन् । भानुभक्तले आफ्नू नेपाली रामायणको शुरुमा नै **'एक् दिन् नारद सत्यलोक् पुगिगया लोक्को गरूँ हित् भनी'** *(भा.रा. बालकाण्ड १)* भनेर लेखेकाछन् । त्यसैगरेर अध्यात्मरामायणको माहात्म्यको प्रथम अध्यायको दोस्रो श्लोकमा पनि यस कुराको उल्लेख भएको छ । जस्तै–

**कदाचिन्नारदो योगी परानुग्रहवाञ्छया ।**
**पर्यटन् सकलान्लोकान् सत्यलोकमुपागतः ॥**

अर्थात् कुनै दिन नारदमुनि अरूको भलाइ गर्ने इच्छाले सम्पूर्ण लोकहरूको भ्रमण गर्दै सत्यलोक पुगेका थिए । देवर्षि नारद रत्नाकरजस्तो डरलाग्दो हत्यारालाई आफ्नू ज्यानको बाजी नै लगाएर सुबाटोमा ल्याउन सफल भएका थिए । नारद मुनिका उपदेशबाटै रत्नाकर पछि गएर रामभक्त महाकवि बाल्मीकि भएका थिए । त्यसैगरेर महात्मा बुद्धले पनि भयङ्कर हत्यारा अङ्गुलीमाललाई पनि सुधारेर बौद्धभिक्षु बनाएकाथिए । त्यसैगरेर अरू साधुपुरुष र ऋषिमुनिहरू पनि जनकल्याणकालागि संसारमा जन्म लिन्छन् र जनकल्याणकै लागि घुमिरहन्छन् । प्राचीन समयका साथै आधुनिक समयमा पनि साधु पुरुषहरूले प्राणीमात्रका

उद्धारकालागि गरेको सत्प्रयास अत्यन्त वन्दनीय छ ।

यसै क्रममा भगवान् विष्णुले आफ्नू साधुपन प्रदर्शन गर्दै भृगुमुनिले आफ्ना छातीमा प्रहार गरेको लातलाई पनि भृगुलाञ्छनका रूपमा आफ्नै छातीमा धारणा गरेर साधुपनको अनुपम उदाहरण प्रस्तुत गर्नुभएको थियो । समुद्रमन्थनका समयमा निस्किएको भयङ्कर कालकूट विषलाई भगवान् शिवले पान गरेर संसारका प्राणीहरूलाई मृत्युबाट बचाउनुभएकोथियो । राजा रन्तिदेव, राजा शिवि, ऋषि दधीचि र राजा हरिश्चन्द्र जस्ता साधुसज्जन महापुरुषहरूले परहितकालागि आफूलाई समर्पित गरिदिएको कुरा हाम्रा पुराणहरूमा वर्णित छन् । आधुनिक युगमा पनि आद्यजगद्गुरु शंङ्कराचार्य, वल्लभाचार्य, रामानुजाचार्य, निम्बकाचार्य, मध्वाचार्य आदि महापुरुषहरूले प्राणीमात्रका कल्याणका लागि स्तुत्य काम गरेकाथिए । हाम्रो वैदिक सनातन धर्म, दर्शन र संस्कृतिलाई जनजनसम्म पुऱ्याउन उनीहरूले गरेका सत्कार्यले नै आज हाम्रो धर्म, दर्शन र संस्कृतिले केवल हाम्रो भूखण्डमा मात्रै नभएर संसारभरि नै फैलिने मौका पाएको छ ।

पूर्वीय दर्शन र धर्मलाई समुद्रपारका देशहरूमा प्रचारप्रसार गर्ने काम सर्वप्रथम स्वामी विवेकानन्दबाट शुरु भएको देखिन्छ । त्यसपछि स्वामी योगानन्द, सन्त मुरारि बापु, रमेशभाइ ओझा, भूपेन्द्र पाण्डे, कृष्णचन्द्र ठाकुर, स्वामी प्रभुपाद, आचार्य रजनीश र अरू पनि धेरै भारतीय साधुहरूबाट हालसम्म पनि अनवरतरूपमा चलिरहेको छ ।

त्यसै गरेर भारतवर्षका भक्त साधुहरूमा सन्त ज्ञानेश्वर, सन्त तुलसीदास, सन्त कबीर, गुरु नानक, सन्त दादु, साध्वी मीरा बाई, भक्त नरसिंह मेहता, सन्त रामकृष्ण परमहंस र

कृपालुहरूको पनि आध्यात्मिक प्रचारप्रसारमा ठूलो देन छ ।

यस क्रममा हाम्रा नेपाली साधुहरूमा डा. स्वामी रामानन्द गिरि, आत्मानन्द गिरि आदि साधुपुरुषहरूले स्वदेश र विदेशमा समेत आध्यात्मिक चेतनाको प्रचारप्रसार गर्ने काम गरिरहेकाछन् ।

त्यसैगरेर स्वदेशमा रहेर जनसाधारणमा आध्यात्मिक चेतना फैलाउने साधुपुरुषहरूमा योगी नरहरिनाथ, प्रा. गोपालनिधि तिवारी, डा.स्वामी प्रपन्नाचार्य, स्वामी कमलनयनाचार्य, स्वामी ज्ञानानन्द सरस्वती आदि सन्तहरू छन् । यीभन्दा पहिलेका नेपालका साधुहरूमा महात्मा बुद्ध, शिवपुरी बाबा, जोस्मणिदर्शनपरम्पराका आदिपुरुष जोस्मणि, वासुकि बाबा, खप्तड बाबा, श्यामचैतन्य बाबा आदि ब्रह्मज्ञानी महात्माहरू थिए । स्वर्गद्वारीका बाबा, दिङ्लाका आबालब्रह्मचारी षडानन्द बाबा र मिर्चैयाका बाबा पनि प्रातःस्मरणीय साधुहरू थिए ।

क्रिश्चियनधर्मावलम्बी भएर पनि सनातन वैदिक धर्ममा धेरै पश्चिमी विद्वान्हरूको आस्था भएको देखिन्छ । तिनीहरूमा म्याक्समूलर, शोपेनहावर, गोल्डस्टकर, रोनाल्ड निक्सन् आदि मुख्यरूपमा देखिन्छन् ।

त्यसैगरी सूफी सम्प्रदायमा हजरत राबिया, हजरत सम्सुद्दिनहबीबुल्ला, राधामोहनलाल, मौलानारूमीसमेत देखिन्छन् । **'अहं ब्रह्मास्मि'** अर्थात् **'अनअलहक'** भनेको अपराधमा मृत्युदण्ड पाएका इस्लामधर्मका प्रसिद्ध सूफीसन्त हुसैन इब्न मन्सूर हलाद र सर्मदसमेत थिए । उनीहरूले उपनिषद्ले बताएको **'अहं ब्रह्मास्मि'** महावाक्यलाई आत्मसात् गरेका थिए । त्यसैकारणले नै उनीहरूलाई त्यसबेलाका क्रूरशासकहरूले अत्यन्त दुःख दिएर मृत्युदण्ड दिएका थिए ।

साधु सज्जन पुरुष कस्तो हुनुपर्छ भन्ने सम्बन्धमा भर्तृहरिले आफ्नू नीतिशतकमा लेखेकाछन् –

**मनसि वचसि काये पुण्यपीयूषपूर्णा–**
**स्त्रिभुवनमुपकारश्रेणिभिः प्रीणयन्तः ।**
**परगुणपरमाणुन्पर्वतीकृत्य नित्यं**
**निजहृदि विकसन्तः सन्ति सन्तः कियन्तः ॥**

अर्थात् मन, वाणी र शरीरमा सुकर्मरूपी अमृतले परिपूर्ण भएका तीनै लोकलाई सेवाद्वारा खुशी पार्ने साधुपुरुषहरू अरूहरूको सानू गुणलाई पनि पर्वतजस्तो ठूलो पारेर आफ्नू हृदयलाई प्रसन्न पार्दछन् । त्यस्ता साधुमहात्मा पाउँन अत्यन्त मुश्किल छ । त्यसरी अरूका दयादाक्षिण्यादि गुणहरूलाई माथि उठाएर आनन्दित हुने पुरुष नै सच्चा सन्त हो र साधु हो ।

साधुहरूको महिमाको वर्णन गर्दै भागवतमा भनिएको छ –

**नह्यम्मयानि तीर्थानि न देवा मृच्छिलामयाः ।**
**ते पुनन्त्युरुकालेन दर्शनादेव साधवः ॥**

*– भागवत १०।४८।३१*

अर्थात् जलका तीर्थहरू, माटो र ढुङ्गा आदिबाट बनेका देवताका मूर्तिहरूको धेरैदिनसम्म श्रद्धापूर्वक सेवा अर्चना गरेपछि तिनीहरूले विलम्ब गरेर मानिसलाई पवित्र गर्दछन् । तर साधुपुरुषहरूले भने दर्शनमात्रले पनि मानिसलाई तुरुन्त नै पवित्र पार्दछन् ।

यसरी साधुहरूका गहना अर्थात् आभूषण भएका महान् साधुहरूको गुणगान गर्दा गुणगान गर्नेको अन्तःकरण शुद्ध हुन्छ र उसले ज्ञान प्राप्त गर्न सक्तछ । जसले यस्ता महान् साधु र ब्रह्मज्ञानीहरूको सेवासत्कार र प्रशंसा गर्छ । त्यसले उनीहरूका आगामी कर्मका

पुण्यहरू प्राप्त गर्दछ । जसले महात्मा ज्ञानी पुरुषहरूको सेवा गर्दैन र उल्टो निन्दा गर्दछ भने त्यसले उनीहरूका आगामी कर्मका पापहरू प्राप्त गर्दछ र सधैँका लागि जन्ममरणको दुश्चक्रमा परेर यसै संसारमा ऊ घुमिरहन्छ । यो कुरा जगद्‌गुरु शंङ्कराचार्यले आफ्नू ग्रन्थ तत्त्वबोधमा उल्लेख गर्नुभएकोछ । अतः पापबाट बचेर पुण्य आर्जन गर्न आफ्नू प्राणैसमेत अर्पण गरेर समाज र राष्ट्रको उत्थानमा लागेका साधु महापुरुषहरूको सत्कार, सेवा र सम्मान गरेर हामी आफ्नू उद्धार गरौँ । यसैमा हाम्रो कल्याण छ ।

भगवान् श्रीकृष्णले साधुहरूका बारेमा गीतामा भन्नुभएको छ । जस्तै–

**अपि चेत्सुदुराचारो भजते मामनन्यभाक् ।**
**साधुरेव स मन्तव्यः सम्यग्व्यवसितो हि सः ॥**

*– गीता ९।३०*

अर्थात् यदि कुनै मान्छे पहिले अत्यन्त दुराचारी थियो र पछि गएर भगवान्‌को अनन्य भावले भजन गरेर भक्त बन्दछ भने त्यस्ता व्यक्तिलाई साधु नै मान्नुपर्दछ । किनभने उसले भगवान्‌को भक्तिभन्दा उत्तम अरू कुनै पनि कुरा छैन भनेर निश्चय गरिसकेको हुन्छ । यसै कोटिमा रत्नाकर र अङ्गुलिमालजस्ता पहिले अपराधी भएर पछि साधु भएका व्यक्तिहरूलाई उदाहरणका रूपमा लिन सकिन्छ ।

मुमुक्षुले के के गर्नुपर्छ भन्ने सम्बन्धमा श्रीमद्भागवतमा राजा निमिलाई नवयोगेश्वरमध्येका एक योगेश्वर प्रबुद्धले बताएकाछन् । जस्तै–

**सर्वतो मनसोऽसङ्गमादौ सङ्गं च साधुषु ।**
**दयां मैत्रीं प्रश्रयं च भूतेष्वद्धायथोचितम् ॥**

*– भागवत ११।३।२३*

अर्थात् पहिले (शरीर, सन्तान, घर, व्यवहार आदिबाट) मनलाई अनासक्त गर्न सिक्नुपर्छ। त्यसपछि साधुहरूको सङ्गत गर्नुपर्छ। त्यसपछि सम्पूर्ण प्राणीमा दया गर्ने, मैत्री राख्ने, विनयी हुने आदि गुणहरू सिक्नुपर्दछ। त्यसपछि क्रमशः उठ्तै गएर सामान्य व्यक्ति पनि महान् साधु बन्नसक्तछ।

भागवतमा राजा रहूगणलाई ब्रह्मज्ञानको उपदेश गर्ने क्रममा ब्रह्मज्ञानी जडभरतले साधुसेवाको महत्त्व देखाउँदै भनेकाछन् –

**रहूगणैतत्तपसा न याति न चेज्यया निर्वपणाद् गृहाद्वा।**
**नच्छन्दसा नैव जलाग्निसूर्यैर्विनामहत्पादरजोऽभिषेकम्॥**

*– भागवत ५।१२।१२*

अर्थात् हे रहूगण ! महापुरुषहरूको चरणरजले स्नान नगरेसम्म खालि तप, यज्ञयागादि कर्म, अन्नदान, अतिथिसेवा, गरीबहरूको सेवा, गृहस्थले गर्ने धर्मानुष्ठान, वेदको अध्ययन, जल, सूर्य, अग्निसमेत देवताहरूको उपासना आदि साधनहरूलेमात्र ब्रह्मज्ञान हुन सक्तैन। ब्रह्मज्ञानकालागि ठूलाठूला श्रोत्रिय ब्रह्मनिष्ठ महापुरुषहरूको सेवा गर्नु पर्दछ।

वल्लभाचार्यले पनि सन्तपुरुषका सम्बन्धमा व्यक्त गर्नु भएको विचार यहाँ प्रस्तुत गर्नु सान्दर्भिक देख्तछु। जस्तै–

**सङ्गःसर्वात्मना त्याज्यः स चेत्त्यक्तुं न सक्यते।**
**स सद्‌भिःसहकर्तव्यः सन्तः सङ्गस्य भेषजम्॥**

अर्थात् आसक्ति सर्वथा त्याज्य हो। तै पनि यदि त्यसलाई सर्वात्मना त्याग गर्न सकिँदैन भने सन्तसाधुपुरुषसँगको आसक्ति राम्रो हो। किनभने सन्त र साधुहरू स्वयमेव आसक्तिका औषधि हुन्।

भागवतमा सन्तपुरुषहरूको महत्त्वको ख्यापन गर्दै भगवान्

श्रीकृष्णले उद्धवलाई बताउनुभएकोछ । जस्तै–

**सन्तो दिशन्ति चक्षूंसि बहिरर्कः समुत्थितः ।**
**देवता बान्धवा सन्तः  सन्त आत्माहमेव च ॥**

– *भागवत ११।२६।३४*

अर्थात् जसरी सूर्यले आकाशमा उदय भएर संसार र आफूसमेतलाई हेर्नसक्नेगरी आँखा दिन्छन् । त्यसैगरेर सन्त तथा साधु पुरुषहरू पनि आफैँलाई र भगवान्समेतलाई देख्नेगरी आँखारूपी ज्ञान प्रदान गर्दछन् । सन्त सबैलाई अनुग्रह गर्ने देवता र हितैषी बन्धु पनि हुन् भनेर भन्न सकिन्छ । यतिमात्रै होइन सन्त ता आफ्ना आत्मा नै हुन् भनेर भन्न सकिन्छ । हे उद्धव ! स्वयं म पनि सबैको कल्याणकालागि सन्तकै रूपमा प्रस्तुत भएको छु । अस्तु । श्रीकृष्णार्पणमस्तु ।

# हृदयग्रन्थिभेदन

हृदयग्रन्थिका सम्बन्धमा विभिन्न शास्त्रहरूमा विभिन्न मतमतान्तरहरू पाइन्छन् । वेद, उपनिषद्, पुराण र धर्मशास्त्रहरूमा यसका बारेमा विशदरूपमा चर्चा भएको पाइन्छ । हृदयग्रन्थिलाई वेदान्तदर्शनले कसरी विवेचना गरेको छ, त्यसको सङ्क्षिप्त चर्चा यहाँ गरिनेछ । मुख्यरूपमा मुण्डकोपनिषद्ले हृदयग्रन्थिका बारेमा चर्चा गरेको पाइन्छ । जस्तै–

**भिद्यते हृदयग्रन्थिश्छिद्यन्ते सर्वसंशयाः ।**
**क्षीयन्ते चास्य कर्माणि तस्मिन्दृष्टे परावरे ॥**

*– मु.उ.२।२।८*

अर्थात् त्यस परावर किंवा कार्यकारणरूप ब्रह्मको साक्षात्कार गरिसकेपछि ज्ञानीको हृदयग्रन्थि समाप्त हुन्छ । सम्पूर्ण संशयहरू नाश भएर जान्छन् । सम्पूर्ण कर्महरू पनि समाप्त हुन्छन् । भाष्यकार आद्यजगद्गुरु श्रीशङ्कराचार्यले आफ्नू भाष्यमा यसको विशदरूपमा चर्चा गर्नुभएको छ । उहाँले हृदयग्रन्थिलाई **'अविद्यावासनाप्रचयो बुद्धयाश्रयः कामः'** अर्थात् बुद्धिमा रहेको अविद्यावासनामय काम भनेर लेखनुभएको छ । **'छिद्यन्ते सर्वसंशयाः छिद्यन्ते सर्वज्ञेयविषयाःसंशया लौकिकानामामरणात्तु गङ्गास्रोतोवत्प्रवृत्ता विच्छेदमायान्ति'** अर्थात् जीवनभरि नै गङ्गाको प्रवाह जस्तो गरेर अनवरत प्रवृत्त भइरहने लौकिक पुरुषहरूका ज्ञेयपदार्थविषयक सम्पूर्ण संशयहरू छिन्नभिन्न हुन्छन् । **'अस्य विच्छिन्नसंशयस्य निवृत्ताविद्यस्य यानि विज्ञानोत्पत्तिसहभावीनि च क्षीयन्ते कर्माणि ।'** अर्थात्

जसका संशयहरू नष्ट भएका छन् र जसको अविद्या निवृत्त भएको छ त्यसप्रकारका पुरुषहरूको विज्ञानोत्पत्तिभन्दा पहिलेका जन्महरूका सञ्चितकर्महरू सबै नाश हुन्छन्। तर वर्तमान जन्म प्रारम्भ गर्ने प्रारब्धकर्म भने नाश हुँदैन। **'तस्मिन्सर्वज्ञेऽसंसारिणि परावरे परं च कारणात्मनावरं च कार्यात्मना तस्मिन्परावरे साक्षादहमस्मीति दृष्टे संसारकारणोच्छेदान्मुच्यते'** अर्थात् सर्वज्ञ, असंसारी, परावर, कारणरूपले पर अर्थात् ठूलो र कार्यरूपले अवर अर्थात् सानो भएको साक्षात् परब्रह्म नै मै हुँ भनेर सर्वत्र देख्न थालेपछि संसारमा जन्ममृत्युको दुश्चक्र सिर्जना गर्ने अविद्याको नाश हुन्छ। त्यस अवस्थामा पुगेका पुरुषको मुक्ति हुन्छ।

यही मन्त्र श्रीमद्भागवतमा पनि धेरै ठाउँमा आएको देखिन्छ। जस्तै–

**भिद्यते हृदयग्रन्थिश्छिद्यन्ते सर्वसंशयाः।**
**क्षीयन्ते चास्य कर्माणि दृष्ट एवात्मनीश्वरे॥**

*– भागवत १।२।२१*

अर्थात् आत्मस्वरूप भगवान् साक्षात्कार हुने बित्तिकै हृदयका ग्रन्थिहरू छिन्नभिन्न भएर जान्छन्। सम्पूर्ण संशयहरू नाश हुन्छन्। कर्मबन्धनहरू पनि क्षीण भएर जान्छन्।

श्रीधर स्वामीले यस मन्त्रको व्याख्या गर्नु भएको छ। जस्तै – **'हृदयमेवग्रन्थिश्चिज्जडग्रन्थनरूपोऽहङ्कारः। अतएव सर्व संशया असम्भावनादिरूपाः। कर्माण्यनारब्धफलानि। आत्मनि स्वरूपभूते ईश्वरे दृष्टे साक्षात्कृते सति।'** अर्थात् आफ्नै आत्मामा स्वरूपभूत ईश्वरको साक्षात्कार गरेपछि भित्री हृदयमा रहेको चित् र जडको गाँठो अर्थात् अहङ्कार समाप्त हुन्छ। असम्भावना र

विपरीतभावनाहरूसमेतका संशयहरू नाश हुन्छन्। कर्मफल दिन आरम्भ नभएका सम्पूर्ण सञ्चितकर्महरू नाश भएर जान्छन्।

भागवतमा सोही मन्त्र फेरि आएको छ। जस्तै –

**भिद्यते हृदय ग्रन्थिश्छिद्यन्ते सर्वसंशयाः।**
**क्षीयन्ते चास्य कर्माणि मयि दृष्टेऽखिलात्मनि ॥**

*– भागवत ११।२०।३०*

अर्थात् सर्वात्मा मलाई साक्षात्कार गरिसकेपछि मनुष्यका हृदयको गाँठो फुकेर जान्छ। संशयहरू सम्पूर्ण नाश हुन्छन्। कर्मवासनाहरू पनि समाप्त हुन्छन्।

यस मन्त्रको व्याख्या श्रीधर स्वामीले यसरी गर्नु भएको छ। जस्तै – **'हृदयमेव ग्रन्थिरहङ्कारस्तत्पूर्वकाश्च सर्वे संशया असम्भावनादयः। कर्माण्यनारब्धफलानि संसारहेतुभूतानि च।'** अर्थात् परमात्माको दर्शन पाइसकेपछि मुमुक्षुका हृदयमा रहेको ग्रन्थि नाश हुन्छ। अहङ्कारको आश्रयमा बसेका सम्पूर्ण असम्भावना आदि संशयहरू नाश हुन्छन्। संसारमा जन्मनु र मर्नु आदि सम्पूर्ण कर्मफलहरूको हेतु भएको प्रारब्ध कर्म बाहेकका सम्पूर्ण अरू सञ्चित कर्महरूको समाप्ति हुन्छ।

त्यसैगरेर श्रीमद्भागवतको माहात्म्यमा पनि यस मन्त्रको उल्लेख भएको पाइन्छ। जस्तै –

**भिद्यते हृदयग्रन्थिश्छिद्यन्ते सर्वसंशयाः।**
**क्षीयन्ते चास्य कर्माणि सप्ताहश्रवणे कृते ॥**

*– भा.मा. ५।६५*

अर्थात् सप्ताह श्रवण गर्नाले मानिसका हृदयको गाँठो खुल्दछ। उसका सम्पूर्ण संशय छिन्नभिन्न हुन्छन्। यसका साथै उसका

सम्पूर्ण कर्महरू पनि क्षीण भएर जान्छन् ।

उपर्युक्त अनुसार माण्डूक्योपनिषद्मा भएको **'भिद्यते हृदयग्रन्थि'** भन्ने मन्त्रको र श्रीमद्भागवतमा भएका मन्त्रहरूको समेत सङ्क्षिप्त चर्चा गरियो । यिनका केवल अन्तिम पाउमा मात्रै भिन्नता देखिन्छ । जस्तै– माण्डूक्योपनिषद्को मन्त्रको अन्तिम पाउमा **'यस्मिन्दृष्टे परावरे'** भनेर उल्लेख भएको पाइन्छ । श्रीमद्भागवतको प्रथमस्कन्धको दोस्रो अध्यायको २१ औँ श्लोकको चौथो पाउमा **'दृष्ट एवात्मनीश्वरे'** भन्ने छ भने श्रीमद्भागवतको एकादशस्कन्धको २० औँ अध्यायको ३० औँ श्लोकमा **'मयि दृष्टेऽखिलात्मनि'** भनेर उल्लेख भएको पाइन्छ । त्यसैगरेर भागवतको माहात्म्यको पाँचौँ अध्यायको ६५ औँ श्लोकमा भने **'सप्ताहश्रवणे कृते'** भनेर उल्लेख भएको पाइन्छ । यी सबै मन्त्रहरूका अन्तिम पाउहरूमा केवल शब्दहरू फरक परेका भए तापनि यिनको अर्थमा भने केही फरक छैन ।

माता देवहूतिलाई तत्त्वको लक्षणको उपदेश गर्ने क्रममा महर्षि कपिलले हृदयग्रन्थिभेदनका सम्बन्धमा बताउनु भएको छ । जस्तै –

**ज्ञानं निःश्रेयसार्थाय पुरुषस्यात्मदर्शनम् ।**
**यदाहुर्वर्णये तत्ते हृदयग्रन्थिभेदनम् ॥**

*– भागवत ३।२६।२*

अर्थात् आत्मदर्शनरूप ज्ञान नै मोक्षको कारण हो । त्यसैबाट नै अहङ्काररूपी हृदयग्रन्थिको भेदन हुन्छ । यही कुरा नै उपनिषद् र अरू शास्त्रहरूले पनि बताएका छन् । हे माताजी ! म सोही कुरा तपाईंलाई भन्दछु ।

उपर्युक्त अनुसार हृदयग्रन्थिको भेदनका बारेमा उल्लेख

गरियो। तर यसकालागि परमात्माको दर्शन पाउनु आवश्यक छ। सर्वप्रथम मुमुक्षुले आफ्ना संशयहरूको नाश गर्नकालागि गुरुबाट श्रद्धापूर्वक तत्त्वमस्यादि महावाक्यहरूको श्रवण गर्नुपर्छ। अनि मनन र निदिध्यासन गर्नुपर्छ। त्यसपछिमात्रै ब्रह्मज्ञान हुनसक्तछ। ब्रह्मज्ञान अर्थात् बोध प्राप्त भएपछि अनन्त जन्मदेखि हृदयमा थुप्रिएर रहेका सम्पूर्ण वासनाहरूको नाश हुन्छ।

हृदयग्रन्थिभेदनमा आहारशुद्धिको प्रमुख भूमिका रहने कुरा उपनिषद्ले भनेको छ। जस्तै – '**आहारशुद्धौ सत्त्वशुद्धिः सत्त्वशुद्धौ ध्रुवा स्मृतिः स्मृतिलम्भे सर्वग्रन्थीनां विप्रमोक्षः।**' *(छा.उ.७।२६।२)* अर्थात् खानापिनाको शुद्धिबाट अन्तःकरणको शुद्धि हुन्छ। अन्तःकरणको शुद्धि भएपछि निश्चल स्मृति हुन्छ। स्मृति निश्चल भएपछि सम्पूर्ण ग्रन्थिहरू समाप्त हुन्छन्।

यसरी हृदयग्रन्थिभेदनकालागि सात्त्विक तथा शुद्ध आहारको पनि प्रमुख भूमिका रहेको देखिन्छ। अन्नबाटै मन बन्ने कुरा श्रुतिले पनि भनेको छ। जस्तै – '**अन्नमयं हि सोम्य मनः।**' *(छा.उ.६।५।४)* अर्थात् हे सौम्य अन्नबाट नै मन बन्दछ।

'**ज्ञानाग्निः सर्वकर्माणि भस्मसात्कुरुते तथा।**' *(गीता ४।३७)* अर्थात् ज्ञानरूपी अग्निले सम्पूर्ण सञ्चितकर्महरू भस्म गरेर डढाउँछ। '**न हि ज्ञानेन सदृशं पवित्रमिह विद्यते।**' *(गीता ४।३८)* अर्थात् ज्ञान समान पवित्र केही पनि छैन। श्रुतिले पनि '**ऋतेज्ञानान्नमुक्तिः**' अर्थात् ज्ञान नभईकन मुक्ति हुँदैन भनेर उद्घोष गरेको छ।

उपर्युक्त अनुसार अन्तःकरणमा रहेका सम्पूर्ण संशयहरू समाप्त भएपछि ब्रह्मज्ञान हुनसक्तछ र त्यसपछि अनन्त जन्मदेखि अन्तःकरणमा जम्मा भएर रहेका सञ्चित कर्महरू नाश भएर जान्छन्। त्यसपछि

हृदयका ग्रन्थिहरू समाप्त हुन्छन् । त्यसपछि जीवले फेरि जन्ममरणको दुश्चक्रमा पर्नुपर्दैन । ब्रह्मजान्ने ब्रह्म नै हुन्छ भनेर श्रुतिले पनि भनेको छ । जस्तै – **'ब्रह्मविद ब्रह्मैव भवति ।'** ब्रह्मज्ञानीका **'न तस्य प्राणा उत्क्रामन्ति अत्रैव समवलीयन्ते ।'** अर्थात् ब्रह्मज्ञानीका प्राणहरूले उत्क्रमण गर्दैनन्, यहीँ नै लीन हुन्छन् । अतः ब्रह्मज्ञान भइसकेपछि जीव शिव हुन्छ । ऊ आनन्दघन चिदानन्दस्वरूप नै भइहाल्दछ । अस्तु । श्रीकृष्णार्पणमस्तु ।

# तुरीयतत्त्व

तुरीय शब्द चारको सङ्ख्या बुझाउने चतुर् शब्दबाट छ प्रत्यय भएर छको ठाउँमा इय भएपछि अगाडिपट्टिको चको लोप भएर बन्दछ। चतुर्बाट नै तुर्य शब्द पनि बन्दछ। यसमा चतुर्बाट यत् प्रत्यय भएर चको लोप भएपछि तुर्य शब्द बन्दछ। यी दुवै शब्दहरूको सामान्य अर्थ चारौँ भन्ने भएता पनि अद्वैतवेदान्तमा भने यसको अर्थ शुद्ध निर्गुण ब्रह्म भन्ने हुन्छ।

तुरीयतत्त्वको विवेचना गर्दा अन्तःकरण अर्थात् बुद्धिका जाग्रत्, स्वप्न र सुषुप्ति अवस्थाहरूको सङ्क्षिप्त विवेचना गरेपछि मात्रै तुरीयको विवेचना गर्न सजिलो हुने देखिन्छ।

जाग्रत् अवस्थामा मन हुन्छ। इन्द्रियहरू हुन्छन्। विषयहरू हुन्छन्। इन्द्रिय र विषयको सम्बन्ध हुन्छ। अविद्या पनि हुन्छ। जाग्रत् अवस्थाको व्यष्टि शरीराभिमानी जीव विश्व हो भने समष्टि शरीराभिमानी जीव विराट् हो।

स्वप्नावस्थामा गएर जाग्रत् अवस्थाको वासनायुक्त मन र अविद्या मात्र रहन्छन्। त्यस अवस्थामा इन्द्रिय, विषय र तिनको सम्बन्ध केही रहँदैन। त्यस अवस्थाको व्यष्टिशरीराभिमानी जीव तैजस हो भने समष्टिशरीराभिमानी जीव हिरण्यगर्भ हो।

सुषुप्ति अवस्थामा मन, इन्द्रिय, विषय र इन्द्रियको सम्बन्ध समेत हुँदैन। त्यस अवस्थामा केवल अज्ञान अर्थात् अविद्यामात्र रहन्छ। सुषुप्तिका दुई प्रकार मानिन्छन्। ती हुन् – १ सुषुप्तिअवस्था र २ सुषुप्तिस्थितिः।

१– सुषुप्ति अवस्थामा अज्ञान वा अविद्यामात्र रहन्छ । त्यस अवस्थामा अन्तःकरण वा मन, विषय, इन्द्रिय र तिनको सम्बन्ध पनि रहँदैन । जीवात्मा पुरीतति नाडीको माध्यमबाट दहराकाशमा पुगेर हराएको हुन्छ । त्यस बेला ऊ निश्चेष्ट हुन्छ । त्यस बेला सुतेको पुरुष कुनै भोगको इच्छा गर्दैन । यो नै आत्माको तेस्रोपाद हो । त्यस बेला सपना पनि देख्तैन । त्यही नै सुषुप्ति हो । त्यो अवस्था एकीभूत प्रज्ञानघन र आनन्दमय हो । त्यो आनन्दभुक् र चेतोमुख पनि हो । यो प्राज्ञ हो र त्यस बेलाको अज्ञानाकारवृत्ति, सुखाकारवृत्ति र साक्ष्याकारवृत्ति साक्षिवेद्य हो । सो कुरा सुषुप्तिबाट बिउँझिएपछि थाहा हुन्छ । त्यस बेलाको व्यष्टिशरीराभिमानी जीव प्राज्ञ अर्थात् प्रकर्षेण अज्ञ हो भने समष्टिशरीराभिमानी जीव ईश्वर हो । सामान्यरूपमा यही सुषुप्ति अवस्थालाई नै धेरैले बुझेको पाइन्छ । तर यसै अवस्थाको अर्को भेदलाई सुषुप्तिस्थिति भनिन्छ ।

२– सुषुप्ति स्थिति सुषुप्तिको परिष्कृत दोस्रो अवस्था हो । यस अवस्थालाई धेरैले जानेको देखिँदैन । यस स्थितिलाई अविद्यारहित अवस्था भनिन्छ । सुषुप्ति अवस्थामा रहेको अविद्या पनि यहाँ पुगेर समाप्त हुन्छ । यस अवस्थामा जीवात्मा परमात्मासँग एकाकार भएर आनन्दको समुद्रमा डुबुल्की मारिरहेको हुन्छ । यस स्थितिको अभिमानी जीवलाई प्राज्ञ अर्थात् प्रकर्षेण ज्ञ भनिन्छ । यस स्थितिमा अविद्या वा अज्ञान केही पनि हुँदैन ।

तुरीयावस्थाका बारेमा वेद, उपनिषद् र पुराणहरूले विशदरूपमा व्याख्या गरेका छन् । माण्डूक्योपनिषद्मा यसरी उल्लेख गरिएको छ – **'नान्तः प्रज्ञं न बहिष्प्रज्ञं नोभयतः प्रज्ञं न प्रज्ञानघनं न प्रज्ञं**

**नाप्रज्ञम् । अदृष्टमव्यवहार्यमग्राह्यमलक्षणमचिन्त्यमव्यपदेश्य-मेकात्मप्रत्ययसारं प्रपञ्चोपशमं शान्तं शिवमद्वैतं तच्चुर्थमन्यन्ते स आत्मा स विज्ञेयः ।'** *(माण्डूक्योपनिषद् आगम ७)* अर्थात् तुरीय न अन्तःप्रज्ञ हो अर्थात् यो सपनाको व्यष्टिजीवको अभिमानी तैजस पनि होइन । यो वहिष्प्रज्ञ अर्थात् जाग्रत् अवस्थाको व्यष्टिजीवको अभिमानी विश्वपनि होइन । न उभयत प्रज्ञ अर्थात् यो अवस्था जाग्रत् र स्वप्नका बीचको अवस्था पनि होइन । न प्रज्ञानघन अर्थात् सुषुप्ति अवस्था पनि होइन । न प्रज्ञ अर्थात् सम्पूर्ण विषयहरूको ज्ञाता पनि होइन । न अप्रज्ञ अर्थात् अचेतन पनि होइन । तर अदृष्ट अर्थात् अदृश्य हो । अव्यवहार्य अर्थात् अदृष्ट भएको हुँदा व्यवहारमा आउँन नसक्ने हो । अग्राह्य अर्थात् कर्मेन्द्रियहरूद्वारा अग्राह्य हो । अलक्षण अर्थात् लिङ्गरहित हो । किन भने कुनै पनि चिन्हद्वारा उसको अनुमान गर्न सकिँदैन । त्यसैकारण पनि ऊ अचिन्त्य अर्थात् शब्दहरूद्वारा अव्यपदेश्य अथवा शब्दहरूद्वारा अकथनीय हो ।

त्यसैगरेर त्यो तुरीयतत्त्व एकात्मप्रत्ययसार अर्थात् जाग्रत् आदि अवस्थाहरूमा उही आत्मा अन्वयरूपले रहेकोछ । त्यो तुरीयतत्त्व अव्यभिचारी प्रत्यय हो । तुरीयतत्त्वको ज्ञान पाउँन केवल एक आत्मप्रत्यय नै सार हो अर्थात् प्रमाण हो । त्यसैलाई तुरीय एकात्मप्रत्ययसार भनिन्छ ।

**'न अन्तःप्रज्ञ'** भनेर जाग्रदादि अवस्थाहरूको धर्मलाई निषेध गरिएको हो । वासनामय बुद्धियुक्त त्यो स्वप्नअवस्था वासनाले क्रीडा गर्ने स्थान हो । फेरि **प्रपञ्चोपशमम्** आदिले जाग्रदादि अवस्थाहरूको धर्मको अभाव देखाइएको हो । यसैकारण त्यो शान्त अर्थात् अविकारी हो । त्यो तुरीय अद्वैत अर्थात् भेदरूप विकल्पले रहित हो । त्यसैकारण

त्यो शिव हो । त्यो तुरीय चौथो हो । त्यो तुरीयतत्त्वको प्रतीति वा ज्ञान पूर्वोक्त जाग्रदादि तीन पादहरूभन्दा विलक्षण छ । त्यही आत्मा हो र ज्ञातव्य अर्थात् जान्नुपर्ने पनि त्यही तुरीय हो । यसलाई अन्य श्रुतिहरूले पनि **'न हि विज्ञातुर्विज्ञातेर्विपरिलोपो विद्यते ।'** *(बृ.उ. ४।३।३०)* अर्थात् जान्नेको जान्नेपन लोप हुँदैन भनेको छ । आत्मालाई त्यसै श्रुतिले फेरि **'अदृष्टो द्रष्टा'** *(बृ.उ.३।७।२३)* र **'न हि द्रष्टुर्दृष्टेर्विपरिलोपो विद्यते ।'** *(बृ.उ. ४।३।२३)* अर्थात् अदृश्य भएर पनि देख्तछ । द्रष्टाको दृष्टि लोप हुँदैन भनेर भनेको छ । त्यसलाई जानेपछि मात्रै द्वैतभावको अभाव हुन्छ ।

यसै कुरालाई अझ स्पष्ट पार्दै गौडपादाचार्यले माण्डूक्यकारिकामा भन्नु भएको छ । जस्तै –

**निवृत्ते सर्वदुःखानांमीशानः प्रभुरव्ययः ।**
**अद्वैतः सर्वभावानां देवस्तुर्यो विभुःस्मृतः ॥**

*– माण्डूक्यकारिका आ.१०*

त्यो तुरीय आत्मा प्राज्ञ, तैजस र विश्वरूप सम्पूर्ण दुःखहरूको निवृत्ति गर्न समर्थ छ । त्यो तुरीय अविकारी छ । सबै पदार्थहरूको अद्वैतरूप यो तुरीय आत्मा हो । यसै तुरीय आत्मालाई नै देव र व्यापक पनि मानिएको छ । स्थूलदृष्टिले हेर्दा प्राज्ञ र तुरीय एकैजस्तो लाग्दछ, तर सूक्ष्मदृष्टिले विचार गर्दा प्राज्ञ र तुरीयमा ठूलो अन्तर देखिन्छ । तुरीयको वर्णन गर्ने प्रसङ्गमा गौडपादाचार्यले प्राज्ञ र तुरीयको भिन्नता देखाउनुका साथै प्राज्ञको कारणबद्धता, तुरीयमा तत्त्वको अग्रहण र अन्यथाग्रहणरूप बन्धन किन सिद्ध हुँदैनन् ? भन्ने सम्बन्धमा पनि निम्न कारिकाद्वारा वर्णन गर्नुभएको छ । जस्तै –

**नात्मानं च परांश्चैव न सत्यं नापि चानृतम् ।**
**प्राज्ञ किञ्चन संवेत्ति तुर्यं तत्सर्वदृक्सदा ॥**

*– माण्डूक्यकारिका आगम १२*

अर्थात् प्राज्ञ न आफूलाई जान्दछ न अरूलाई नै जान्दछ । न सत्यलाई जान्दछ न असत्यलाई नै जान्दछ। तर तुरीय भने सर्वदा सर्वदृक् अर्थात् सर्वद्रष्टा साक्षीका रूपमा रहन्छ ।

यसरी विचार गर्दा द्वैतको अग्रहीता प्राज्ञ र तुरीयमा समानता देखिन्छ तर प्राज्ञ बीजस्वरूप निद्राले युक्त छ भने तुरीयमा त्यो बीजस्वरूप निद्रा विद्यमान छैन । सारांशमा भन्ने हो भने तुरीयमा सपना र सुषुप्ति समेत दुवै रहँदैनन् ।

मैले शुरुमा नै सुषुप्तिको चर्चा गर्ने सन्दर्भमा अवस्था र स्थिति गरेर सुषुप्ति दुई प्रकारको भएको उल्लेख गरिसकेको छु । गौडपादाचार्यले सुषुप्तिको त्यही उच्च स्थितिलाई नै तुरीय भन्नुभएको छ । त्यो तुरीय पद कसरी प्राप्त हुन्छ भन्ने सम्बन्धमा आफ्नू कारिकामा उहाँ लेख्नु हुन्छ । जस्तै –

**अन्यथा गृह्णतः स्वप्नो निद्रा तत्त्वमजानतः ।**
**विपर्यासे तयो क्षीणे तुरीयं पदमश्नुते ॥**

*– माण्डूक्यकारिका आगम १५*

अर्थात् अन्यथाग्रहण अथवा डोरीमा सर्प देख्नु जस्तै भ्रमज्ञान जाग्रत् अवस्था र स्वप्न अवस्थामा हुन्छ। हुँदै नभएको सर्प डोरीमा देख्नु र हुँदै नभएको संसारको मिथ्याज्ञान जाग्रत् अवस्थामा हुनु एकै हो । स्वप्न अवस्थामा पनि नभएका कुरा देख्नु नै अन्यथा ग्रहण हो । यहाँ स्वप्न शब्दले जाग्रत् र स्वप्न दुवै अवस्थालाई लिएको छ । त्यसैकारण जाग्रत्को विश्व र स्वप्नको तैजस एकै

कोटिमा पर्न आउँछन् । यिनको विपरीत सुषुप्ति अवस्था भने केही कुरा पनि थाहा नपाउने अज्ञानको अवस्था हो । यस सुषुप्ति अवस्थाको प्राज्ञले आफूलाई र अरूलाई पनि जान्दैन । यसरी यी कार्यकारणरूप स्थानहरूको अन्यथाग्रहण र तत्त्वको अग्रहणरूप विपरीत धर्महरूको नाश परमार्थतत्त्वको ज्ञान भएपछि हुन्छ । जाग्रत्, स्वप्न र सुषुप्ति समेत तीनै अवस्थाहरू तत्त्वज्ञान भएपछि समाप्त हुन्छन् । त्यसपछि मात्रै तुरीयपद प्राप्त हुन्छ । त्यस अवस्थामा माथि उल्लेख भएका जाग्रत्, स्वप्न र सुषुप्ति समेतका कुनै पनि बन्धनहरू नहुने हुँदा पुरुष तुरीयमा निश्चित भएर रहन्छ । तुरीय भनेको सम्पूर्ण मायिक बन्धन र भ्रमबाट माथि रहेको स्थिति हो भनेर जान्नु पर्दछ ।

उपर्युक्त अनुसार तुरीयको सम्बन्धमा माण्डूक्योपनिषद् र माण्डूक्यकारिकामा उल्लेख भएका कुराहरूको सङ्क्षिप्तरूपमा विवेचना गरियो यसै कुरालाई योगवासिष्ठमा उल्लेख भएअनुसार पनि केही चर्चा गर्नु सान्दर्भिक हुने ठान्दछु । योगवासिष्ठमहारामायणको निर्वाणप्रकरणको पूर्वार्धको १२४ सर्गमा ब्रह्मर्षि वसिष्ठले तुरीयपदका बारेमा रामलाई उपदेश गर्नुभएको छ । रामले गुरु वसिष्ठसँग तुरीय पदका बारेमा सोध्नु भएपछि गुरु वसिष्ठले भन्नु भएको पाइन्छ । जस्तै –

**अहंभावानहंभावौ त्यक्त्वा सदसती तथा ।**
**यदसक्तं समंस्वच्छं स्थितं तत्तुर्यमुच्यते ॥**

*– यो. वा. निर्वा. १२४/२३*

अर्थात् अहंभाव, अनहंभाव, सत् र असत्भन्दा जुन पृथक् छ, जुन स्वच्छ र समरूपले स्थित छ, त्यही शुद्ध चित्लाई तुर्य भनिन्छ ।

यसै तुरीयपदलाई अझ स्पष्ट पार्दै रामलाई गुरु वसिष्ठ भन्नुहुन्छ। जस्तै –

**या स्वच्छा समता शान्ता जीवन्मुक्तव्यवस्थितिः।**
**साक्ष्यवस्था व्यवहृतौ सा तुर्यकलनोच्यते॥**

*– यो.वा.निर्वा.१२४।२४*

अर्थात् जीवन्मुक्तहरूको जुन स्वच्छ, सम र शान्त अवस्था हुन्छ। यसै अवस्थालाई व्यवहारकालमा साक्षीको अवस्था पनि हो भनेर भनिन्छ।

तुरीय अवस्था कुन कुन अवस्थाहरू पार गरेपछि प्राप्त हुन्छ ? भन्ने रामको जिज्ञासामा गुरु वसिष्ठ भन्नुहुन्छ। जस्तै –

**अहङ्कारकला त्यागे समतायाःसमुद्भवे।**
**विशरारौकृते चित्ते तुर्यावस्थोपतिष्ठते॥**

*– यो.वा.निर्वा.१२४।२७*

अर्थात् अहङ्कारको त्याग भएपछि, समता उत्पन्न भएपछि र चित्त गलित भएपछि तुरीय अवस्था प्राप्त हुन्छ।

यसै तुरीयपदका सम्बन्धमा व्याख्या गर्दै रामलाई गुरु वसिष्ठ भन्नुहुन्छ हे राम ! आफू हुनु वा न हुनु यी दुवै अवस्थालाई त्यागेपछि जुन वस्तु शेष रहन्छ त्यो शुद्ध तुरीयपद हो। जुन पद अत्यन्त शुद्ध र निर्मल छ। यो तुरीय अवस्था जाग्रत् होइन। जाग्रत् अवस्थामा इन्द्रियहरू र विषयहरूको सोझै सम्बन्ध रहन्छ। यसबाट रागद्वेष उत्पन्न हुन्छ। तुरीय स्वप्न अवस्था पनि होइन। सपना प्रातिभासिक मिथ्या अवस्था हो। तुरीय सुषुप्ति पनि होइन। सुषुप्ति पूर्णरूपले तमोमय अज्ञानावस्था जडरूप हो। यो तुरीय अवस्था चेतनरूप, उदासीन, शुद्ध र अवस्थात्रयरहित हो। जीवनमुक्त यही तुरीयपदमा

रहन्छ। जो तुरीय पदमा स्थित छ, ऊ शान्त रहन्छ। ऊ तीनै अवस्थाको साक्षी हो। जसको चित्तमा रागद्वेष छ, त्यो तुरीयपदमा स्थित छैन भनेर जान्नु पर्दछ। त्यस्तो व्यक्ति साक्षीभावमा पुग्न सक्तैन र तुरीयपदमा पनि पुग्न सक्तैन।

यसै तुरीय स्थितिका बारेमा विभिन्न शास्त्रहरूमा विशदरूपमा वर्णन गरिएको छ। श्रीमद्भागवतमहापुराणमा पनि यसको प्रशस्त चर्चा गरिएको पाइन्छ। भगवान् श्रीकृष्ण यसबारेमा आफ्ना शिष्य सनत्कुमारहरूलाई बताउनु हुन्छ –

**जाग्रत् स्वप्नः सुषुप्तं च गुणतो बुद्धिवृत्तयः।**
**तासां विलक्षणो जीवः साक्षित्वेन विनिश्चितः॥**
**यर्हि संसृतिबन्धोऽयमात्मनो गुणवृत्तिदः।**
**मयि तुर्ये स्थितो जह्यात् त्यागस्तद् गुणचेतसाम्॥**
**अहङ्कारकृतं बन्धमात्मनोऽर्थविपर्ययम्।**
**विद्वान् निर्विद्य संसारचिन्तां तुर्ये स्थितस्त्यजेत्॥**

– *भागवत ११।१३।२७–२९*

अर्थात् हे ब्रह्मन्! जाग्रत्, स्वप्न र सुषुप्ति यी तीन अवस्था सत्वादिगुण अनुसार हुन्छन्। यी बुद्धिका तीन अवस्था हुन्। यिनैलाई बुद्धिका वृत्तिहरू पनि भनिन्छन्। जीव चाहिँ यी वृत्तिहरूभन्दा विलक्षण छ। यो जीव तीनै अवस्थाको साक्षी हो भनेर शास्त्रहरूले प्रमाणहरूद्वारा निश्चित गरेका छन्। यिनै बुद्धिका वृत्तिहरूद्वारा हुने या बन्धन नै आत्मामा पनि सरेको छ। यसैकारण यी सबैभन्दा विलक्षण म तुरीयतत्त्वमा स्थित रहेर यस बुद्धिका बन्धनलाई परित्याग गरिदेऊ। त्यसपछि मात्रै विषय र चित्तको एकैचोटि त्याग हुन्छ। यो बन्धन अहङ्कारको रचना

हो । यसैले आत्मालाई छोपिदिन्छ । यो बुझेर विरक्त हुनुपर्दछ । जाग्रत्, स्वप्न र सुषुप्ति अवस्थामा अनुगत भएर रहेको शुद्ध चित् तुरीयस्वरूपमा स्थित रहेर विद्वान्ले संसारको चिन्ता छाडिदिनुपर्छ ।

तुरीयतत्त्वका बारेमा श्रीशङ्कराचार्यले आफ्ना भाष्यहरूमा, अरू कृतिहरूमा र फुटकर स्तुतिपद्यहरूमा पनि प्रशस्त उल्लेख गर्नुभएको छ। माण्डूक्योपनिषद् र कारिकाको भाष्यको मङ्गलाचरणमा पनि उहाँले तुरीयतत्त्वलाई नै नमन गर्नुभएको छ। जस्तै –

**मायासङ्ख्यातुरीयं परममृतमजं ब्रह्म यत्तन्नतोऽस्मि ।**
**हित्वा सर्वान्विशेषान्विगतगुणगणः पात्वसौ नस्तुरीयः ॥**

जाग्रत् अवस्थाको अभिमानी व्यष्टिजीव विश्व हो। स्वप्न अवस्थाको अभिमानी व्यष्टिजीव तैजस हो र सुषुप्ति अवस्थाको अभिमानी व्यष्टिजीव प्राज्ञ हो। यिनीहरूलाई क्रमशः लय गर्दै लगेपछि अन्त्यमा गएर तुरीयब्रह्मको प्राप्ति हुन्छ। पहिलेका तीन पादहरू करण अर्थात् साधन हुन् भने प्राप्त गरिने चौथोपाद तुरीय भने साध्य हो। अस्तु। श्रीकृष्णार्पणमस्तु।

# ब्रह्म

ब्रह्म शब्द वृद्धचर्थक बृह् धातुबाट मनिन् प्रत्यय भएपछि नको अकार लोप हुन्छ। ऋको ठाउँमा र भएर ब्रह्म शब्द बन्दछ। व्यापक र वर्धनशील भएको कारण नै ब्रह्म भनिएको हो।

**'बृहत्वाद् बृंहणत्वाच्च तद्रूपं ब्रह्मसंज्ञितम्।'** *(विष्णुपुराण १।१२।५५)* **'बृहत्वाद् बृंह्मणत्वाच्च तस्माद्ब्रह्मेति शब्दितः।'** भनेर हरिवंशपुराणमा पनि भनिएको छ। ब्रह्मलाई वेदान्तमा संसारको अभिन्ननिमित्तोपादान कारण मानिन्छ। **'अस्ति तावन्नित्यशुद्धबुद्धमुक्तस्वभावं सर्वज्ञं सर्वशक्तिसमन्वितं ब्रह्म।'** भनेर आद्यजगद्गुरु श्रीशङ्कराचार्यले ब्रह्मसूत्रको आफ्नू भाष्यमा लेख्नु भएको छ। उहाँले त्यसैगरेर श्वेताश्वतरोपनिषद्को भाष्यमा पनि – **'अथ कस्मादुच्यते ब्रह्म' इत्यारभ्य 'बृंहति बृंहयति तस्मादुच्यते परं ब्रह्म' इति सकृच्छ्रुतस्य ब्रह्मपदस्य निमित्तोपादानरूपेणार्थभेदः श्रुत्यैव दर्शितः।'** *(श्वेताश्वतरोपनिषद् १।३ भाष्य)* भनेर उल्लेख गर्नुभएको छ। यसको अर्थ यसरी यसलाई किन ब्रह्म भनिन्छ ? भन्नेदेखि शुरु गरेर बढेको छ र बढाउँछ, यसैकारण यसलाई परब्रह्म भनिन्छ भनेर श्रुतिमा एकपटक आएको ब्रह्मपदलाई स्वयं श्रुतिले नै निमित्त र उपादानका भेदले अर्थको भेद पनि देखाएको छ।

कुनै पनि वस्तुको निरूपण गर्दा सर्वप्रथम त्यस वस्तुको लक्षण र प्रमाणबाट गर्नुपर्ने कुरा शास्त्रहरूको भनाइ छ। जस्तै **'लक्षण प्रमाणाभ्यां वस्तुसिद्धिर्न तु प्रतिज्ञामात्रेण।'** अर्थात् प्रतिज्ञा

गरेरमात्रै वस्तुको सिद्धि हुँदैन त्यसकालागि लक्षण र प्रमाण चाहिन्छ। त्यसबाट मात्रै वस्तुको सिद्धि हुन्छ। ब्रह्मका बारेमा पनि यही सिद्धान्त लागू हुन्छ। ब्रह्मको निर्वचन कुनै लक्षण र प्रमाणबाट पनि हुन सक्तैन। ब्रह्मलाई **'अवाङ्मनसगोचरः, यतो वाचो निवर्तन्ते अप्राप्य मनसा सह'** भनेर श्रुतिले भनेको छ। तर पनि जिज्ञासुहरूको जिज्ञासा शान्त गर्न शास्त्र र शास्त्रकारहरूले ब्रह्मको लक्षण दिएका छन्।

अद्वैतवेदान्तमा ब्रह्मलाई बुझाउने शास्त्रहरूका साथै उपनिषद्, गीता र ब्रह्मसूत्र समेत गरेर प्रस्थानत्रयी छन्। उपनिषद्लाई श्रुतिप्रस्थान भनिन्छ भने गीतालाई स्मृतिप्रस्थान भनिन्छ। त्यसैगरेर भगवान् वेदव्यासले न्यायप्रस्थानका रूपमा ५५५ सूत्र भएको ब्रह्मसूत्रको रचना गर्नुभएको हो। वेदव्यासले निर्गुण तथा निर्विशेष ब्रह्मको प्रतिपादन गर्ने क्रममा **'अथातो ब्रह्मजिज्ञासा'** भन्ने प्रथम सूत्रबाट शुरु गर्नुभएको छ। साधनचतुष्टयसम्पत्ति पछि कर्मफलको अनित्यता र ज्ञानफल मोक्षको नित्यता थाहा हुन्छ। त्यसपछि मुमुक्षु जिज्ञासुले मोक्षका लागि ब्रह्मको जिज्ञासा गर्दछ। मुमुक्षुलाई ब्रह्म जान्ने जिज्ञासा भइसकेपछि माथि उल्लेख भएजस्तै ब्रह्मका लक्षण र प्रमाणहरू पनि जान्नुपर्ने हुन्छ। लक्षणकालागि वेदव्यासले दोस्रो सूत्र **'जन्माद्यस्य यतः'** भनेर दिनुभएको छ। जसबाट यस जगत्को सृष्टि, स्थिति र लय हुन्छ, त्यही ब्रह्म हो। त्यसपछि ब्रह्मलाई बुझाउने क्रममा ब्रह्मसूत्रमा वेदव्यासले **'शास्त्रयोनित्वात्'** र **'तत्तु समन्वयात्'** भन्ने सूत्र पनि लेख्नुभएको छ। ब्रह्मसूत्र ४ अध्याय १६ अधिकरण र विभिन्न पादहरूमा विभक्त ग्रन्थ हो। निर्विशेष तथा निरुपाधिक ब्रह्मपरक विशालकाय यस ग्रन्थमा श्रीशङ्कराचार्यले अद्वैतब्रह्मपरक

अत्यन्त विद्वत्तापूर्ण प्रौढ समन्वयात्मक भाष्य लेख्नुभएको छ। ब्रह्मको चर्चा गर्ने क्रममा यहाँ ब्रह्मसूत्रका बारेमा सङ्केतसम्म गर्ने धृष्टता गरिएको हो। योभन्दा बढी चर्चा गर्नु यस छोटो लेखमा उपयुक्त हुने देखिँदैन। आफ्नै रचना ब्रह्मसूत्रको यसै **'जन्माद्यस्य यतः'** भन्ने सूत्रलाई नै लिएर वेदव्यासले आफ्नू अन्तिम चूडान्तग्रन्थ श्रीमद्भागवतको रचना गर्नुभएको हो भन्ने विद्वान्‌हरूको भनाइ पाइन्छ। ब्रह्मलाई **'परं सत्य'** का रूपमा भागवतमा लिइएको छ। परं सत्य ब्रह्मको ध्यानात्मक मङ्गलाचरणबाट शुरु गरिएको भागवत महापुराण अन्त्यमा पनि परं सत्यको नै ध्यान गर्दै समाप्त गरिएको छ। ब्रह्मगायत्रीबाट सम्पुटित श्रीमद्भागवतमहापुराणमा सगुण ब्रह्मको आवरणमा निर्गुण ब्रह्मको प्रतिपादन गरिएको छ। यो महापुराण उपनिषद्का महावाक्यहरू **'तत्त्वमसि'** बाट शुरु भएर **'अहं ब्रह्मास्मि'** मा पुगेर समाप्त भएको छ। कथा, साहित्य र भक्तिका आवरणमा यसमा निर्गुण ब्रह्मको नै व्याख्या गरिएको छ। परम ब्रह्मज्ञानी शुकदेव मुनि, तीव्र वैराग्यमा पुगेका म्रियमाण राजा परीक्षित्, परम ज्ञानी सन्त दत्तात्रेय, क्रूरकर्मा यमराज, पशुयोनिका गजेन्द्र हात्ती, हाँस पक्षी, बालक, चित्रकेतु राजाको मरिसकेर जागेको छोरा, दैत्य हिरण्यकशिपु, महापापी अजामिल, महालोभी कदर्य ब्राह्मण, महान्  दाता रन्तिदेव, वेश्या, कुमारी, अनपढ गाउँले गोपी, व्याधा, मनुपुत्री देवहूति, ब्रह्मज्ञानी जडभरत, मृत्युशय्यामा सुतेका भीष्मपितामह, युद्धमैदानमा लड्न तयार मोह तथा शोकग्रस्त अर्जुन, सूतिकागृह कारागारका देवकी र वसुदेव, ज्ञानी उद्धव आदि सबैले श्रीमद्भागवतमा ब्रह्म र अद्वैत वेदान्तको भाषा नै बोलेका देखिन्छन्।

ब्रह्म विनालक्षण र प्रमाण नबुझिने हुँदा अद्वैतवेदान्तका आचार्य धर्मराजध्वरीन्द्रले आफ्ना ग्रन्थमा ब्रह्मको लक्षण र प्रमाणको चर्चा गरेका छन् – **'लक्षणं द्विविधं– स्वरूपलक्षणं तटस्थ लक्षणं चेति। तत्र स्वरूपमेव लक्षणं स्वरूपलक्षणम्, यथा सत्यादिकं ब्रह्मस्वरूपलक्षणम्।' 'सत्यं ज्ञानमनन्तं ब्रह्म।'** *(तै.उ.२।१।१)* **'आनन्दो ब्रह्मेति व्यजानात्।'** *(तै.उ.३।६)* **इति श्रुतेः।'** *(वेदान्तपरिभाषा विषयपरिच्छेद)* अर्थात् ब्रह्मका स्वरूप लक्षण र तटस्थ लक्षण गरेर दुई थरी लक्षणहरू हुन्छन्। ती दुईथरी लक्षणहरूमा जसको स्वरूप नै लक्षण हुन्छ त्यसलाई स्वरूप लक्षण भनिन्छ। श्रुतिले यही कुरा भनेको छ। जस्तै – सत्य, ज्ञान र अनन्त नै ब्रह्म हो। आनन्द नै ब्रह्म हो भनेर उसले जान्यो।

त्यसैगरेर ब्रह्मको तटस्थ लक्षणको पनि शास्त्रकारले उल्लेख गरेका छन् – **'तटस्थलक्षणं तु यावल्लक्षकालमनवस्थितत्वे सति यद्व्यावर्तकं तदेव यथा गन्धवत्वं पृथ्वीलक्षणम्। प्रकृते ब्रह्मणि जगज्जन्मादिकारणत्वम्। अत्र जगत्पदेन कार्यजातं विवक्षितम्। कारणत्वं च कर्तृत्वमतोऽविद्याद्यौ नातिव्याप्तिः।'** *(वेदान्तपरिभाषा विषयपरिच्छेदः)*

अर्थात् जुन लक्षण लक्ष्यको यावत्कालपर्यन्त उस लक्ष्यका साथमा नरहेर लक्ष्यबाट हट्तछ त्यसलाई तटस्थ लक्षण भन्दछन्। त्यस तटस्थ लक्षणले अरू पदार्थबाट त्यस लक्ष्यित पदार्थलाई अलग पनि गर्दछ। जस्तै गन्धले पृथिवीदेखि बाहेक अरू पदार्थलाई व्यावृत्त गर्दछ। यहाँ जगत्को जन्मादिकारण ब्रह्ममा रहन्छ। यो ब्रह्मको तटस्थ लक्षण हो। किनभने जगत्को सृष्टि, स्थिति र प्रलय गर्ने काम अरूबाट सम्भव छैन। सृष्टि आदि काम गर्दा पनि

ब्रह्म स्वरूपलक्षणमा जस्तो तदाकार नभएर कुमालेले घडा निर्माण गरेजस्तो तटस्थ रहेर गर्ने भएको हुँदा यो सृष्टि आदि काम चाहिँ ब्रह्मको तटस्थ लक्षण भित्र पर्दछ ।

गीतामा क्षर, अक्षर, कार्य र कारण ब्रह्म भनेर धेरै थरी ब्रह्मको नाम आएको छ । भगवान् श्रीकृष्णले उपदेश गर्ने क्रममा अर्जुनलाई क्षर, अक्षर हुँदै माथि चढ्दै क्रमशः निष्कल ब्रह्मको उपदेश गर्नुभएको छ । क्षर र अक्षर माथि ईश्वर छन् । तिनै ईश्वरलाई पुरुषोत्तम भनिएको छ । त्यसपछि ज्ञेय अर्थात् जान्नुपर्ने ब्रह्मको बारेमा भगवान् श्रीकृष्णले अर्जुनलाई भन्नुभएको छ । जस्तै –

**ज्ञेयं यत्तत्प्रवक्ष्यामि यज्ज्ञात्वामृतमश्नुते ।**
**अनादिमत्परं ब्रह्म न सत्तन्नासदुच्यते ॥**

*– गीता १३।१२*

अर्थात् जुन जान्न योग्य छ र जसलाई जानेर मान्छेले अमृतत्व प्राप्त गर्दछ । त्यो जान्नुपर्ने वस्तु ब्रह्म हो । त्यो ब्रह्म आदिरहित र अकथनीय छ । त्यस ब्रह्मलाई न सत् नै भन्न सकिन्छ न असत् नै भन्न सकिन्छ ।

यसको व्याख्या गर्दै श्रीशङ्कराचार्य आफ्नू भाष्यमा लेख्नुहुन्छ – ब्रह्मलाई सत्, असत् आदि शब्दहरूद्वारा भन्न सकिँदैन । किनभने कुनै पनि अर्थको प्रकाशनकालागि वक्ताद्वारा बोलिने र श्रोताद्वारा सुनिने सबै शब्दहरू जाति, क्रिया, गुण र सम्बन्धद्वारा सङ्केत ग्रहण गराएर नै अर्थको प्रतीति गराउँदछन् । योभन्दा अरू प्रकारले शब्दको प्रतीति हुन सक्ने देखिँदैन ।

यसरी विचार गर्दा ब्रह्म जातिवाला होइन । यसलाई सत् आदि शब्दहरूद्वारा भन्न सकिँदैन । ब्रह्म निर्गुण भएको कारण

त्यो गुणवान् पनि होइन। यसलाई गुणवाचक शब्दहरूद्वारा व्यक्त गर्न सकिँदैन। ब्रह्म क्रियारहित भएको कारण क्रियावाचक शब्दहरूद्वारा पनि भन्न सकिँदैन। श्रुतिले **'निष्कलं निष्क्रियं शान्तम्।'** *(श्वे.उ.६।१९)* भनेर भनेको छ। एक अद्वितीय, इन्द्रियहरूको अविषय र आत्मरूप भएको कारण त्यो ब्रह्म कसैको सम्बन्धी पनि होइन। त्यसकारण ब्रह्म कुनै पनि शब्दद्वारा भन्न सकिँदैन भनेर गीताले भनेको हो। त्यसैगरी श्रुतिले पनि भनेको छ– **'यतो वाचो निवर्तन्ते अप्राप्य मनसा सह।'** *(तै.उ.२।४।९)*

ब्रह्मका सम्बन्धमा ज्ञेय ब्रह्म र ध्येय ब्रह्म भनेर शास्त्रहरूले बताएका छन्। गीताले ध्येय ब्रह्मका बारेमा ७ औँ अध्यायदेखि १२ औँ अध्यायसम्ममा विभिन्न तरिकाले बताएको छ। १३ औँ अध्यायदेखि १८ औँ अध्यायसम्म नै ज्ञेय ब्रह्मका बारेमा बताइएको छ। त्यसैकारण गीताको १३ औँ अध्यायको १२ औँ श्लोकमा भगवान् श्रीकृष्णले अर्जुनलाई **'ज्ञेयं यत्तत्प्रवक्ष्यामि'** भनेर ज्ञेय ब्रह्मको बारेमा उपदेश गर्नुभएको छ। १३ औँ अध्यायदेखि ज्ञेय ब्रह्मको विस्तृत विवेचना गरिएको छ।

केनोपनिषद्मा प्रथम मन्त्र **'केनेषितम्'** देखि नै ज्ञेय ब्रह्मका बारेमा गुरुशिष्यका बीचमा प्रश्नोत्तरका रूपमा शुरु गरिएको छ। यसमा पनि गीतामा भनिए जस्तै ब्रह्मको निर्वचन हुन नसक्ने कुरा बताइएको छ। जस्तै – **'न तत्र चक्षुर्गच्छति न वाग्गच्छति नो मनो न विद्मो न विजानीमो यथैतदनुशिष्यादन्यदेव तदविदितादथो अविदितादधि। इति शुश्रूम पूर्वेषां ये नस्तद्व्याचचक्षिरे।'** *(केनोपनिषद् १।३)* यस मन्त्रको श्रीशङ्कराचार्यले विस्तृतरूपमा भाष्य लेख्नुभएको छ। **'केनेषितं पतति प्रेषितं मनः।'** बाट शिष्य र

गुरुका बीचमा शुरु भएको प्रश्नोत्तरका सन्दर्भमा नै यो उत्तर आएको छ। त्यस ब्रह्ममा नेत्रेन्द्रिय पुग्न सक्तैन, किनभने आफूमा नै आफ्नू गति हुँदैन। त्यहाँ वाणीको गति पनि हुँदैन। किनभने ब्रह्म ता शब्द र शब्दको प्रयोग गर्ने व्यक्तिको पनि आत्मा हो। वाणी आत्मासम्म पुगेर आत्मालाई विषय गर्न सक्तैन। जसरी आगाले आफैँलाई डढाउन र प्रकाशित गर्न सक्तैन। मन पनि ब्रह्मसम्म पुग्न सक्तैन। मनले आफ्नै बारेमा सङ्कल्पविकल्प गर्न सक्तछ तापनि आफ्नो आत्मा भएको हुँदा ब्रह्ममा पुग्न सक्तैन। ब्रह्म कुनै पनि इन्द्रियको विषय नभएको हुँदा बताउन नसकिने भनेर गुरुले आफ्ना चेलाहरूलाई जबाफ दिएका थिए। किनभने माथिका पङ्क्तिहरूमा उल्लेख गरिए जस्तै जुन वस्तुमा जाति, गुण, क्रियारूप विशेषणहरू हुन्छन्, तिनैलाई शब्दद्वारा व्यक्त गर्न सकिन्छ र त्यही वस्तु नै अरूलाई पनि बताउन सकिन्छ। तर ब्रह्ममा ती कुनै कुरा पनि नभएका हुँदा शिष्यलाई उपदेशद्वारा बताउन सम्भव भएन।

ब्रह्म विदित र अविदितभन्दा पर छ। सम्पूर्ण व्याकृत वस्तु विदित छन्। ती वस्तुभन्दा ब्रह्म पर छ। अव्याकृत अर्थात् प्रकृति अथवा अविद्याभन्दा पनि पर छ। विदित र अविदितभन्दा पर ब्रह्म वा आत्मा मात्रै हुन सक्ने हुँदा शिष्यहरूले आत्मा नै ब्रह्म हो भनेर बुझेका हुन्। **'अयमात्मा ब्रह्म'** (माण्डूक्योपनिषद् २४) **'यत्साक्षादपरोक्षाद्ब्रह्म य आत्मा सर्वान्तरः।'** *(बृहद् उ.३।४।१)* अर्थात् आत्मा नै ब्रह्म हो। जुन ब्रह्म साक्षात् अपरोक्ष छ, जुन आत्मा सर्वान्तर छ।

यसरी विचार गर्दा सर्वात्मा सर्वविशेषरहित चिन्मात्रज्योतिःस्वरूप ब्रह्मको ज्ञान आचार्यको उपदेश परम्पराबाट मात्रै प्राप्त हुन सक्तछ।

ब्रह्मज्ञान तर्क, प्रवचन, मेधा, बहुश्रुत, यज्ञ आदिबाट हुन सक्तैन। यसको तात्पर्य सम्प्रदायगतआचार्यपरम्पराबाट विद्या अध्ययन गरेको गुरुबाट मात्रै विद्या पढ्नुपर्छ। त्यसरी पढेमा मात्रै विद्यामा ओज, चमक र सिद्धि प्राप्त हुन सक्तछ। त्यस्ता गुरुबाट उपदेश सुनेमा नै ब्रह्मज्ञान हुन सक्तछ। सम्प्रदायबाट चलेको गुरुपरम्परामा नपढेको गुरु जतिसुकै शास्त्रवित् अर्थात् विद्वान् भएता पनि त्यस्ता गुरुबाट पढेर विद्या प्राप्त हुनसक्तैन र ब्रह्मज्ञान पनि हुन सक्तैन। आद्यजगदगुरु श्रीशङ्कराचार्यले आफ्नू गीताको भाष्यमा स्पष्टै लेख्नु भएको छ – **'तस्माद् असम्प्रदायवित् सर्वशास्त्रविदपि मूर्खवद् एव उपेक्षणीयः'** *(गीता १३/२ भाष्य)* अर्थात् शास्त्रको परम्परा नजानेको व्यक्ति सम्पूर्ण शास्त्र जान्ने भएता पनि मूर्ख जस्तै उपेक्षणीय हुन्छ।

**'अवाङ्मनसगोचरः'** अर्थात् ब्रह्म मनभन्दा पर छ र वचनभन्दा पनि पर भएको हुँदा कुनै पनि इन्द्रियबाट ब्रह्मको ज्ञान हुन सक्तैन भनेर श्रुतिले भन्न खोजेको देखिन्छ। तब ब्रह्मको साक्षात्कार कसरी गर्ने ? भन्ने जिज्ञासा हुन आउँछ। यस सम्बन्धमा श्रुतिले भनेको छ – **'पराञ्चि खानि व्यतृणत्स्वयम्भूस्तमात् पराङ्पश्यति नान्तरात्मन्। कश्चिद्धीरः प्रत्यगात्मानमैक्षदावृत्तचक्षुरमृतत्त्वमिच्छन्।'** *(कठोपनिषद् २/१/१)* अर्थात् ब्रह्माजीले इन्द्रियहरूलाई बहिर्मुख बनाएर तिनको हनन गरिदिनुभयो। त्यसैकारण इन्द्रियहरू बाह्य वस्तुहरूलाई देख्तछन् तर आफ्नै अन्तरात्मालाई देख्तैनन्। अर्को शब्दमा भन्ने हो भने जीवात्माले बाहिरी पदार्थहरूलाई देख्तछ तर आफ्नै प्रत्यगात्मालाई भने देख्तैन। कुनै कुनै बुद्धिमान् मान्छेले अमरत्वको इच्छाले इन्द्रियहरूलाई नियन्त्रण गरेर आफ्नू प्रत्यगात्मालाई देख्तछ।

श्रुतिको अर्को मन्त्रले पनि मुमुक्षुले ब्रह्मसाक्षात्कार गर्ने समयको

पनि निर्धारण गरेको देखिन्छ । जस्तै –

**यदा सर्वे प्रमुच्यन्ते कामा येऽस्य हृदि श्रिताः ।**
**अथ मर्त्योऽमृतो भवत्यत्र ब्रह्म समश्नुते ॥**

– *कठोपनिषद् २।३।१४*

अर्थात् जुन बेला हृदयमा आश्रित सम्पूर्ण कामनाहरू समाप्त हुन्छन् । त्यसबेला यो मरणधर्मा मान्छे अमर हुन्छ । यसै शरीरबाट नै ऊ ब्रह्मभावमा प्राप्त हुन्छ ।

यसरी विचार गर्दा ब्रह्मसाक्षात्कार गर्न मान्छेले अत्यन्त नै मिहिनेत गर्नुपर्ने देखिन्छ । माथि उपनिषद्ले निर्देशित गरेअनुसार गर्न सकेमा मुमुक्षुले यसै जन्ममा नै ब्रह्मसाक्षात्कार गर्न सक्तछ । जस्तै –

**यस्यामतं तस्य मतं मतं यस्य न वेद सः ।**
**अविज्ञातं विजानतां विज्ञातमविजानताम् ॥**

– *केनोपनिषद् ।२।३*

अर्थात् ब्रह्म जसले जानेको छैन, उसले जानेको हुन्छ । जसले जानेको हुन्छ, त्यसले जानेको हुँदैन । किनभने ब्रह्म जान्नेका लागि जानिँदैन र नजान्नेकालागि जानिन्छ । यस भनाइको तात्पर्य के हो भने ब्रह्म अरू वस्तुहरू जस्तो दृश्य वा इन्द्रियवेद्य न भएको हुँदा त्यो ब्रह्म विषयरूपले जान्न सकिँदैन ।

ब्रह्म वाणीद्वारा गम्य छैन, किनभने वाणीलाई भित्रै बसेर जुन ब्रह्मले नियमन गर्दछ, त्यस ब्रह्मलाई वाणीले विषय नै गर्न सक्तैन । श्रुतिले पनि भनेको छ – **'यो वाचमन्तरो यमयति ।'** *(बृ.उ.३।७।१७)* अर्थात् जसले भित्र बसेर वाणीलाई नियमन गर्दछ । अर्थात् अन्तःकरण अर्थात् मनको नियामक ब्रह्म भएको हुँदा मनले ब्रह्मलाई जान्न सक्तैन । किनभने ब्रह्म मनको विषय नै होइन । त्यसैगरेर आँखा,

प्राण आदिले पनि ब्रह्मलाई विषय गर्न सक्तैनन्। अर्को श्रुतिले ब्रह्मका बारेमा भनेको छ – **'विज्ञातारमरे केन विजानीयात्।'** *(बृ.उ.४।५।१५)* अर्थात् विज्ञातालाई कसले जान्न सक्तछ।

उपर्युक्त अनुसार विचार गर्दा पनि ब्रह्म के हो भन्ने थाहा हुन आएन। तै पनि श्रुतिहरूले ब्रह्मको निर्वचन गर्ने प्रयास गरेको देखिन्छ। जस्तै – **'सत्यं ज्ञानमनन्तं ब्रह्म।'** *(तै.उ.२।१।१)* अर्थात् सत्य, ज्ञान र अनन्त नै ब्रह्म हो। **'प्रज्ञानं ब्रह्म।'** *(ऐ.उ.५।३)* अर्थात् विज्ञानात्मा नै ब्रह्म हो। **'अयमात्मा ब्रह्म।'** *(मा.उ.१।२)* अर्थात् यो आत्मा नै ब्रह्म हो। **'तत्त्वमसि।'** *(छा.उ.६।८।७)* अर्थात् तिमी नै ब्रह्म हौ **'अहं ब्रह्मास्मि'** *(बृ.उ.१।४।१०)* अर्थात् म ब्रह्म हुँ। **'विज्ञानमानन्दं ब्रह्म।'** *(बृ.उ.३।९।२८)* अर्थात् विज्ञान र आनन्द नै ब्रह्म हो र **'विज्ञानघन एव।'** *(बृ.उ.२।४।१२)* अर्थात् विज्ञानघन नै ब्रह्म हो। यसरी श्रुतिवाक्यहरूद्वारा विचार गर्दा ब्रह्म जान्ने नै ब्रह्म हो भन्नुपर्ने देखिन्छ। जस्तै – **'ब्रह्मविद् ब्रह्मैव भवति।'** जुन पुरुषले निश्चयपूर्वक त्यस परब्रह्मलाई जान्दछ त्यो ब्रह्म नै हुन्छ। जस्तै – **'स यो ह वै तत्परं ब्रह्म वेद ब्रह्मैव भवति।'** *(मु.उ.३।२९)* अतः निचोडमा ब्रह्मज्ञानी नै ब्रह्म हो भन्न सकिन्छ। अन्त्यमा श्रुतिले पनि भनेको छ – **'ब्रह्मसन्ब्रह्माप्येति।'** र **'न तस्य प्राणा उत्क्रामन्ति अत्रैव समवलीयन्ते।'** अर्थात् ब्रह्मज्ञानीले ब्रह्म नै भएर ब्रह्मलाई प्राप्त गर्दछ। ब्रह्मज्ञानीका प्राणहरू उत्क्रमण गर्दैनन्, यहीँ नै मिल्दछन्। अस्तु। श्रीकृष्णार्पणमस्तु।

# भक्ति

कुनै पनि कुराको महत्त्व नबुझीकन त्यसतर्फ मान्छेको प्रवृत्ति हुँदैन । भक्तिका सम्बन्धमा पनि यही सिद्धान्त लागू हुन्छ । भक्तिको माहात्म्य नबुझीकन कोही पनि त्यसतर्फ प्रवृत्त हुँदैन । अतः सर्वप्रथम भक्तिको महत्त्व बुझ्नु अति आवश्यक छ । **'यत्स्तूयते तद्विधीयते'** भनेर उल्लेख पनि गरिएको छ। यसक्रममा स्वामी श्रीधरले भक्तिको सोपानक्रम भागवतको आफ्नो भावार्थबोधिनी टीकामा उल्लेख गर्नु भएको छ । सो अनुसार भक्तिका ९ ओटा सोपानक्रम छन् । भक्तले सत्पुरुषको सेवा गर्नु, भक्तले सत्पुरुषको कृपा प्राप्त गर्नु, भक्तमा सत्पुरुषका सद्गुणहरू सर्नु, भक्तले भगवान्को कथा श्रवण गर्नु, भगवान्प्रति भक्तको प्रेम हुनु, स्थूलशरीर र सूक्ष्मशरीरको विवेक हुनु, भगवान्मा अत्यन्त दृढा भक्ति हुनु, भगवत्तत्वको साक्षात्कार हुनु र अन्त्यमा भक्तमा भगवान्का गुणहरू आविर्भाव हुनु । शास्त्रहरूमा पनि भनिएको छ – **'स्वस्वरूपानुसन्धानं भक्तिरित्यभिधीयते'** अर्थात् आफ्नू स्वरूपको अनुसन्धान गर्नु नै भक्ति हो ।

भक्ति शब्द सेवा अर्थ भएको भज धातुबाट क्तिन् प्रत्यय भएर बन्दछ । भक्ति शब्दले उपासना, अनुरक्ति, सेवा, स्वामिभक्ति आदिलाई बुझाउँछ । त्यसैगरेर आराध्यदेवलाई प्रसन्न पार्न गरिने श्रद्धापूर्वकको प्रेमलाई पनि भक्ति भनिन्छ। यिनका दुईथरी भेद छन् – साधना अवस्थाको गौणी भक्ति र सिद्धा अवस्थाको पराभक्ति । तिनमा गौणी भक्तिका पनि दुई भेदहरू छन्– वैधि र रागानुगा भक्ति । स्कन्दपुराणमा

६ प्रकारका भक्तिका भेदहरूको उल्लेख भएको पाइन्छ – मानसी, वाचिकी, कायिकी, लौकिकी, वैदिकी र आध्यात्मिकी। भागवतमा साधना भक्तिमा नवधा भक्तिको पनि उल्लेख भएको छ। जस्तै–

**श्रवणं कीर्तनं विष्णोः स्मरणं पादसेवनम्।**
**अर्चनं वन्दनं दास्यं सख्यमात्मनिवेदनम्॥**

– *भागवत ७।५।२३*

अर्थात् श्रवण, कीर्तन, स्मरण, पादसेवन, अर्चन, वन्दन, दास्य, सख्य र आत्मनिवेदन।

श्रीमद्भगवद्गीतामा भक्तिका ३ प्रकार बताइएको छ – सात्विकीभक्ति, राजसीभक्ति र तामसी भक्ति। यसरी भक्तिका पराभक्ति, अव्यभिचारिणी भक्ति, अनन्यभक्ति, उत्तमाभक्ति आदिको उल्लेख पनि गीता, रामायण, महाभारत र अरू पुराणहरूमा पाइन्छ। भक्तिरसायनसिन्धुमा उत्तमाभक्तिका बारेमा स्वामी मधुसूदन सरस्वतीले स्पष्ट परिभाषा दिनुभएको छ। जस्तै –

**अन्याभिलाषिता शून्यंज्ञानकर्माद्यनावृतम्।**
**आनुकूल्येन कृष्णानुशीलनं भक्तिरुत्तमा॥**

– *भक्तिरसायनसिन्धु १।११*

अर्थात् कुनै प्रकारको इच्छा र कामना नराखीकन ज्ञान र कर्मबाट माथि उठेर भगवान् श्रीकृष्णका सुखकालागि गरिने भक्ति उत्तमाभक्ति हो।

देवर्षि नारदले नारदपञ्चरात्रमा भक्तिको परिभाषा यसरी दिनुभएको छ। जस्तै –

**सर्वोपाधि विनिर्मुक्तं तत्परत्वेन निर्मलम्।**
**हृषीकेण हृषीकेशसेवनं भक्तिरुच्यते॥**

अर्थात् कायिक, वाचिक र मानसिक यी तीनै थरी उपाधिहरूबाट माथि उठेर ज्ञान र कर्मलाई पर पन्छाएर भगवान्‌को निष्काम सेवा गर्नु नै भक्ति हो ।

स्वामी मधुसूदन सरस्वतीले भक्तिका सम्बन्धमा अर्को पनि परिभाषा दिनुभएको छ । जस्तै –

**द्रुतस्य भगद्धर्माद् धारावाहिकतां गता ।**
**सर्वेशे मनसो वृत्तिर्भक्तिरित्यभिधीयते ॥**

– *भक्तिरसायनसिन्धु ३*

यस परिभाषाका अतिरिक्त **'मोक्षकारण सामग्र्यां भक्तिरेव गरीयसी'** भन्ने परिभाषाका साथै श्रीशङ्कराचार्यले त्यसभन्दा पनि विस्तृतरूपमा भक्ति अर्थात् उपासनाको व्याख्या आफ्नो भाष्यमा गर्नुभएको छ – **'उपासनं नाम यथा शास्त्रं उपास्यस्य अर्थस्य विषयीकरणेन सामीप्यं उपगम्य तैलधारावत् समानप्रत्ययप्रवाहेण दीर्घकालं यद् आसनं तद् उपासनं आचक्षते ।'** अर्थात् उपासकले उपास्य वस्तुको शास्त्रोक्त विधि अनुसार बुद्धिको विषय बनाएर उपास्यको समीपमा रहेर तैलधारा झैं निरन्तर दीर्घकालसम्म सजातीय वृत्तिको प्रवाहरूपले स्थित रहनु नै उपासना हो ।

निष्काम कर्म र भक्ति दुवै नै भक्तिका साधन हुन् र ज्ञान साध्य हो । यसै कुराको निरूपण भगवान् श्रीकृष्णले गर्नुभएको छ । गीताको प्रथम षट्क अर्थात् शुरुका ६ अध्यायहरूमा अर्थात् गीताको १ अध्यायदेखिका ६ अध्यायहरूमा निष्काम कर्म वा भगवदर्पित कर्मको साङ्गोपाङ्ग वर्णन गरिएको छ । भगवदर्पित कर्मद्वारा अन्तःकरणमा जन्मजन्मान्तर, कल्पकल्पान्तर र युगयुगान्तरदेखि जमेर बसेको मलदोषको प्रक्षालन हुन्छ । त्यसपछि भगवान्‌को

अनन्य तथा अहैतुकी भक्तिले अन्तःकरणमा रहेको विक्षेपदोषलाई समाप्त गर्दछ । त्यसको वर्णन गीताको ७ अध्यायदेखि १२ अध्याय अर्थात् बीचका ६ अध्यायहरूमा भगवान् श्रीकृष्णले गर्नुभएको छ । त्यसैगरेर गीताको अन्तिम षट्क अर्थात् १३ अध्यायदेखि १८ अध्यायसम्म वर्णन गरिएको गीताज्ञानले अन्तःकरणमा रहेको अज्ञान अर्थात् आवरणदोषलाई हटाउँछ ।

त्यसरी गीताका १८ अध्यायहरूमा वर्णित भगवदर्पित कर्मले सर्वप्रथम मलदोषलाई हटाएर परम्परया कर्म ज्ञानको साधन बन्दछ भने भगवान् प्रतिको अनन्यभक्ति चाहिँ ब्रह्मज्ञानको साक्षात् कारण बन्दछ । यसरी भक्ति चाहिँ ज्ञानको निकटस्थ कारण भएको हुँदा पनि शास्त्रकारहरूले **'भक्तिर्ज्ञानाय कल्पते'** भनेको हो ।

भक्तिलाई उपासना पनि भनिन्छ । उपासना शब्दका सम्बन्धमा पनि धेरै विद्वान्हरूको धेरैथरी मतमतान्तर भएको पाइन्छ । ती मध्ये भगवान् श्रीशङ्कराचार्यले गीताभाष्यमा दिनुभएको परिभाषा समीचिन भएको देखिन्छ – **'उपासनं नाम यथाशास्त्रम् उपास्यस्य अर्थस्य विषयीकरणेन सामीप्यम् उपगम्य तैलधारावत् समानप्रत्ययप्रवाहेण दीर्घकालं यद् आसन्न तद् उपासनम् आचक्षते ।'** *(गीता १२।३)* अर्थात् उपास्य वस्तुलाई शास्त्रोक्त विधिले बुद्धिको विषय बनाएर, उपास्य वस्तुमा स्थित हुनुको नाम नै उपासना हो ।

भक्तिका बारेमा नारदभक्ति सूत्र, शाण्डिल्यभक्तिसूत्र, भक्तिरसायन, वैष्णवपाञ्चरात्र र भागवतदेखि लिएर विभिन्न पुराणहरूमा पनि विस्तृत व्याख्या गरेको पाइन्छ । नारदभक्तिसूत्रमा ८४ भक्तिसूत्रहरू छन् र शाण्डिल्यभक्तिसूत्रमा १०० सूत्रहरू छन् ।

नारदभक्तिसूत्रमा भक्तिको अत्यन्त सूक्ष्म तथा सूत्रात्मकरूपमा सटीक विवेचनाका साथै महत्त्वको पनि ख्यापन गरेको पाइन्छ। पहिलो सूत्र **'अथातो भक्तिं व्याख्यास्यामः'** बाट शुरु भएर चौरासीयौँ सूत्र **'य इदं नारदप्रोक्तं शिवानुशासनं विश्वासिति श्रद्धते, स भक्तिमान् भवति, स प्रेष्ठं लभते।'** भनेर समाप्त भएको छ। यसमा भक्तिलाई **'सा त्वस्मिन् परमप्रेमरूपा, अमृतस्वरूपा, यल्लब्ध्वा पुमान् सिद्धो भवति, अमृतो भवति, तृप्तो भवति'** भनेर भक्तिको महत्त्व देखाइएको छ। यसमा भक्तिको लक्षण पूजादिमा अनुराग हुनु, कथाश्रवणमा अनुराग हुनु आदिलाई लिइएको छ। उदाहरणका रूपमा **'यथा व्रजगोपिकानाम्'** भनेर दिइएको छ। भक्तिको स्वरूपमा **'अनिर्वचनीयं प्रेमस्वरूपं गुणरहितं कामना रहितं प्रतिक्षणवर्धमानं अवच्छिन्नं सूक्ष्मतरं अनुभवरूपं मूकास्वादनवत्।'** भनेर दिइएको छ। यसको फलमा **'मत्तो भवति स्तब्धो भवति आत्मारामो भवति'** आदि दिइएको छ।

शाण्डिल्य मुनिले पनि आफ्नो भक्तिसूत्रमा **'अथातो भक्तिजिज्ञासा'** भन्ने प्रथम सूत्रबाट शुरु गर्नुभएको छ र अन्तिम सयौँ सूत्र **'आविस्तिरोभावाविकाराःस्युक्रियाफलः संयोगात्'** मा पुगेर समाप्त गर्नुभएको छ। उहाँको पनि भक्तिसम्बन्धी विचार प्रायः विचार गर्दा नारदभक्तिसूत्र जस्तै देखिन्छ। तर परिभाषा र उदाहरणमा भने केही भिन्नता पाइन्छ।

अद्वैतसिद्धिजस्तो अद्वैतवेदान्तको अत्यन्त उत्कृष्ट ग्रन्थका प्रणेता स्वामी मधुसूदन सरस्वतीले भक्तिका विषयमा पनि त्यस्तै उत्कृष्ट ग्रन्थ भक्तिरसायन प्रणयन गर्नुभएको कुरा माथि सङ्केत गरिसकिएको छ। उहाँले भक्तिको परिभाषा दिँदै लेख्नुभएको छ – **'द्रवीभावपूर्विका**

**हि मनसो भगवदाकारता सविकल्यवृत्तिरूपा भक्तिः ।** यसका अतिरिक्त स्वामी श्रीमधुसूदन सरस्वतीले कृष्णभक्तिसम्बन्धी श्लोक तथा स्तुतिपद्यहरूको पनि रचना गर्नुभएको छ । जस्तै –

**ध्यानाभ्यासवशीकृतेन मनसा तन्निर्गुणं निष्क्रियम्**
**ज्योति:किञ्चन योगिनो यदि परं पश्यन्ति पश्यन्तु ते ।**
**अस्माकं तु तदेव लोचनचमत्काराय भूयाच्चिरम्**
**कालिन्दीपुलिनोदरे किमपि यन्नीलं महो धावति ॥**
**ध्यान अभ्यासले युक्त मनले शान्त भैकन ।**
**योगी निर्गुण आत्माको पाउलान् गर्न दर्शन ॥**
**पाउन् ती, तर हामी ता कालिन्दीतटका तल ।**
**घुम्ने सज्ज्योतिको गर्छौं सदा दर्शन निर्मल ॥**

श्रीमद्भागवतमा भक्तिको विशिष्ट स्थान रहेको देखिन्छ । यसको माहात्म्यमा नै भक्तिलाई आमा र ज्ञान तथा वैराग्यसमेतलाई छोराका रूपमा चित्रण गरिएको छ । भक्तिविना ज्ञान र वैराग्यको पनि प्रादुर्भाव हुन सक्तैन । भागवतमा पनि भक्तिको परिभाषा र लक्षणहरू प्रशस्तरूपमा दिइएका पाइन्छन् । भक्तिका बारेमा अर्थवादका रूपमा यतिसम्म वर्णन गरिएको छ कि जहाँ ज्ञानलाई तल पारेर भक्तिको वर्णन गरिएको छ । जस्तै –

**ज्ञाने प्रयासमुदपास्य नमन्त एव**
**जीवन्ति सन्मुखरितां भवदीयवार्ताम् ।**
**स्थाने स्थिताः श्रुतिगतां तनुवाङ्मनोभि-**
**र्ये प्रायशोऽजित जितोऽप्यसि तैस्त्रिलोक्याम् ॥**
**श्रेयःश्रुतिं भक्तिमुदस्य ते विभो**
**क्लिश्यन्ति ये केवलबोधलब्धये ।**

**तेषामसौ क्लेशल एव शिष्यते**
**नान्यद्यथा स्थूलतुषावघातिनाम् ॥**

*– भागवत १०।१४।३–४*

अर्थात् हे भगवन् ! ज्ञानतर्फ न लागेर तपाईंको जसले भक्ति गर्दछन् भने कसैले पनि जित्न नसकिने तपाईंलाई त्यस्ता अनन्य भक्तहरूले सजिलैसँग जित्छन्। तपाईंको भक्ति सबैप्रकारका कल्याणहरूको उद्‌गमरूप मूल स्रोत हो। जसले यस्तो भक्तितर्फ नलागेर ज्ञान प्राप्त गर्ने परिश्रम गर्दछन्, तिनीहरूले दुःख मात्रै प्राप्त गर्दछन्। तिनीहरूले आखिरमा केही पनि पाउँदैनन्। फर्चाँकेका धानको भूस कुट्नेले चामल नपाएर केवल श्रममात्रै गरेजस्तो भयो।

भगवान्को भक्ति गर्दा शरीर, वचन, मन आदि सबै अङ्गहरूले गर्नुपर्दछ। त्यस कुरालाई अत्यन्त सुन्दररूपमा भागवतमा वर्णन गरिएको छ। जस्तै –

**वाणी गुणानुकथने श्रवणौ कथायां**
**हस्तौ च कर्मसु मनस्तव पादयोर्नः।**
**स्मृत्यां शिरस्तव निवासजगत्प्रणामे**
**दृष्टिः सतां दर्शनेऽस्तु भवत्तनूनाम् ॥**

*– भागवत १०।१०।३८*

भागवतको दशमस्कन्धको २९ औँ अध्यायदेखि ३३ औँ अध्यायसम्म वर्णित रासपञ्चाध्यायीमा भगवान् श्रीकृष्णप्रति गोपीहरूले देखाएको भक्ति सर्वोत्कृष्ट भक्तिमा गणना गरिएको छ। भगवद्भक्तहरूमा गोपीहरूको सर्वश्रेष्ठ स्थान भएको कुरा शास्त्रहरूमा वर्णन गरिएको छ। नारदभक्तिसूत्रमा नारदले उदाहरणका रूपमा **'यथा व्रज गोपिकानाम्'** भनेर दिनुभएको छ।

भागवत अत्युत्तम भक्तहरूका पावन प्रसङ्गहरूको खानि हो। यसमा राजा अम्बरीश, राजा रन्तिदेव, राजा हरिश्चन्द्र, भक्त गजेन्द्र, भक्तराज प्रह्लाद, भक्त ध्रुव आदिका पवित्र कथाहरू आउँछन्। आमाको गर्भदेखि नै भगवद्भक्तिको शिक्षा लिएर जन्मेका दैत्यकुलदीपक भक्तराज प्रह्लादको सम्बन्धमा जति भने पनि कमी नै हुन्छ। निर्भयव्रतका परम उपासक प्रह्लादले धेरै दुःख र कष्ट सहेर पनि अन्त्यमा भगवान्लाई प्राप्त गरेरै छोडेका थिए। उनी आफूमात्रै भगवान्का भक्त बनेन्, बरू दैत्य कुलका आफ्ना साथीहरूलाई पनि उनले भक्त बनाएका थिए। उनले उपदेश गर्दै भनेका थिए –

**तत्रोपायसहस्राणामयं भगवतोदितः।**
**यदीश्वरे भगवति यथा यैरञ्जसा रतिः॥**
**गुरुशुश्रूषया भक्त्या सर्वलब्धार्पणेन च।**
**सङ्गेन साधुभक्तानामीश्वराराधनेन च॥**
**श्रद्धया तत्कथायां च कीर्तनैर्गुणकर्मणाम्।**
**तत्पादाम्बुरुहध्यानात् तल्लिङ्गेक्षार्हणादिभिः॥**
**हरिः सर्वेषु भूतेषु भगवानास्त ईश्वरः।**
**इति भूतानि मनसा कामैस्तैः साधु मानयेत्॥**

– *भागवत ७/७/२९–३२*

अर्थात् हे दैत्यपुत्र हो ! हुन ता बुद्धिका वृत्तिहरूलाई दुष्कर्मबाट रोक्ने अरू हजारौं उपायहरू छन्। तर जुन उपायले भगवान्मा भक्ति लाग्दछ, त्यो उपाय चाहिँ उत्तम उपाय हो। यो कुरा भगवान् आफैँले भन्नुभएको हो। गुरुको प्रेमपूर्ण सेवा, आफ्नू सर्वस्व भगवदर्पण, भगवद्भक्त महात्माहरूसँग भगवान्को आराधना गर्नु, उनका कथालीलामा श्रद्धा, उनको ध्यान, भगवद्विग्रहको

दर्शनपूजन आदि साधनहरूबाट भगवान्मा स्वाभाविक प्रेम हुन्छ । सर्वशक्तिमान् भगवान् श्रीहरि सबै प्राणीका अन्तःकरणमा बस्नुहुन्छ भन्ने भावना राखेर यथाशक्ति सबै प्राणीको इच्छा पूरा गर्दै हृदयैदेखि नै तिनको सम्मान गर्नुपर्छ । यसबाट भगवद्भक्ति बढ्दछ ।

उपर्युक्त अनुसार भगवद्भक्तिको उपदेश दिइसकेपछि भक्त प्रह्लाद निर्भय बनेर भगवान् विष्णुका ठूला विरोधी आफ्नै बाबु हिरण्यकशिपुलाई पनि भगवान्को भक्ति गर्न उपदेश दिँदै भन्छन् । जस्तै –

**न केवलं मे भवतश्च राजन् स वै बलं बलिनां चापरेषाम् ।**
**परेऽवरेऽमी स्थिरजङ्गमा ये ब्रह्मादयो येन वशं प्रणीताः ॥**
**स ईश्वरःकाल उरुक्रमोऽसावोजःसहः सत्त्वबलेन्द्रियात्मा ।**
**स एव विश्वं परमः स्वशक्तिभिः सृजत्यवत्यत्ति गुणत्रयेशः ॥**
**जह्यासुरं भावमिमं त्वमात्मनः समं मनो धत्स्व न सन्ति विद्विषः ।**
**ऋतेऽजितादात्मन उत्पथस्थितान् तद्धि ह्यनन्तस्य महत्समर्हणम् ॥**

*– भागवत ७।८।८–१०*

हे राजन् ! ब्रह्मादेखिलिएर सानो तृणसम्म पनि सबै नै भगवान्का अधीनमा छन् । मेरा र तपाईंकामात्रै होइनन् ठूलाठूला बलवान्का बल पनि उनै हुन् । उनै सर्वशक्तिमान् काल हुन् । सम्पूर्ण प्राणीका इन्द्रियबल, मनोबल, देहबल, धैर्य, इन्द्रिय र आत्मा पनि उनै हुन् । उनै परमेश्वर आफ्ना शक्तिद्वारा जगत्को सृष्टि, पालना र संहार पनि गर्दछन् । त्यसकारण हे पिताजी ! तपाईं यो आसुरभाव छोडिदिनुहोस् । आफ्नो मन सबैकाप्रति समान बनाउनुहोस् । कुमार्गगामी मन नै शत्रु हो । अतः त्यस मनलाई वशमा राखेर सबैसँग समताभाव राख्नु नै भगवान्को ठूलो पूजा हो ।

उपर्युक्त अनुसार हिरण्यकशिपु जस्तो भयङ्कर दुरात्मालाई

पनि भगवान्को भक्ति गर्न उपदेश दिने प्रह्लाद सामान्य भक्त थिएनन् । त्यस्ता महान् भक्तको रक्षा गर्न नै भगवान् अनौठो जन्तु नृसिंहको रूप लिएर आविर्भाव हुनु भएको थियो । त्यसरी आविर्भाव हुनु पर्ने कारणहरू थिए – **'सत्यं विधातुं निजभृत्यभाषितं व्याप्तिं च भूतेष्वखिलेषु चात्मनः ।'** *(भा.७।८।१८)*

भक्तहरूको महिमा अपरम्पार छ । भक्तिको संसारमा हुन नसक्ने कुरा केही पनि छैन । भगवान्को अनन्यभक्तिले भक्तले जे पनि पाउँन सक्तछ ।

**भक्तिः परेशानुभवो विरक्तिरन्यत्रचैष त्रिक एककालः ।**
**प्रपद्यमानस्य यथाश्नतः स्युस्तुष्टिः पुष्टिः क्षुधपायोऽनुघासम् ॥**

*– भागवत् ११।२।४२*

अर्थात् भगवान्को भक्तिबाट तीनओटा कुरा एकैचोटि प्राप्त हुन्छन् । भगवान्प्रतिको प्रेम, भगवान्को अनुभव र अरू वस्तुप्रति विरक्ति । जसरी भोकाएको मान्छेले खाना खाँदा तृप्ति, पुष्टि र क्षुधानिवृत्ति समेत एकैचोटि प्राप्त गर्दछ ।

मानिसले यस दुःखद्संसारबाट पार पाउनकालागि भगवान्को भक्ति र कथाश्रवण गर्नुभन्दा अरू कुनै दोस्रो उपाय नै छैन । यही कुरा भागवतमा बताइएको छ । जस्तै –

**संसारसिन्धुमतिदुस्तरमुत्तितीर्षोर्नान्यः प्लवो भगवतः पुरुषोत्तमस्य ।**
**लीलाकथारसनिषेवणमन्तरेण पुंसो भवेद् विविधदुःखदवार्दितस्य ॥**

*– भागवत १२।४।४०*

भक्तिविना ज्ञान हुन सक्तैन र ज्ञानविना मुक्ति हुँदैन । मायाको निवृत्ति नभईकन भक्ति हुन सक्तैन । भगवान्को कृपाविना मायाको निवृत्ति हुन सक्तैन । अतः जसरी भए पनि भगवान्को निष्काम

तथा अनन्यभक्ति गर्नु नितान्त आवश्यक छ । गीतामा पनि भगवान् श्रीकृष्णले भन्नु भएको छ । जस्तै –

**दैवी ह्येषा गुणमयी मम माया दुरत्यया ।**
**मामेव ये प्रपद्यन्ते मायामेतां तरन्ति ते ॥**

*– गीता ७।१४*

भक्तको लक्षण कस्तो हुनु पर्छ भन्ने सम्बन्धमा गीतामा भगवान् श्रीकृष्णले भन्नुभएको छ –

**मच्चित्ता मद्गतप्राणा बोधयन्तः परस्परम् ।**
**कथयन्तश्च मां नित्यं तुष्यन्ति च रमन्ति च ॥**
**तेषां सततयुक्तानां भजतां प्रीतिपूर्वकम् ।**
**ददामि बुद्धियोगं तं येन मामुपयान्ति ते ॥**

अर्थात् मलाई नै मन र प्राणसमेत अर्पण गरेर मलाई जान्नकालागि परस्परमा मेरो कुरा गर्दछन्, भन्दछन्, मलाई खुशी पार्दछन् र रमाउँछन् भने त्यस्ता भक्तलाई म बुद्धियोग दिन्छु । जसबाट उनीहरू मलाई प्राप्त गर्नेछन् । अतः भक्तिमार्गमा लाग्ने भक्तले भक्तिद्वारा भगवान्लाई खुशी पारेर मुक्त हुनु बाहेक अरू कुनै उपाय छैन ।

भक्तिको महत्त्व दर्शाउँदै भागवतमा पनि भनिएको छ । जस्तै –

**ये तु त्वदीयचरणाम्बुजकोशगन्धं**
**जिघ्रन्ति कर्णविवरैः श्रुतिवातनीतम् ।**
**भक्त्या गृहीतचरणः परया च तेषां**
**नापैषि नाथ हृदयाम्बुरुहात्स्वपुंसाम् ॥**

**तावद्भयं द्रविणगेहसुहृन्निमितं**

**शोकः स्पृहा परिभवो विपुलश्च लोभः ।**
**तावन्ममेत्यसदवग्रह आर्तिमूलं**
**यावन्न तेऽङ्घ्रिमभयं प्रवृणीत लोकः ॥**

*– भागवत ३।९।५-६*

ब्रह्माजी भगवान्को स्तुति गर्दै भन्नुहुन्छ – हे भगवन् ! जुन मान्छे वेदरूपी वायुले उडाएर ल्याइएको हजूरको चरणरूपी कमलकोशको गन्ध आफ्ना कानरूपी दुनाले पान गर्ने गर्दछन्। त्यस्ता आफ्ना भक्तहरूका हृदयबाट हजूर कहिल्यै पनि टाढा हुनुहुन्न। किनभने ती भक्तहरू पराभक्तिरूपी डोरीले हजूरका कमलसमान चरणहरू बाँद्धछन्।

जबसम्म मान्छेले हजूरका अभयप्रद पाउको आश्रय लिँदैन, तबसम्म मात्रै उसलाई सम्पत्ति, घर र बन्धुवान्धवहरूका कारण उत्पन्न हुने भय, शोक, लालसा, दीनता र लोभहरूले अत्यन्त दुःख दिइरहन्छन्। त्यस दुःखको एकमात्र मूलकारण म र मेरो भन्ने दुराग्रह नै हो। भगवान्को अहैतुकी तथा अनन्य भक्ति भएपछि त्यो अहम् र ममको कहिल्यै समाप्त न हुने दुरन्त जालो पनि एकै क्षणमा नाश भएर जान्छ।

ज्ञानमार्गमा जस्तै भक्तिमार्गमा पनि अनेक विघ्नबाधाहरू आउन सक्तछन्। ती अन्तरायहरूमा एषणाहरू नै सबभन्दा ठूला विघ्नबाधाहरू हुन्। तिनलाई त्याग गरेपछि मात्रै मानिस भक्तिमार्गमा पनि सफल हुन सक्तछ। शास्त्रहरूमा भनेको पनि छ। जस्तै –

**अभिमानं सुरापानं गौरवं रौरवंसमम्।**
**प्रतिष्ठा सुकरीविष्टा त्रयं त्यक्त्वा हरिं भजेत्॥**

अर्थात् अभिमान भनेको सुरापान सरह हो। गौरव मान्नु भनेको रौरव नरक सरह हो। प्रतिष्ठा अर्थात् मानमनितो खोज्नु

सुगुर्नीको बिष्टा सरह हो। अतः यी तीनैथरी एषणाहरूलाई सर्वथा त्यागेर भक्तले हरिभजन गरोस्। यसैमा नै उसको कल्याण छ।

शृङ्गी नामक ऋषिबालकको श्राप परेर म्रियमाण अवस्थामा गङ्गाका किनारमा उपवास गरेर बसेका राजा परीक्षित्लाई उपदेश गर्दै श्रीशुकदेव मुनि भन्नुहुन्छ –

**स सर्वधीवृत्यनुभूतसर्व आत्मा यथा स्वप्नजनेक्षितैकः।**
**तं सत्यमानन्दनिधिं भजेत नान्यत्र सज्जेद् यत आत्मपातः॥**

*– भागवत २।१।३९*

अर्थात् जसरी सपना देख्ने मानिसले स्वप्नावस्थामा आफूलाई विविध पदार्थहरूका रूपमा देख्तछ। त्यसैगरेर सबैका बुद्धिवृत्तिद्वारा सबै कुराको अनुभव गर्ने अन्तर्यामी परमात्मा पनि एउटै छ। सर्वाधार त्यही सत्यस्वरूप आनन्दनिधि भगवान्को नै भजन गर्नु पर्दछ। भगवान्को भक्तिबाहेक अरू कुनै पनि वस्तुमा आसक्ति गर्नु हुँदैन। किन भने सांसारिक वस्तुको आसक्तिले नै जीवलाई अधःपतनतिर लैजान्छ।

भगवान्को भक्ति त्यसै हुँदैन। भक्तिकालागि सज्जन पुरुषको कृपा आवश्यक पर्दछ। यही कुरा ब्रह्मज्ञानी जडभरत राजा रहूगणलाई भन्दछन्। जस्तै –

**रहूगणैतत्तपसा न याति न चेज्यया निर्वपणाद् गृहाद्वा।**
**नच्छन्दसा नैव जलाग्निसूर्यैर्विना महत्पादरजोऽभिषेकम्॥**
**यत्रोत्तमश्लोकगुणानुवादः प्रस्तूयते ग्राम्यकथाविघातः।**
**निषेव्यमाणोऽनुदिनं मुमुक्षोर्मतिं सतीं यच्छति वासुदेवे॥**

*– भागवत ५।१२।१२–१३*

अर्थात् हे रहूगण ! महापुरुषका चरणका रजले ननुहाइकन खालि तप, यज्ञादि वैदिक कर्म, अन्नादिको दान, अतिथिसत्कार, दीनदुःखीको

सेवा समेतका गृहस्थोचित धार्मिक अनुष्ठान, वेदाध्ययन, जल, अग्नि र सूर्यको उपासना आदि कुनै पनि साधनले भगवान्‌को भक्ति वा ज्ञान प्राप्त हुन सक्तैन । किनभने महापुरुषहरूका सभामा पवित्रकीर्ति भएका भगवान्‌का लीलाकथाहरूको सधैँ चर्चापरिचर्चा भइरहन्छ । जसबाट ग्राम्यकथा अर्थात् विषयवार्ताको चर्चा हुने अवसर प्राप्त हुँदैन । सम्पूर्ण विषयको वार्ता छोडेर नित्य भगवत् कथाको श्रवण गर्नाले मुमुक्षुको बुद्धि शुद्ध हुन्छ । त्यही शुद्ध बुद्धि नै भगवान् वासुदेवमा लाग्दछ ।

यही कुरा नै आफ्ना बाबु हिरण्यकशिपुलाई भक्तराज प्रह्लादले भनेका छन् ।

**नैषां मतिस्तावदुरुक्रमाङ्घ्रिं स्पृशत्यनर्थापगमो यदर्थः ।**
**महीयसां पादरजोऽभिषेकं निष्किञ्चनानां न वृणीत यावत् ।**

– *भागवत ७।५।३२*

हे पिताजी ! जसको बुद्धि भगवान्‌का चरणकमलमा लागेको हुन्छ, उसको जन्ममृत्युको संसृति सधैँकालागि नाश हुन्छ । तर जसले भगवान्‌का निष्किञ्चन भक्त महात्माहरूको चरणधूलीले आफ्नू अभिषेक गर्दैन तबसम्म उसले भगवद्‌भक्ति प्राप्त गर्न सक्तैन । अन्त्यमा भक्ति र ज्ञानको फल एकै भएको कुरा भगवान् कपिलले आफ्नी आमा देवहूतिलाई भन्नुभएको छ –

**ज्ञानयोगश्च मन्निष्ठो नैर्गुण्यो भक्तिलक्षणः ।**
**द्वयोरप्येक एवार्थो भगवच्छब्दलक्षणः ॥**

अर्थात् हे आमा ! निर्गुणब्रह्मविषयक ज्ञानयोग र मप्रति गरिएको भक्तियोग दुवैको फल एउटै हो । अस्तु । श्रीकृष्णार्पणमस्तु ।

# गुरुशिष्यपरम्परा

प्राचीन समयमा हाम्रो सनातन वैदिक परम्परामा गुरु र शिष्यको सम्बन्ध अत्यन्त सुमधुर थियो। गुरुहरू पनि अत्यन्त त्यागी, वेदवेदाङ्गमा पारङ्गत र ब्रह्मज्ञानी समेत हुन्थे। ब्रह्मज्ञानको परम्परामा श्रोत्रिय ब्रह्मनिष्ठ गुरुबाटै ब्रह्मज्ञानको उपदेश लिने पवित्र चलन थियो। त्यस समयमा ब्रह्मविद्याग्रहण गर्न योग्य गुरुका समक्ष समिधा हातमा लिएर गुरूपसत्ति गर्नुपर्दथ्यो। यही कुरा श्रुतिले स्पष्ट निर्देशन गरेकोछ–
**परीक्ष्य लोकान्कर्मचितान्ब्राह्मणो निर्वेदमायान्नास्त्यकृतः कृतेन। तद्विज्ञानार्थं स गुरुमेवाभिगच्छेत् समित्पाणिः श्रोत्रियं ब्रह्मनिष्ठम्।** *(मु.उ.१।२।१२)* अर्थात् कर्मद्वारा प्राप्त लोकहरूको अनित्यता विचार गरेर ब्राह्मण विरक्त बनोस्। यस अनित्य लोकबाट मोक्ष प्राप्ति हुँदैन भन्ने जानेर नित्यवस्तु ब्रह्म जान्नकालागि हातमा समिधा लिएर श्रोत्रिय ब्रह्मनिष्ठ गुरुका शरणमा जिज्ञासु ब्राह्मण जाओस्।

यहाँ सुकेको समिधा हातमा लिएर गुरुका शरणमा जाने भनेको प्रतीकात्मक अर्थ भएको विद्वान्हरू बताउछन्। जिज्ञासु छात्रले म सुकेको दाउरा जस्तै ब्रह्मकालागि तयार भएर आएको छु। आगोको सम्पर्क हुने बित्तिकै जसरी यी सुकेका समिधाहरू बल्दछन्। त्यसैगरेर म साधनचतुष्टय सम्पन्न भएर ब्रह्मज्ञानकालागि गुरुका शरणमा आएको अधिकारी हुँ भन्ने कुरा सुकेका समिधाले जनाउँछ।

समित्पाणिको अर्थ कहीं कहीं उपर्युक्त अनुसार हुने भएता पनि यो अर्थ सबै ठाउँमा मिल्ने देखिँदैन। त्यो केवल उपलक्षणमात्र हो भनेर बुझ्नुपर्दछ। छान्दोग्योपनिषद्को चतुर्थ अध्यायको खण्ड ४

मा जबालाको पुत्र सत्यकाम अर्थात् जबालको प्रसङ्ग आउँछ। सत्यकामले हारिद्रुम गौतमका समक्ष गुरूपसत्ति गर्न जाँदा गुरुले सत्यकामको उपनयन गर्नका लागि समिधा ल्याउँन लगाएका थिए। अतः सबै ठाउँमा समित्पाणिपूर्वकको गुरूपसत्तिमा ब्रह्मज्ञानकालागि नै हो भन्ने देखिँदैन। छान्दोग्योपनिषद्को चतुर्थअध्यायको प्रथमखण्डमा राजा जानश्रुतिले गुरूपसत्ति गर्दा समिधा हातमा लिएर गएका थिएनन्। उनले ६ सय गाईहरू र एउटा सुनको हार लिएर रैक्व समक्ष गएको देखिन्छ। त्यसै उपनिषद्को छैटौंअध्यायको प्रथम खण्डमा ऋषि अरुणका छोरा उद्दालक र उनका छोरा श्वेतकेतुको प्रसङ्ग आउँछ। पिता उद्दालकले छोरा श्वेतकेतुलाई तत्त्वमसि महावाक्यको उपदेश गर्दा श्वेतकेतुले समित्पाणि भएर उद्दालक समक्ष गुरूपसत्ति गरेको देखिँदैन। त्यसैगरेर छान्योग्योपनिषद्कै सातौँ अध्यायको प्रथम खण्डमा सनत्कुमारहरूले नारदलाई गरेको ब्रह्मोपदेशको प्रसङ्ग आउँछ। त्यहाँ पनि समित्पाणि भएर नारद सनत्कुमारसमक्ष गएका देखिँदैनन्।

त्यसैगरेर गुरूपसत्तिका कुरा धेरै उपनिषद्हरूमा आउँछन्। बृहदारण्यकोपनिषद्मा ब्राह्मण गार्ग्य र राजा अजातशत्रुसंवाद, याज्ञवल्क्यमैत्रेयीसंवाद, याज्ञवल्क्यआर्तभागसंवाद, याज्ञवश्क्य-भुज्युसंवाद, याज्ञवल्क्यउषस्तसंवाद, याज्ञवल्क्यकहोलसंवाद, याज्ञवल्क्यगार्गीसंवाद, याज्ञवल्क्यशाकल्यसंवाद, जनकयाज्ञवल्क्यसंवाद आदिमा पनि समित्पाणि भएर शिष्यले गुरूपसत्ति गरेको पाइँदैन। त्यसैगरेर कठोपनिषद्मा नचिकेताले धर्मराजसमक्ष ब्रह्मज्ञानकालागि प्रस्तुत हुँदा समित्पाणिपूर्वक गुरूपसत्ति गरेका थिएनन्। अरू उपनिषद्हरूमा पनि यो कुरा लागू भएको पाइँदैन।

श्रीमद्भागवद्गीतामा अर्जुनले भगवान् श्रीकृष्णसमक्ष गीताज्ञानका–लागि गुरूपसत्ति गर्दा केवल मुखले मात्र गरेका थिए। समित्पाणि भएर गरेका थिएनन्। जस्तै – **'शिष्यस्तेऽहं शाधि मां त्वां प्रपन्नम्'** *(गीता २।७)* त्यसैगरेर रामगीतामा पनि दाजु श्रीरामकासमक्ष भाइ लक्ष्मणले ब्रह्मज्ञानकालागि गुरूपसत्ति गरेका छन्। जस्तै – **'अहं प्रपन्नोऽस्मिपदाम्बुजं प्रभो भवापवर्गं तव योगिभावितम्। यथाञ्जसाऽज्ञानमपारवारिधिं सुखं तरिष्यामि तथानुशाधि माम्'** *(रामगीता ५)* श्रीमद्भागवतमहापुराणमा पनि नारद र व्यासको संवाद, राजा परीक्षित् र शुकदेवको संवाद, विदुर र मैत्रेयको संवाद, देवहूति र कपिलसंवाद, राजा रहूगण र जडभरतको संवाद, उद्धव र श्रीकृष्णको संवाददेखि लिएर हंसावतार र सनत्कुमारहरूको संवादसम्ममा पनि समित्पाणिपूर्वक गुरूपसत्ति गरेको नदेखिएको हुँदा ब्रह्मज्ञान वा जिज्ञासाकालागि श्रोत्रिय ब्रह्मनिष्ठ गुरुसमक्ष शिष्य जाँदा समित्पाणि भएर जानुपर्ने अनिवार्य नियम प्राचीन कालमा पनि लागू भएको देखिँदैन। यो केवल उपलक्षणका रूपमा रहेको बुझ्नु पर्दछ। मुण्डकोपनिषद्को १।२।१२ मा उल्लेख भएको कुरा यस लेखको शुरुमा नै उल्लेख गरिसकिएको छ। ब्राह्मणले क्षत्रियकहाँ विद्याग्रहण गर्नजाँदा क्षत्रियले शिष्यभावमा प्राप्त ब्राह्मणको पूजाअर्चना आदि गर्ने र गुरुभावमा रहेका क्षत्रिय गुरुलाई ब्राह्मणशिष्यले अनुशासनपूर्वक अभिवादन गर्ने प्रचलन वैदिककालदेखि नै रहेको देखिन्छ। यो कुरा छान्दोग्य, बृहदारण्यक आदि सबै उपनिषद्हरूमा पाइन्छ। तर समित्पाणि भएर विधिपूर्वक क्षत्रिय गुरुका समक्ष मुण्डकोपनिषद् अनुसारको गुरूपसत्ति गर्नुपर्ने देखिँदैन।

उपर्युक्त अनुसार गुरूपसत्तिपूर्वक ज्ञान प्राप्त गरेपछि पनि त्यस

ज्ञानलाई सधैँ ताजा राख्नु आवश्यक देखिन्छ। ज्ञान भइगयो भनेर प्रमाद गरियो भने त्यो ज्ञान हराएर जाने सम्भावना रहन्छ। उदाहरणका रूपमा अर्जुनलाई नै लिन सकिन्छ। महाभारतको युद्धक्षेत्रबाट पलायन हुन खोजेका अर्जुनलाई गीताको दोस्रो अध्यायको ११ औँ श्लोकदेखि १८ अध्यायको ७२ औँ श्लोकसम्म कत्ति पनि मनमा शङ्का नरहनेगरी प्रश्नोत्तर पूर्वक ऊहापोहका साथ भगवान् श्रीकृष्णले अर्जुनलाई ब्रह्मज्ञान गराउनु भएको थियो। अर्जुनले पनि गीताको १८ औँ अध्यायको ७३ औँ श्लोकमा गएर **'नष्टो मोहः स्मृतिर्लब्धा त्वत्प्रसादान्मयाऽच्युत। स्थितोऽस्मि गतसन्देहः करिष्ये वचनं तव॥'** भनेर भगवान् श्रीकृष्णको वचन मानेर युद्धमा उनी संलग्न भएका थिए। युद्धमा विजयी भएर राज्य गर्न थालेपछि अर्जुनको गीताज्ञान हराएको देखिन्छ। यस कुराको चर्चा महाभारतको अश्वमेधिकपर्वको सोह्रौँ अध्यायको अनुगीतामा आउँछ।

महाभारतको युद्धमा विजयी भएपछि पाण्डवहरूले सुव्यस्थितरूपमा राज्य सञ्चालन गर्न शुरु गरेका थिए। भगवान् श्रीकृष्ण पनि पाण्डवहरूलाई सहयोग गर्न त्यस बेला इन्द्रप्रस्थमा नै बस्नुभएको थियो। एकदिन फुर्सदको समय निकालेर दुवैजनाले आफ्ना जीवनका अनुभूत कुराहरू निकाल्नु भएको थियो। त्यसै सन्दर्भमा महाभारतको युद्धस्थलमा भगवान् श्रीकृष्णले अर्जुनलाई उपदेश गर्नुभएको गीताज्ञान बिर्सिएकोले फेरि उपदेश गर्न श्रीकृष्णलाई अनुरोध गरेकाथिए –

**विदितं मे महाबाहो सङ्ग्रामं समुपस्थिते।**
**माहात्म्यं देवकीमातस्तच्च ते रूपमैश्वरम्॥**
**यत्तद् भगवता प्रोक्तं पुरा केशव सौहृदात्।**
**तत्सर्वं पुरुषव्याघ्र नष्टं मे भ्रष्टचेतसः॥**

**मम कौतूहलं त्वस्ति तेष्वर्थेषु पुनः पुनः ।**
**भवांस्तु द्वारकां गन्ता नचिरादेव माधव ॥**

*– महा.भा.आश्वमे.प.१६।५–७*

अर्थात् हे महाबाहो ! हे देवकी नन्दन ! महाभारतको सङ्ग्रामको समयमा मलाई हजूरको माहात्म्यको ज्ञान भएको थियो र हजूरको ऐश्वर्यशाली स्वरूपको पनि मैले दर्शन गर्न पाएको थिएँ । हे केशव ! सौहार्दका साथ पहिले मलाई जुन गीताज्ञानको उपदेश गर्नुभएको थियो । मेरो त्यो ज्ञान विचलित चित्त भएको कारण अहिले नष्ट भएको छ । हे माधव ! ती कुराहरू सुन्नकालागि मेरा मनमा तीव्र उत्कण्ठा भइरहेको छ । द्वारका जानुभन्दा पहिले मलाई फेरि गीताज्ञानको उपदेश गर्नुहओस् ।

उपर्युक्त अनुसारको प्रमादपूर्ण कुरा सुनेपछि भगवान् श्रीकृष्णाले केही व्यङ्ग्यात्मक शैलीमा अर्जुनलाई भन्नुभएको थियो । जस्तै –

**श्रावितस्त्वं मया गुह्यं ज्ञापितश्च सनातनम् ।**
**धर्मं स्वरूपिणं पार्थ सर्वलोकांश्च शाश्वतम् ॥**
**अबुद्ध्या नाग्रहीर्यस्त्वं तन्मे सुमहदप्रियम् ।**
**न च साऽद्य पुनर्भूयः स्मृतिर्मे सम्भविष्यति ॥**
**नूनमश्रद्दधानोऽसि दुर्मेधा ह्यसि पाण्डव ।**
**न च शक्यं पुनर्वक्तुमशेषेण धनञ्जय ॥**
**स हि धर्मः सुपर्याप्तो ब्रह्मणः पदवेदने ।**
**न शक्यं तन्मया भूयस्तथा वक्तुमशेषतः ॥**
**परं हि ब्रह्म कथितं योगयुक्तेन तन्मया ।**
**इतिहासं तु वक्ष्यामि तस्मिन्नर्थे पुरातनम् ॥**

*– महा.भा.आश्वमेधिक प.१६।९–१२*

अर्थात् हे अर्जुन ! मैले रणक्षेत्रमा अत्यन्त गोपनीय (**इति ते ज्ञानमाख्यातं गुह्याद्गुह्यतरं मया** *(गीता १८।६३)* ज्ञानको उपदेश अथवा श्रवण तिमीलाई गराएको थिएँ। मेरो स्वरूपभूत धर्म अर्थात् सनातन पुरुषोत्तमतत्त्वको पनि मैले तिमीलाई परिचय गराएको थिएँ। त्यसैगरेर मैले तिमीलाई सम्पूर्ण नित्य लोकहरूको पनि वर्णन गरेको थिएँ। तर तिमीले मेरो त्यस अत्यन्त पवित्र तथा गोपनीय ज्ञानलाई आफ्नू हुस्सुपनको कारण बिर्सिदिएछौ। यो कुरा मलाई अत्यन्त अप्रिय लागेको छ। मैले युद्धको समयमा तिमीलाई उपदेश गरेको गीताज्ञान त्यही रूपमा फेरि तिमीलाई उपदेश गर्न सम्भव छैन। किन भने त्यो धर्म ब्रह्मपद प्राप्त गराउनका लागि पर्याप्त थियो। त्यही सम्पूर्ण ज्ञान पहिलेकै रूपमा दोहोऱ्याएर म भन्न सक्तिन। किन भने अहिले सो कुरा मेरो अधीनमा छैन। त्यस बेला योगयुक्त भएर मैले परमात्मतत्त्वको उपदेश गरेको थिएँ। सम्पूर्ण त्यही कुरा तिमीलाई फेरि उपदेश गर्न नसके पनि त्यसै प्रकारको ज्ञान केही मात्रामा गराउनकालागि म प्राचीन इतिहास अर्थात् अनुगीता सुनाउँछु। सावधान भएर सुन।

उपर्युक्त अनुसार श्रीकृष्ण र अर्जुनका बीचमा भएको प्रश्नोत्तर अत्यन्त विचारणीय छ। खासगरेर मुमुक्षु वा जिज्ञासुका लागि यसको मनन गर्नु रामबाण नै ठहरिन्छ। **'नष्टो मोहःस्मृतिर्लब्धा'** भनेर प्रतिज्ञा गरेका प्रिय शिष्य अर्जुनले **'नष्टो मे भ्रष्टचेतसः'** भनेर भन्दा भगवान्लाई अत्यन्त अप्रिय लागेको थियो। आफ्नो प्रिय शिष्यले त्यसरी प्रमाद गरेर आफूले उपदेश गरेको ब्रह्मज्ञान विर्सन्छ भने सबै सद्गुरुलाई दुःख लाग्नु स्वाभाविकै हो। गीताको त्यति लामू उपदेश प्रश्नोत्तर र ऊहापोहपूर्वक भगवान् श्रीकृष्णले

योगमा अवस्थित भएर गर्नुभएको थियो । अर्जुनले बुझेँ भनेर पनि बिर्सिएँ फेरि भन्नुहोस् भनेर सजिलैसँग भन्नु अत्यन्त दुःखलाग्दो कुरा थियो । अर्जुनको त्यस भनाइबाट भगवान्लाई विक्षेप भएको देखिन्छ । त्यो कुरा जतिसुकै अप्रिय लागेको भएता पनि आधुनिक लौकिक गुरुहरूले जस्तो गरेर अर्जुनलाई धेरै कटुवाक्यहरू भगवान्ले भन्नु भएन । आफ्नू बेखुशीपन देखाउन केवल **'दुर्मेधा ह्यसि पाण्डव'** भनेर भन्नुभयो । यतिमात्रैबाट पनि अर्जुनले भगवान्लाई अप्रिय लागेको कुरा बुझिसकेका थिए । जति अप्रिय लागेको भएता पनि आफ्ना प्रिय शिष्य अर्जुनको अनुरोधलाई स्वीकार गरेर भगवान्ले इतिहाससहितको अश्वमेध पर्वको सोह्रौँ अध्यायको १५औँ श्लोकदेखि ९२ औँ अध्यायसम्म अनुगीताको उपदेश गर्नुभएको छ ।

सद्गुरुले आफ्ना जिज्ञासु अथवा मुमुक्षु शिष्यलाई जसरी पनि ब्रह्मज्ञान गराउने प्रयास गरेको शास्त्रहरूमा देखिन्छ । श्रीमद्भागवतमहापुराणको हंसगीतामा पनि यस कुराको झल्को पाइन्छ । आफ्ना छोरा सनत्कुमारहरूले ब्रह्माजीलाई योगको अन्तिम सूक्ष्मगतिका बारेमा प्रश्न गरेका थिए । जस्तै –

**गुणेष्वाविशते चेतो गुणाश्चेतसि च प्रभो ।**
**कथमन्योऽन्यसंत्यागो मुमुक्षोरतितितीर्षोः ॥**

*– भागवत ११।१३।१७*

अर्थात् हे भगवन् ! चित्त सर्वदा गुण अर्थात् विषयहरूमा पसिरहेको हुन्छ । त्यसैगरेर विषयहरू पनि चित्तका वृत्तिहरूमा पसेर एकाकार भएर बस्तछन् । यिनीहरू आपसमा छुट्याउनै नसकिने गरेर बसेका अवस्थामा मुमुक्षुले यी दुवैथरीलाई छुट्याएर कसरी मुक्ति पाउँन सक्तछ ? यसरी सनत्कुमारहरूले प्रश्न सोधेपछि

ब्रह्माजीले जबाफ दिन सक्नुभएको थिएन । किनभने ब्रह्माजीसृष्टिकर्ममा लाग्नुभएको हुँदा उहाँको बुद्धि रजोगुणबाट विक्षिप्त भएको थियो । त्यसपछि ब्रह्माजीले भगवान् विष्णुको स्मरण गर्नुभएको थियो । भगवान् पनि ब्रह्माजीलाई सहयोग गर्न हाँसको रूप लिएर ब्रह्माजीका अगाडि जानुभएको थियो । विधिपूर्वक ब्रह्माजीले भगवान्सँग उक्त प्रश्न सोध्न नपाउँदै सनकादिहरू अघि सरेर 'को भवान् ?' भनेर भगवान् विष्णुसँग प्रश्न सोधेका थिए । 'को भवान् ?' भनेर ब्रह्मज्ञानीले सोध्नै नमिल्ने प्रश्न सनकादिहरूले सोधेको हुँदा आफ्नू असन्तुष्टि देखाउँदै भगवान् विष्णुले सनकादिहरूलाई उल्टै प्रतिप्रश्न गर्नुभएको थियो । भगवान्ले सनकादिहरूलाई माथि **'मच्छिष्यैः सनकादिभिः'** *(भा.११।१३।१४)* भनेर भन्नुभएको हुँदा पनि आफ्ना शिष्यहरूलाई त्यस प्रकारको प्रतिप्रश्न भगवान्ले गर्नुभएको देखिन्छ ।

त्यसरी सनकादिमुनिहरू जस्ता परम ब्रह्मज्ञानीहरूले पनि विधिपूर्वक अर्थात् गुरूपसत्तिपूर्वक प्रश्न गर्न नसकेको हुँदा भगवान् उनीहरूलाई शिक्षाकालागि नै प्रतिप्रश्न गर्नुभएको हुनसक्तछ ।

श्रीमद्भागवतमहापुराणमा म्रियमाण राजा परीक्षित्ले गुरूपसत्तिपूर्वक नै शुकदेवमुनिसँग प्रश्न गरेको देखिन्छ । **'तस्मै सपर्यां शिरसाऽऽजहार'** *(भागवत १।१९।२९)* राजा परीक्षित्ले शुकदेव मुनिबाट भागवतको दोस्रो अध्यायदेखि भागवतको १२ औं अध्यायको पाँचौं अध्यायसम्म ७ दिन लगाएर भगवान्को अलौकिक लीला लगायत कर्म, भक्ति, वैराग्य र ज्ञानसमेत अत्यन्त विस्तारपूर्वक आफ्नो प्रश्न र जिज्ञासा अनुरूप सुन्नुभएको थियो । बाह्रौं स्कन्धको पाँचौं अध्यायसम्म पुग्दा पनि राजा परीक्षित्मा तै पनि मृत्युको भय रहेकै देखिन्छ । ब्रह्मज्ञानीले सर्वप्रथम सबै प्रकारका भयलाई

जित्नुपर्दछ । गीतामा भगवान् श्रीकृष्णले **'अभय'** आदि २६ ओटा दैवीसम्पदाहरू ज्ञानीमा हुनु पर्ने कुरा बताउनु भएको छ । जस्तै – **'अभयं सत्त्वसंशुद्धिर्ज्ञानयोगव्यवस्थितिः'** *(गीता १६।१)* ।

श्रीमद्भागवतमा उपदेशको अन्त्यतिर आइपुग्दा पनि शुकदेव मुनिलाई म्रियमाण प्रिय शिष्य राजा परीक्षित्मा अझै मर्छु भन्ने डर गइनसकेको थाहा भयो । शुकदेवजस्ता जन्मँदैका ब्रह्मज्ञानी श्रोत्रिय ब्रह्मनिष्ठ सद्गुरुलाई थाहा नहुने कुरै थिएन । शुकदेवमुनिले राजा परीक्षित्लाई जसरी पनि मोक्ष गराउनु थियो । त्यसैकारण राजाका भित्र अन्तःकरणमा प्रबलरूपमा जमेर रहेको भयलाई हटाउन अत्यन्त तीक्ष्ण शब्द प्रयोग गर्दै र अजातवादको सिद्धान्त सम्झाउँदै शुकदेव स्वामीले परीक्षित्लाई भन्नु भएको थियो । जस्तै –

**त्वं तु राजन् मरिष्येति पशुबुद्धिमिमां जहि ।**
**न जातः प्रागभूतोऽद्य देहवत्त्वं न नङ्क्ष्यसि ॥**

*– भागवत १२।५।२*

हे राजन् ! अब तिमी म मर्छु भन्ने पशुको जस्तो विवेकरहित बुद्धिलाई छोडिदेऊ । यो तिम्रो शरीर पहिले थिएन, अहिले देखापरेको छ र नष्ट पनि हुन्छ । तर अनादि आत्मा कहिल्यै पनि जन्मदैन र मर्दैन पनि । त्यतिमात्रै होइन शुकदेव स्वामीले अहं ब्रह्मास्मिको उपदेश पनि दिनुभएको थियो– **'अहं ब्रह्म परं धाम ब्रह्माहं परमं पदम् ।'** *(भागवत १२।५।११)* त्यसपछिमात्रै राजा परीक्षित्लाई **'अहं ब्रह्मास्मि'** को अपरोक्षानुभूति भयो र **'प्रविष्टो ब्रह्मनिर्वाणमभयं दर्शितं त्वया'** भन्दै शुकदेवप्रति कृतज्ञता ज्ञापन गर्दै परीक्षित् मुक्त भएर गएका थिए । सद्गुरुले आफ्ना प्रिय शिष्यलाई जसरी पनि पार लगाउँछन् ।

उपर्युक्त सङ्क्षिप्त उदाहरणहरूबाहेक भगवान् श्रीकृष्ण र उद्धव, भगवान् श्रीराम र लक्ष्मण, जडभरत र रहूगण, याज्ञवल्क्य र जनक, अष्टावक्र र जनक, सनत्कुमार र नारद आदिका थुप्रै गुरुहरू र शिष्यहरूका बीचको मधुर सम्बन्ध शास्त्रहरूमा वर्णित भएको पाइन्छ। जिज्ञासु शिष्यहरूले योग्य सद्गुरुबाट ब्रह्मज्ञानको उपदेश पाएर संसारसागरबाट मुक्त भएर गएका थिए। त्यसको विपरीत आफ्नै गुरुबाटपीडित शिष्यहरू र शिष्यबाट पीडित गुरुको उदाहरणहरू पनि हाम्रा शास्त्रहरूमा उल्लेख भएका प्रशस्त पाइन्छन्।

ठूलाठूला कुलगुरु, श्रोत्रिय ब्रह्मनिष्ठ सद्गुरु, जगद्गुरु आदि गुरुहरूले शिक्षा दिने क्रममा आफ्ना शिष्यहरूलाई कटु शब्द प्रयोग गरेको शास्त्रहरूमा प्रायः पाइँदैन। शास्त्रार्थ, वादविवाद, आफ्नो सिद्धान्तको प्रतिपादन अर्थात् मण्डन र अरूका आक्षेपको खण्डनका सन्दर्भमा भने केही कटुशब्दहरूको प्रयोग गरिएका पाइन्छन्। याज्ञवल्क्यले वादी गार्गीलाई संवादको सन्दर्भमा **'गार्गि मातिप्राक्षीर्मा ते मूर्धा व्यपप्तत्'** *(बृ.उ.३।६।१)* अर्थात् हे गार्गि ! अतिप्रश्न नगर ! तिम्रो शिर फुट्ला भनेका थिए भने वादविवादकै सन्दर्भमा पूर्वपक्षी शाकल्यलाई याज्ञवल्क्यले भनेका थिए– **'औपनिषदं पुरुषं पृच्छामि तं चेन्मे न विवक्ष्यसि मूर्धा ते विपतिष्यति'** *(बृ.उ.३।९।२६)* अर्थात् हे शाकल्य ! त्यस औपनिषद् पुरुषका बारेमा म प्रश्न गर्दछु, तिमीले त्यसको स्पष्ट जबाफ दिन सकेनौ भने तिम्रो टाउको फुट्नेछ। शाकल्यले जबाफ दिन नसकेपछि उनको टाउको फुटेको थियो।

त्यसैगरेर श्रीशङ्कराचार्यले पनि पूर्वपक्षीहरूको कुतर्कको खण्डन गर्ने क्रममा आफ्ना भाष्यका केही ठाउँमा केही तीक्ष्ण शब्दावलीको प्रयोग गर्नुभएको छ। जस्तै – **'ते तु कुतर्कदूषितान्तःकरणा**

**ब्राह्मणादिवर्णापसदा... तस्मात्तार्किक चाटभटराजाप्रवेश्यमभयं दुर्गमिदमल्पबुद्ध्यगम्यं शास्त्रगुरुप्रसादरहितैश्च'** *(बृ.उ. २।१।२० को भाष्यांश)*

त्यसैगरेर आफ्ना वैशम्पायन गुरुबाट अभिशप्त परम ब्रह्मज्ञानी याज्ञवल्क्य पनि हुनु हुन्थ्यो। उहाँले गुरु वैशाम्पायनसँग पढेको सम्पूर्ण वेद उगेल्नु परेको थियो। उहाँले फेरि भगवान् श्रीसूर्यनारायणसँग वेद पढ्नु भएको थियो। त्यसै गरेर विचक्षण धनुर्धारी एकलव्यले द्रोणाचार्यको मूर्ति बनाएर भावनात्मकरूपमा पढेका थिए। धुरन्धर योद्धा एकलव्यको दाहिने हातको बूँढीऔँलो गुरुदक्षिणाका रूपमा गुरु द्रोणाचार्यले मागेर एकलव्यलाई जिउँदो मुर्दा बनाइदिएका थिए। त्यसै गरेर गुरु परशुरामले महारथी कर्णलाई पनि श्राप दिएका थिए।

आफूलाई पढाउने गुरुलाई विश्वासघात गरेको प्रायश्चित्तस्वरूप पूर्वमीमांसाका प्रकाण्ड विद्वान् कुमारिल भट्टले आत्मदाह गरेका थिए। यस सन्दर्भमा गुरुद्रोही अरू पनि धेरै शिष्यहरू भएको शास्त्रहरूमा पाइन्छ। गुरुद्रोही शिष्यको शास्त्रमा ठूलो निन्दा गरिएको छ। जस्तै–

**विद्यां श्रुत्वा ये गुरुं नाद्रियन्ते प्रत्यासन्ना मनसा कर्मणा च।**
**तेषां पापं भ्रूणहत्याविशिष्टं तेभ्यो नान्यः पापकृच्चास्ति लोके ।।**

*– महाभारत*

शिष्य गलत भए पनि ब्रह्मस्वरूप सद्गुरु गलत कुनै हालतमा पनि हुनुहुँदैन। आफूले पढाएको शिष्यलाई श्राप दिने र अपशब्दहरू कुनै हालतमा पनि गुरुले आफ्ना मुखबाट निकाल्नु हुँदैन। शास्त्रहरूमा आफूभन्दा पनि योग्य आफ्नू चेलो हओस् भन्ने ठान्नु पर्दछ र गुरुले त्यसै अनुरूप आचरण पनि गर्नु पर्दछ। जस्तै – **'सर्वत्र विजयमिच्छेत् शिष्यादिच्छेत् पराजयम्।'** अर्थात् अरू सबैठाउँमा जित्न खोज्नु पर्दछ र आफ्ना शिष्यसँग हार्न खोज्नुपर्दछ। आफूभन्दा पनि योग्य

आफ्ना शिष्यलाई बनाउन सक्नुमा नै सद्गुरुको महिमा छ । सद्गुरु भन्नाले **'शिष्यपृष्ठमपृष्ठं वा व्याख्यानं कुरुते च यः । स सद्गुरुः सतां श्रेष्ठः योग्यायोग्ये च यः समः ॥'** *(ब्रह्मवैवर्तपुराणम्)*

शिष्यले पनि आफ्ना सद्गुरुमा रहेको विद्या भूमिको गर्भभित्र रहेको जललाई खन्तीले बिस्तारै खनेर निकाले भैँ गरेर गुरुको शुश्रूषाद्वारा असल शिष्यले निकाल्नु पर्दछ । त्यस्तो स्वच्छ जलरूपी ज्ञान मोक्षदायी र अत्यन्त आनन्ददायी हुन्छ । शास्त्रमा भनिएको पनि छ । जस्तै –

**खनित्वा हि खनित्रेण भूतले वारि विन्दति ।**
**तथा गुरुगतां विद्यां शुश्रूषुरधिगच्छति ॥**

शिष्यको योग्यता, भावना, क्षमता र पात्रता अनुसार पनि सद्गुरुले गरेको उपदेश आत्मसात् गर्न सक्ने नसक्ने कुरा निर्भर गर्दछ । बृहदारण्यकोपनिषद्को भाग ५ को द्वितीय ब्राह्मणमा एउटा कथा आउँछ । एकपटक प्रजापति अर्थात् ब्रह्माजीका ३ छोराहरू देवता, मनुष्य र दानव मिलेर प्रजापतिका समक्ष उपदेश लिन गएका थिए । ब्रह्माजीले तिनीहरूलाई केवल **'द'** यो एक अक्षरको उपदेश गर्नुभएको थियो । त्यस **'द'** बाट देवताहरूले इन्द्रियदमन गर्ने भनेर बुझेका थिए । किनभने उनीहरूमा त्यसकै कमी थियो । दानवहरूले दया गर्ने भनेको भनेर बुझेका थिए । क्रूर दानवहरूमा दयाभावकै कमी थियो । मनुष्यहरूले दान गर्नुपर्छ भनेर ब्रह्माजीले भन्नुभएको भनेर बुझेका थिए । किन भने शिक्षाद्वारा स्वभावैले आफ्नू पनि कमजोरी थाहा हुन्छ । यसरी एउटै उपदेशलाई आफ्नो क्षमता र भावना अनुसार उनीहरूले भिन्नाभिन्नैरूपमा बुझेका थिए ।

सनातन वैदिक परम्परामा केही अपवादहरूलाई छोडेर गुरु र शिष्यका बीचको सम्बन्ध अत्यन्त उत्कृष्ट रहेको पाइन्छ। माथि शुरुमा नै मुण्डकोपनिषद्मा उल्लेख भएको समित्पाणिपूर्वक गुरूपसत्ति गर्ने कुरा उपलक्षणमात्र भएको उल्लेख गरिसकिएको छ। ब्रह्मज्ञानकालागि श्रोत्रिय ब्रह्मनिष्ठ गुरुका समक्ष जिज्ञासु शिष्यले गुरूपसत्ति गर्न जाँदा समिधा अनिवार्य नभएर नित्य र अनित्य वस्तुको विवेक, यसलोक र परलोकको फलमा वैराग्य, शमादि षट्सम्पत्ति र मुमुक्षुत्व समेत साधनचतुष्टय भने शिष्यमा हुनुपर्ने देखिन्छ। यी चारथरी साधनहरू नभईकन कुनै पनि जिज्ञासु ब्रह्मज्ञानको क्षेत्रमा प्रवेश गर्ने अधिकारी हुनै सक्तैन। अर्को शब्दमा भन्ने हो भने संसारका विषयहरूतर्फ लागेको मान्छेले ब्रह्मज्ञानको त के कुरा ब्रह्मको 'ब्र' सम्म पनि बुझ्न सक्तैन। अतः ब्रह्मज्ञानको अधिकारी निर्विवादरूपमा साधनचतुष्टयसम्पन्न मुमुक्षु, जिज्ञासु मात्रै हुन सक्तछ। ब्रह्मज्ञान र विद्या भनेको एउटै कुरा हो। **'सा विद्या या विमुक्तये'** भनेर शास्त्रले पनि भनेको छ।

ब्रह्मज्ञानको उपदेश दिने श्रोत्रिय ब्रह्मनिष्ठ सद्गुरु र साधनचतुष्टय सम्पन्न विनयी शिष्यका बीचमा मात्रै मधुर, निःस्वार्थ र लोकोत्तर सम्बन्ध कायम हुन सक्तछ। स्वार्थप्रेरित व्यापारी तथा अर्थमुखी गुरु र अनुशासनविहीन, डिस्को र बारको नग्न पश्चिमी संस्कृतिमा डुबेका तथाकथित शिष्यका बीच उपर्युक्त अनुसारको उदात्त भावना तथा मधुर सम्बन्ध स्थापित हुन सक्तैन।

गुरुविना आफैँ पढेर जान्ने भएका गुरुसँग पढेमा त्यस्ता पढाइमा प्रतिष्ठा र सिद्धि हुँदैन भन्ने शास्त्रीय वचन छ। गुरूपरम्पराबाट आएका श्रोत्रिय ब्रह्मनिष्ठ गुरुसँग नै ब्रह्मज्ञानको

उपदेश लिनु पर्दछ । जुन गुरुको गुरुपरम्परा छैन, त्यस्तो गुरु सबै शास्त्रहरू जान्ने भए पनि त्यो मूर्ख जस्तै हो । त्यस्ता गुरुसँग पढेर विद्या प्राप्त हुन सक्तैन । यही कुरा श्रीमद्भगवद्गीताको १३ औं अध्यायको दोस्रो श्लोकको भाष्यमा आद्यजगद्गुरु श्रीशङ्कराचार्यले स्पष्टैसँग लेख्नुभएको छ– **'असम्प्रदायवित् सर्वशास्त्रविद् अपि मूर्खवद् एव उपेक्षणीयः ।'** यहाँ असम्प्रदायवित् भनेर प्राचीन गुरुपरम्परा अनुसार विधिपूर्वक गुरुबाट विद्या अध्ययन नगरेको गुरुलाई भन्न खोजिएको देखिन्छ । जुन गुरु सम्पूर्ण शास्त्रहरूमा पारङ्गत भए पनि ती गुरु मूर्खजस्तै उपेक्षणीय हुन्छन् । त्यस्ता गुरुसँग विद्या पढ्नु हुँदैन । सम्प्रदाय भन्नाले शास्त्रीय परम्परा अनुसार आचार्य वा गुरुले आफ्ना शिष्यहरूलाई विद्या अध्ययन गराउनु वा ज्ञानप्रदान गर्नु हो भनेर बुझ्नु पर्दछ । अस्तु । श्रीकृष्णार्पणमस्तु ।

# साक्षी

साक्षी शब्द सह अक्षि यस्य भन्ने विग्रहबाट इनि प्रत्यय भएर बन्दछ । अथवा **साक्षाद्द्रष्टरि संज्ञायाम्** भन्ने पाणिनि व्याकरणको सूत्रका आधारमा साक्षाद्द्रष्टा अर्थमा साक्षी शब्द बन्दछ। साक्षीशब्दले अड्डाअदालतमा प्रमाणका लागि आफूले देखेको कुरा बताउने व्यक्तिलाई पनि बुझाउँछ। त्यस्तो व्यक्ति जसले आफ्नै आँखाले भएको घटना देख्तछ। तर वेदान्तमा भने अविद्यावृत्तिमा परेको ब्रह्मको बिम्ब नै साक्षी हो।

साक्षीको परिभाषा **'अवेद्यत्वे सति सदा अपरोक्षत्वं साक्षित्वम्।'** भनेर गरिएको छ। अर्थात् थाहा नपाएर पनि सधैँ अपरोक्ष अर्थात् अनुभूत भइरहने वस्तु साक्षी हो।

प्रत्यगात्मा, कूटस्थ र साक्षी एउटै वस्तु हो। साक्षीको परिभाषापछि प्रत्यगात्माको परिभाषा पनि दिनु सान्दर्भिक हुने देखिन्छ। जस्तै – **'प्रति प्रातिलोम्येन अञ्चति असज्जडदुःख-अहङ्काररूपविलक्षणतया सच्चिदानन्दरूपेण भासते।'**

त्यसै गरेर **'कूटे मायायां य स्तिष्ठति सः कूटस्थः'** भनेर कूटस्थको परिभाषा दिएको पाइन्छ। कूटस्थ भनेर परमात्मा, अचल, अपरिवर्तनीय, शाश्वत, सबैभन्दा माथि, अटल, अविनाशी वा अदृश्य वस्तु आदिलाई पनि बुझाउँछ।

साक्षीको प्रतिबिम्बभूत चिदाभास नै जीवात्माका रूपमा प्रत्येक प्राणीका बुद्धिवृत्तिमा उपहित भएर रहन्छ। घडालाई प्रकाशित गर्ने सूर्य घडाको नाश हुँदा जसरी नाश हुँदैन, त्यसैगरेर देह अर्थात् शरीर

नाश हुँदा साक्षीको नाश हुँदैन भनेर शास्त्रहरूमा भनिएको छ–

**घटावभासको भानुर्घटनाशे न नश्यति ।**
**देहावभासकः साक्षी देहनाशे न नश्यति ॥**

त्यसैगरेर भगवान् श्रीकृष्णलाई देवर्षि नारदले साक्षीका रूपमा देखाउनु भएको छ । उहाँले स्तुति गर्दै भन्नुभएको छ –

**त्वमात्मा सर्वभूतानामेको ज्योतिरिवैधसाम् ।**
**गूढो गुहाशयः साक्षी महापुरुष ईश्वरः ॥**

*– भागवत १०।३७।१२*

अर्थात् जसरी एउटै अग्नि सबै काठमा व्याप्त भएर रहन्छ । त्यसैगरेर हे भगवन् ! हजूर नै सबै प्राणीको आत्मा हुनुहुन्छ । आत्माकै रूपमा रहेर पनि आफूलाई हजूर लुकाएर राख्नु हुन्छ । किनभने हजूर बुद्धिरूप गुफामा लुकेर बस्नुभएको छ । सबै प्राणीका नियन्ताकारूपमा सबैका अन्तःकरणमा हजूर सदासर्वदा रहनुभएको अनुभव हुन्छ ।

साक्षीका बारेमा विभिन्न विवरण ग्रन्थ र प्रकरण ग्रन्थहरूमा विभिन्न कोणले वर्णन गरेको पाइन्छ । ती मध्ये धर्मराजध्वरीन्द्रले व्यक्त गर्नुभएको साक्षीसम्बन्धी मत यहाँ प्रस्तुत गर्नु सान्दर्भिक ठान्दछु । **'साक्षी तु अन्तःकरणोपहितं चैतन्यम् ।'** अर्थात् अन्तःकरणोपहित चैतन्य जीवसाक्षी हो । त्यसपछि ईश्वर र साक्षीको उहाँ भेद देखाउनु हुन्छ – **'मायावच्छिन्नं चैतन्यं परमेश्वरः, मायाया विशेषणत्व ईश्वरत्वम्, उपाधित्व साक्षित्वमिति ईश्वरत्वसाक्षित्वयोर्भेदः ।'** अर्थात् मायावच्छिन्नचैतन्य नै परमेश्वर हुन् । माया जब चैतन्यमा विशेषणका रूपमा लाग्दछ, तब त्यस चैतन्यलाई ईश्वर भनिन्छ भने जब त्यसै चैतन्यमा माया उपाधिका रूपमा लाग्दछ तब त्यसलाई साक्षी भनिन्छ ।

साक्षीचैतन्यका सम्बन्धमा उपनिषद्हरूमा विभिन्न भङ्गीबाट उल्लेख भएको पाइन्छ । तीमध्ये एउटा उपनिषद्मा यसरी रूपकका रूपमा उल्लेख गरिएको छ । जस्तै –

**द्वा सुपर्णा सयुजा सखाया समानं वृक्षं परिषस्वजाते ।**
**तयोरन्यः पिप्पलं स्वाद्वत्त्यनश्नन्नन्यो अभिचाकशीति ॥**

– *श्वेताश्वतरोपनिषद् ४।६*

अर्थात् सधैं सँगै बस्ने दुइटा चराहरू एउटै रुखमा बस्तछन् । ती दुइटा चराहरूमध्येमा एउटा चरो त्यस रुखको स्वादिष्ट फल खान्छ । अर्को चरो भने फल नखाएर हेरिमात्रै रहन्छ ।

यसमा वर्णन गरिएका दुई चराहरूमा एउटा चरो भनेको प्रारब्ध कर्मको भोग अर्थात् सुखदुःखको भोग गरेर बसेको जीवात्मा हो भने अर्को चरो कुनै पनि खालको भोग नगरीकन बसेको नित्यशुद्धबुद्धमुक्तस्वरूप साक्षीचैतन्य हो ।

यसै कुरालाई भागवतमा पनि यसरी वर्णन गरिएको छ । जस्तै –

**सुवर्णावेतौ सदृशौ सखायौ यदृच्छयैतौ कृतनीडौ च वृक्षे ।**
**एकस्तयोः खादति पिप्पलान्नमन्यो निरन्नोऽपि बलेन भूयान् ॥**

– *भागवत ११।११।६*

अर्थात् दुइटा उस्तै देखिने र सधैँ सँगसँगै बस्ने चराहरू एउटा वृक्षमा गुँड बनाएर बसेका छन् । तीमध्ये एउटाले त्यस पिप्पलको फल खान्छ भने अर्को चरोचाहिँ पिप्पलको फल नखाइकनै बलिष्ठ भएर बस्तछ ।

यस श्लोकमा पनि उपनिषद्का मन्त्रमा वर्णन गरिएजस्तै कर्मफलभोक्ता जीवात्मा हो र अभोक्ता चाहिँ साक्षीआत्मा हो ।

यसै कुराको स्पष्टीकरण दिँदै अर्को श्लोकले भन्छ। जस्तै –

**आत्मानमन्यं च स वेद विद्वानपिप्पलादो न तु पिप्पलादः।**
**योऽविद्यया युक् स तु नित्यबद्धो विद्यामयो यः स तु नित्यमुक्तः॥**

*– भागवत ११।११।७*

अर्थात् ती दुई चराहरू भनेका एउटा साक्षी हो। त्यसले भोग गर्दैन। त्यस अभोक्ता आत्माले आफूलाई र जगत्लाई पनि जान्दछ। तर भोक्ता जीवात्माले आफूलाई पनि जान्दैन र अरूलाई पनि जान्दैन। जीवात्मा अविद्याका कारण नित्यबद्ध छ भने साक्षी विद्यास्वरूप भएको कारण नित्यमुक्त छ।

यसरी साक्षीका बारेमा श्रुतिस्मृति आदि शास्त्रहरूले ब्रह्मको बिम्बस्थानीय परमात्मा वा ईश्वरका रूपमा कल्पना गरेका छन्। प्रत्येक प्राणीका अन्तःकरणमा अविद्यात्मक उपाधिमा बसेर प्रतिबिम्बस्थानीय जीवात्मा वा चिदाभासको सर्जक भएर यो बसेको हुन्छ। जीवात्माले गरेका सम्पूर्ण क्रियाकलापहरू अहर्निश हेरेर नै यो बसिरहेको हुन्छ। त्यसैकारण नै यसलाई साक्षी भनिन्छ। साक्षीले अहङ्कार, विषयहरू र बुद्धिलाई समेत प्रकाशित गर्दछ। साक्षी सुषुप्तिमा आफैँ प्रकाशित भएर बस्तछ। साक्षीचैतन्यका बारेमा अद्वैतवेदान्तका विभिन्न आचार्यहरूले विभिन्न विचार व्यक्त गरेका छन्। सङ्क्षेपशारीरककार सर्वज्ञात्ममुनिले साक्षीचैतन्यलाई ईश्वरचैतन्य भनेका छन्।

अवच्छेदवादका प्रतिपादक भामतीकार वाचस्पति मिश्रले साक्षीलाई ब्रह्म नै भनेका छन्। किनभने त्यही ब्रह्म नै अवच्छेदक अर्थात् अविद्यारूप उपाधिका भेदका कारण नाना प्रकारका जीव र विषयका रूपमासमेत प्रतीत हुन्छ। अन्ततः जीव ब्रह्म नै हो।

विवरणकार आचार्य पद्मपादले भने स्वतन्त्रादि गुणहरूले युक्त भएको हुँदा साक्षीचैतन्यलाई बिम्बस्थानापन्न भन्नुका अतिरिक्त उहाँले ईश्वरचैतन्य नै साक्षीचैतन्य हो भनेर पनि भन्नुभएको छ।

अरू दर्शनहरूले साक्षीचैतन्यलाई सोझै मान्यता नदिएको भए तापनि अद्वैतवेदान्तले भने यसलाई मान्यता दिएर यसैको आभासलाई जीवात्मा मानेको छ। ब्रह्म र जीवका बीचमा साक्षीचैतन्यको कल्पना समीचिन नै देखिन्छ। पाणिनिले पनि आफ्नू व्याकरणमा **'साक्षाद्द्रष्टरि संज्ञायाम्'** भन्ने सूत्र लेखेर साक्षाद्द्रष्टा नै साक्षी भएको कुरा स्वीकार गर्नुभएको छ। अस्तु। श्रीकृष्णार्पणमस्तु।

# शिशुब्राह्मण

शिशुब्राह्मणको प्रसङ्ग बृहदारण्यकोपनिषद्को दोस्रो अध्यायको दोस्रो ब्राह्मणमा आउँछ। यो शिशुब्राह्मण अजातशत्रुब्राह्मण र मूर्तामूर्तब्राह्मणका बीचमा रहेको स्यानू ब्राह्मण हो। यस शिशुसंज्ञक ब्राह्मणमा मध्यम प्राण र त्यसका उपकरणहरूको समेत वर्णन गरिएको छ। **'ब्रह्म ज्ञापयिष्यामि'** अर्थात् म तिमीलाई ब्रह्मको बोध गराउँदछु भन्ने प्रतिज्ञा गरेर ब्राह्मण शुरु भएको छ। जसबाट यो जगत् उत्पन्न भयो जसको यो स्वरूप हो र अन्त्यमा जसमा गएर यो लीन हुन्छ, त्यो नै ब्रह्म हो भन्ने कुरा पनि भनिसकिएको छ। तर यो संसार कसरी उत्पन्न हुन्छ ? कुन रूपमा रहन्छ ? र कसरी लीन हुन्छ ? भन्ने सम्बन्धमा पनि भनिसकिएको छ। यो जगत् पञ्चमहाभूतबाट उत्पन्न हुन्छ। यो पञ्चमहाभूत नामरूपात्मक हो र नामरूप सत्य हो भनेर पनि भनिसकिएको छ। त्यसै पञ्चभूतरूप सत्यको पनि सत्य ब्रह्म हो। शिशुब्राह्मणको कुरा विज्ञानमय आत्मा बुझाउने प्रसङ्गमा नै आएको छ।

उपर्युक्त अनुसार पञ्चमहाभूतलाई यस उपनिषद्ले सत्य भनेपछि पञ्चमहाभूत कसरी सत्य भयो ? भन्ने प्रश्नका समाधानकालागि नै शिशुब्राह्मण र मूर्तामूर्त दुई ब्राह्मणहरू उपनिषद्मा आएका हुन्। यस शिशुब्राह्मणमा जम्मा ४ मन्त्रहरू छन्। प्रथम मन्त्रले शिशुसंज्ञक मध्यमप्राणको उपकरण सहित वर्णन गरेको छ। दोस्रो मन्त्रमा मध्यम प्राणरूप शिशुका नेत्रान्तर्गत सात अक्षितिहरूको वर्णन गरिएको छ। तेस्रो मन्त्रमा श्रोत्रादि प्राणसहित शिरमा

चमसदृष्टिको विधान गरिएको छ। चौथो मन्त्रमा विभागपूर्वक सप्तर्षि दृष्टिको वर्णन गरिएको छ।

मूर्तामूर्त भूतस्वरूप भएको कारण देहेन्द्रियरूप भूत र प्राण पनि सत्य हुन्। तिनै देहेन्द्रियस्वरूप भूतहरूको सत्यताको निश्चय गर्ने उद्देश्यले यी दुई ब्राह्मणहरू अर्थात् शिशुब्राह्मण र मूर्तामूर्तब्राह्मणहरू आरम्भ गरिएका हुन्। देह र इन्द्रियहरूको सत्यत्वको निश्चयद्वारा नै सत्यको पनि सत्य ब्रह्मको निश्चय हुन्छ। ब्रह्मको निश्चय गर्ने सन्दर्भमा श्रुतिमा इन्द्रियहरू र प्राणका स्वरूपको पनि निश्चय गर्न शिशुब्राह्मणको प्रसङ्ग आएको हो। त्यसको प्रथम मन्त्र र त्यसको अर्थ निम्न अनुसार छ। जस्तै – **'यो ह वै शिशुं साधनं सप्रत्याधानं सस्थूणं सदामं वेद ह सप्त ह द्विषतो भातृव्यानवरुणद्धि। अयं वाव शिशुर्योऽयं मध्यमः प्राणस्तस्येदमेवाधानमिदं प्रत्याधानं प्राणः स्थूणान्नं दाम॥'** अर्थात् जसले आधान, प्रत्याधान, स्थूणा र दाम सहित शिशुलाई जान्दछ त्यसले फल प्राप्त गर्दछ। फल भन्नाले उसको द्वेष गर्ने भएका सातभ्रातृव्य अर्थात् शत्रु अथवा सौतेने भाइहरूको उसले प्रतिरोध गर्न सक्तछ। शिरमा रहेका ७ प्राणहरू विषयोपलब्धिका द्वार हुन्। यी ७ द्वारहरूबाट विषयहरूको ज्ञानका साथै रागद्वेष आदि पनि अन्तःकरणमा प्रविष्ट हुने हुँदा यिनलाई भातृव्य अर्थात् शत्रु भनिएको हो। यिनले आत्मचिन्तनतर्फ लाग्नु पर्ने दृष्टि वा चित्तलाई विषयतर्फ लगाइदिन्छन्। यी भातृव्यहरूले प्रत्यगात्माको दर्शन गर्न बाधा पुऱ्याउँदछन्। कुनै पनि जिज्ञासुले यस कुरालाई जान्न सक्यो भने त्यसले भातृव्यहरूले सृजना गरेको बाधा अथवा आवरणलाई हटाएर आत्मज्ञान गर्न सक्तछ।

मन्त्रमा वर्णित आधान शब्दले भौतिक शरीरलाई बुझाउँछ।

**'आधीयते अस्मिन्निति आधानम्'** अर्थात् जहाँ कुनै कुरा राखिन्छ त्यसैलाई आधान भनिन्छ । शरीरमा शिशु अर्थात् प्राण रहने हुँदा शरीर आधान अथवा अधिष्ठान हुन गयो ।

शिर प्रत्याध्यान हो । **'प्रदेश विशेषेषुप्रति प्रत्याधीयते इति प्रत्याधानम् ।'** यसै शिरका प्रदेशविशेषहरूमा प्रत्याधान गरिने भएकोले प्रत्याधान भनिएको हो ।

प्राण स्थूणा अर्थात् कीलो हो । यो अन्नपानादिजनित शक्ति हो । प्राण र बल पर्यायवाची हुन् । शरीरमा बलको आधार नै प्राण हो ।

अन्न नै दाम अर्थात् दाम्लो हो । खाना खाइसकेपछि खाएको अन्न तीन भागमा बाँडिन्छ । स्थूलपरिणामलाई मलमूत्रका रूपमा शरीरले बाहिर फ्याँकिदिन्छ । जुन मध्यम परिणाम हो, त्यो रसमा परिवर्तित हुन्छ । त्यसले रगतदेखि लिएर वीर्यसम्मका सात धातुहरूलाई परिपुष्ट पार्दछ । त्यसमा जुन सूक्ष्मतम रस हुन्छ, त्यसलाई **'ऊर्क्'** भनिन्छ । त्यसै ऊर्क्लाई ऊर्जा पनि भनिन्छ । त्यही **ऊर्क्** नै मन हो । त्यही ऊर्क् अथवा प्रभाव नाइटोभन्दा माथिको हृदय प्रदेशमा प्रवेश गर्छ । त्यसपछि मुटुबाट फैलिएका ७२ हजार नाडीहरूमा प्रवेश गर्दछ । त्यसपछि यसले स्थूणासंज्ञक बल उत्पन्न गर्दछ । तत्पश्चात् त्यस **ऊर्क्**ले शिशु नाम गरिएको इन्द्रियसङ्घातरूप लिङ्गशरीरलाई सुदृढ गरेर राख्ने काम गर्दछ । बाछालाई कीलामा दाम्लोले बाँधेर राख्ने काम गरेझैँ यस अन्नले पनि प्राण र शरीरलाई बाँधेर राख्ने काम गर्दछ ।

त्यसैगरेर छान्दोग्योपनिषद्ले पनि **'अन्नमशितं त्रेधा विधीयते तस्य यः स्थविष्ठो धातुस्तत्पुरीषं भवति यो मध्यमस्तन्मांसं योऽणिष्ठस्तन्मनः ।'** *(छा.उ.६।५।१)* अर्थात् खाएको अन्न तीनप्रकारको

हुन्छ। त्यसको अत्यन्त स्थूलभाग मल हुन्छ। मध्यमभाग मासु हुन्छ। अत्यन्त सूक्ष्मभाग मन हुन्छ। **'अन्नमयं हि सौम्य मनः।'** *(छा.उ.६।५।४)*

त्यसपछि शिशु ब्राह्मणको दोस्रो मन्त्र आउँछ। यस मन्त्रमा शिशुका आँखामा रहेका सात अक्षितिहरूको वर्णन पाइन्छ। अक्षिति भनेको आँखामा रहेका राता धर्काहरू हुन्। आँखामा रहेका तिनै राता धर्काहरूमा रुद्रदेवता यस शिशु नाम गरेको मध्यप्राणमा बस्तछन्। त्यसैगरेर आँखामा रहेको जलद्वारा मेघ, आँखाको नानीद्वारा आदित्य, आँखामा रहेको कालो भागद्वारा अग्नि, आँखामा रहेको सेतो भागद्वारा इन्द्र, तल्लो परेलाद्वारा पृथिवी र माथिल्लो परेलाद्वारा द्युलोक यस शिशुसंज्ञक मध्यप्राणमा अनुगत भएर रहन्छन्। जसले यस शिशुनामक मध्यम प्राणलाई यसरी जान्दछ, त्यसको अन्न कहिल्यै समाप्त हुँदैन।

शिशुब्राह्मणको तेस्रो मन्त्रले शिरमा चमसदृष्टिको विधानको वर्णन गरेको पाइन्छ। चमस नामगरेको पात्र तलतिर पुवाल र माथितिर फराक भएर उठेको हुन्छ। त्यसमा विश्वरूप नाम गरेको यश रहेको हुन्छ। त्यसका शिरमा सात ऋषिहरू र वेदद्वारा कुरा गर्ने आठौँ वाक् रहेका हुन्छन्। चमस भनेको शिर हो। त्यसमा रहेको यश भनेको प्राण हो। शिरमा सात ऋषिहरू बस्तछन् भनेको स्फुरणात्मक प्राणलाई भनेको हो। प्राण नै ऋषि हो। शिरमा बस्ने आठौँ वाक् हो।

शिशुब्राह्मणको चौथो मन्त्रमा शिरमा रहेका ज्ञानेन्द्रियहरूमा सप्तर्षिदृष्टिको विभागपूर्वक अर्थात् चमसरूपी शिरका छेउछेउमा बसेका ऋषिहरूको वर्णन गरिएको छ। दुई कानमा गौतम र

भरद्वाज ऋषिहरू बसेका छन् । यसैगरेर दुई आँखामा विश्वामित्र र जमदग्नि, नाकका दुई पुवालमा वसिष्ठ र कश्यप र मुखमा अत्रि ऋषि बसेका छन् । जसले यसप्रकार प्राणको यथार्थस्वरूप जान्दछ । त्यो मध्यमप्राण भएर आधानप्रधानगत भोक्ता नै हुन्छ । उसले कहिल्यै भोज्य हुनु पर्दैन ।

यसरी शिशुब्राह्मणले प्राणको अध्यात्मभाव बुझाउँन मध्यमप्राणको वर्णन गरेको हो । यसले प्राणको इयत्ताको वर्णन गरेको छ । यो कुरा विज्ञानमय आत्माको निर्धारणको प्रसङ्गमा आएको हो । देह, इन्द्रिय र प्राणादि ब्रह्मका धर्म होइनन् भनेर ब्रह्मबाट व्यावर्तन गर्न नै यहाँ पञ्चमहाभूतदेखि लिएर प्राणसम्मका मायिक वस्तुहरूको चर्चा गरिएको हो । अन्तिममा गएर त नेति नेतिद्वारा सर्वोपाधि निरस्त ब्रह्मको प्रतिपादनमा सहयोग गर्नु नै यस शिशुब्राह्मणको पनि उद्देश्य हो । अस्तु । श्रीकृष्णार्पणमस्तु ।

# मूर्तामूर्तब्राह्मण

यस मूर्तामूर्तब्राह्मणको कुरा यसभन्दा पहिलेको शिशुब्राह्मणका सन्दर्भमा पनि मैले उल्लेख गरिसकेको छु । मूर्तामूर्तब्राह्मणको महत्त्व यस बृहदारण्यकोपनिषद्मा रहनगएको कुरा पनि शिशुबाह्मणमा उल्लेख भइसकेको छ । यो ब्राह्मण बृहदारण्यकोपनिषद्को दोस्रोअध्यायको तेस्रोब्राह्मणमा पर्दछ । यस मूर्तामूर्तब्राह्मणमा जम्मा ६ ओटा मन्त्रहरू छन् । त्यसपछि मैत्रेयीब्राह्मण आउँछ ।

यो मूर्तामूर्तब्राह्मण **'द्वे वाव ब्रह्मणो रूपे मूर्तं चैवामूर्तं च ।'** भन्ने प्रथम मन्त्रबाट शुरु भएर **'तस्य हैतस्य पुरुषस्य रूपम् ।'** भन्ने छैटौँ मन्त्रमा गएर समाप्त हुन्छ । यस ब्राह्मणमा निर्गुण तथा निराकार ब्रह्मलाई सूचन गर्ने मूर्त र अमूर्तस्वरूपहरूको विभिन्न विधाले वर्णन गरेको पाइन्छ । यस ब्राह्मणको ज्ञान भएपछि मात्रै यसपछि वर्णन गरिने ब्रह्मलाई जिज्ञासु विविदिषुले बुझ्नसक्ने देखिन्छ ।

योभन्दा पहिलेको शिशुब्राह्मणमा प्राण नै सत्य हो भनेर भनिएको छ । त्यसलाई प्राणोपनिषद् भनेर भनिन्छ । ब्रह्मोपनिषद्को प्रसङ्गमा नै प्राणोपनिषद्को पनि प्रसङ्ग आएको देखिन्छ । यस ब्राह्मणमा भने मूर्तामूर्तको स्वरूप के हो ? र त्यसको सत्यता कसरी प्रमाणित हुन्छ ? भन्ने सम्बन्धमा नै उल्लेख भएको पाइन्छ । शरीर र इन्द्रियरूप सत्यसंज्ञक पञ्चमहाभूतहरूका स्वरूपको निश्चय गर्नका लागि नै यो ब्राह्मण शुरु भएको हो । सम्पूर्ण मूर्त र अमूर्त उपाधिविशेषको निषेधद्वारा **'नेति नेति'** इत्यादि रूपले ब्रह्मका स्वरूपको निरूपण गर्नु नै यस श्रुतिको उद्देश्य अर्थात् अभीप्सा रहेको

देखिन्छ। मूर्तामूर्तब्राह्मणको पहिलो मन्त्र यसप्रकार छ– **द्वे वाव ब्रह्मणो रूपे मूर्तं चैवामूर्तं च मर्त्यं चामृतं च स्थितं च यच्च सच्च त्यच्च ॥१॥** अर्थात् ब्रह्मका दुई रूप छन्। ती हुन् मूर्त र अमूर्त, मर्त्य र अमर्त्य, स्थित र यत् अर्थात् चर अनि सत् र त्यत्।

पञ्चभूतजनित देह र इन्द्रियहरूसँग सम्बद्ध ब्रह्मका दुई रूप छन्। १. मूर्त र अमूर्तसंज्ञा भएको ब्रह्म। २. मर्त्य र अमर्त्यसंज्ञा भएको ब्रह्म। तज्जनित वासनारूप सर्वज्ञ र सर्वशक्तियुक्त ब्रह्म सोपाख्य अर्थात् सोपाधिक ब्रह्म हो। जुन वस्तु शब्दप्रतीतिको विषय हुन्छ, त्यसलाई सोपाख्य भनिन्छ। एकातर्फ यही ब्रह्म नै क्रिया, कारक, फल र समस्त व्यवहारको आश्रय हो भने अर्कातर्फ त्यही ब्रह्म सम्पूर्ण उपाधिहरूले रहित सम्यग्ज्ञानको विषय, अजन्मा, अजर, अमर, अभय, वाणी र मनको अविषय हो। त्यो ब्रह्म अद्वैत भएको कारण ब्रह्मलाई नेति नेतिबाट श्रुतिले निर्देशन गरेको छ।

मूर्त र अमूर्तसमेतबाट बुझिने ब्रह्मका अरू पनि विशेषणहरू छन्। ती विशेषणहरू हुन् – मर्त्य अर्थात् मरणधर्मी र अमृत अर्थात् अमरणधर्मी, स्थित अर्थात् परिच्छिन्न, यत् अर्थात् व्यापक, सत् अर्थात् देखिने र त्यत् अर्थात् नदेखिने।

यसरी मूर्त र अमूर्तहरू चारचारओटा विशेषणहरूले युक्त भएको कुरा दर्शाइएपछि अब कुनकुन विशेषणहरू मूर्तका हुन् र कुनकुन विशेषणहरू अमूर्तका हुन् भन्ने सम्बन्धमा अगाडि आउने मन्त्रहरूले वर्णन गरेको पाइन्छ। दोस्रो मन्त्रले यही भन्दछ– **तदेतन्मूर्तं यदन्यद्वायोश्चान्तरिक्षाच्चैतन्मर्त्यमेतत्स्थितमेतत्सत्तस्यैतस्य मूर्त– स्यैतस्य मर्त्यस्यैतस्य स्थितस्यैतस्य सत एष रसो य एष तपति सतो ह्येष रसः ॥२॥** अर्थात् जुन वायु हो, त्यो अन्तरिक्षभन्दा

भिन्नै हो। त्यो मूर्त हो। त्यो मर्त्य हो। त्यो स्थित हो। त्यो सत् हो। त्यो यस मूर्तको, यस मर्त्यको, यस स्थितको, यस सत्को रस हो। जुन यो तातो हो, यो सत्को नै रस हो।

जुन मूर्त हुन्छ, त्यो अवयव युक्त हुन्छ। त्यसका अवयवहरू एक अर्कामा अनुप्रविष्ट भएका हुन्छन्। यो संहत हो। पृथिवी, अप् र तेज मूर्तवस्तु हुन्। यीदेखि बाहेकका अरू दुई भूतहरू अर्थात् वायु र आकाश अमूर्त वस्तु हुन्। मर्त्य अर्थात् मरणधर्मी हुन्। किनभने यी स्थित हुन्। मूर्त स्थित, परिच्छिन्न र अरू वस्तुसँग सम्बन्धयुक्त हो। यो मर्त्य भएको कारण मूर्त हो र मूर्त भएको कारण मर्त्य हो। अथवा अर्को शब्दमा भन्ने हो भने मूर्त हुनाले मर्त्य, मर्त्य भएका कारण स्थित र स्थित भएका कारण सत्य हो। यी चार विशेषणहरूले युक्त भूतत्रय सबै प्रकारले ब्रह्मका मूर्तरूप हुन्। एउटा विशेषण ग्रहण गरिएमा सबै विशेषणहरू गृहीत हुन्छन्। त्यसैकारण त्यो यस मूर्तको, यस मर्त्यको, यस स्थितको र यस सत्को अर्थात् उपर्युक्त चारथरी विशेषणहरूले विशिष्ट भूतत्रयको रस वा सार हो।

यी तीनैथरी भूतहरूका सारतम वस्तु सविता हुन्। तीन भूतहरू यसैका सार हुन्। किनभने यी सविताबाटै विभक्त भएका विभिन्न रूपयुक्त हुन्। जुन यी सविता हुन् अर्थात् जसबाट यो सवितृमण्डल तप्त हुन्छ, ती आधिदैविककार्यरूप हुन्। किनभने यी सद्रूप भूतत्रयका रस हुन्। यसप्रकार अधिदैवभावलाई बुझ्नु पर्दछ। यिनै मूर्त सविताले नै तताउँछन् र सार वस्तु पनि यिनै हुन्। यो जुन मण्डलान्तर्गत आधिदैविक करण हो। त्यसको अगाडिका मन्त्रहरूमा वर्णन गरिनेछ।

मूर्तामूर्त ब्राह्मणको तेस्रो मन्त्र यसप्रकार छ– **अथामूर्तं–वायुश्चान्तरिक्षं चैतदमृतमेतद्यदेतत्त्यस्यैतस्यामूर्तस्यैतस्यामृतस्यैतस्त्य यत एतस्य**

**त्यस्यैष रसो य एष एतस्मिन्मण्डले पुरुषस्य ह्येष रस इत्यधिदैवतम् ॥३॥** अर्थात् वायु र अन्तरिक्ष अमूर्त हुन्। यिनीहरू अमृत हुन्, यत् र त्यत् पनि हुन्। त्यस अमूर्तको, यस अमृतको र त्यत्को यो सार हो। जुन यस मण्डलमा पुरुष छ। त्यही पुरुष नै यस त्यत्को सार हो। यो अधिदैवतदर्शन हो।

अब अमूर्तको वर्णन गरिन्छ। वायु र अन्तरिक्ष अमृत हुन्। ती अमूर्त हुन् र त्यसैकारण अस्थित हुन्। यिनीहरूको कसैसँग पनि विरोध छैन। यी अपरिच्छिन्न हुन्। यसैकारण यी त्यत् हुन्। अर्थात् यी परोक्ष हुन्। ती यस अमूर्तका, यस अमृतका यस यत् अर्थात् गतिशीलताका र यस त्यत् वा परोक्ष अर्थात् यी चार विशेषणहरूले युक्त अमूर्तको रस हो। यो यस मण्डलको पुरुष हो। अर्थात् यो इन्द्रियात्मा हिरण्यगर्भ हो। अर्को शब्दमा यसलाई प्राण पनि भनिन्छ। यो नै यस अमूर्त भूतद्वयको रस हो। यो सारतम भाग हो।

यो अमूर्त भूतको रस हो, अर्थात् चेतन तत्त्व हो। त्यतिमात्रै नभएर यो रस मूर्त भूत, अमूर्त भूत र सबैतिर ब्रह्मरूपले विवक्षित छ। यहाँ पुरुष भन्नाले अन्नरसमयादिका अर्थमा लिनुपर्छ। यो अधिदैवत मूर्तामूर्त हो।

यसपछिको चौथो मन्त्रले अध्यात्म मूर्तामूर्तको विभागलाई विवक्षा गर्दछ। यसले मूर्तामूर्त अधिदैवभावको वर्णन गरेको छ। जस्तै – **अध्यात्ममिदमेव मूर्तं यदन्यत्प्राणाच्च यश्चायमन्तरात्मन्नाकाश एतन्मर्त्यमेतत्स्थितमेतत्सत्तस्यैतस्य मूर्तस्यैतस्य मर्त्यस्यैतस्य सत एष रसो यच्चक्षुः सतो ह्येष रसः ॥४॥** अर्थात् अब अध्यात्म मूर्तामूर्तको विभागपूर्वक मूर्तको वर्णन गरिन्छ। प्राण र शरीरभित्र रहेको आकाशभन्दा जो भिन्नै छ, त्यही मूर्त हो, त्यो

मर्त्य हो, त्यो स्थित हो र त्यो सत्य हो। जुन यो नेत्र छ, त्यो नै यस मर्त्यको, यस मूर्तको, यस स्थितको र यस सत्को सार हो।

यहाँ मूर्तामूर्तमध्ये मूर्तको अध्यात्मविभागको वर्णन गरिन्छ। यो विभाग भनेको के हो ? त्यसको चर्चा यहाँ गरिन्छ। मूर्त भनेको प्राण वायुभन्दा भिन्नै हो। अर्थात् यस शरीरभित्र जुन आकाश छ र जुन प्राण छ, ती दुई तत्त्वदेखि बाहेक शरीरका आरम्भक अरू तीन तत्त्वहरू पृथ्वी, जल र तेज नै मूर्त हुन् र मर्त्य पनि हुन्। सत्को चक्षु नै रस हो। अर्थात् आध्यात्मिक अथवा शरीरारम्भक भूतहरूको यही चक्षु नै रस हो र सार हो। जसरी अधिदैवत भूतवर्ग आदित्यमण्डलका कारण नै सारवान् छन्। त्यसै गरेर यो सम्पूर्ण शरीर पनि त्यसै आदित्यमण्डलका कारण नै सारवान् छ।

यसरी आध्यात्मिकरूपमा शरीरका अङ्गहरूमध्ये चक्षुलाई साररूपमा लिइएको छ। किनभने उत्पन्न हुने प्राणीहरूको सर्वप्रथम आँखाको नै निर्माण हुन्छ भनेर श्रुतिले भनेको छ। यो चक्षु सत्को रस हो। अर्थात् यसको तात्पर्य के हो भने चक्षु मूर्त हो। यी तीनैथरी भूतहरूको कार्य हो। यो मूर्त सरह धर्मले युक्त छ। यो चक्षु शरीरका अरू अवयवहरूमा श्रेष्ठ छ। यो चक्षु आध्यात्मिक तीनैथरी भूतहरूको रस हो, अर्थात् सार हो।

यस चारौँ मन्त्रमा मण्डलान्तर्गत पुरुषको उल्लेख भएको छ। त्यो पुरुषशब्द अन्नरसमयादिका अर्थमा आएको हो। यस मन्त्रमा अध्यात्ममूर्तको वर्णन गरिएको छ।

अब आउँने पाँचौँ मन्त्रले अमूर्तको विशेषणसहित वर्णन गर्दछ। जस्तै – **अथामूर्तं प्राणश्च यश्चायमन्तरात्मन्नाकाश एतदमृतमेत-द्यदेतत्त्यत्तस्यैतस्यामूर्तस्यैतस्यामृतस्यैतस्य यत एतस्य त्यस्यैष**

**रसो योऽयं दक्षिणेऽक्षन्पुरुषस्त्यस्य ह्येष रसः ॥५॥** अर्थात् अब अमूर्तको वर्णन गरिन्छ । प्राण र यस शरीरभित्र रहने आकाश अमूर्त हो, अमृत हो, यत् हो र त्यत् हो । त्यो यस अमूर्तको, यस अमृतको, यस यत्को र यस त्यत्को रस हो । जुन यहाँ दक्षिण नेत्रकाभित्र पुरुष विद्यमान छ, त्यो नै त्यत्को रस हो ।

मूर्तको वर्णन चारौँ मन्त्रले गरिसकेपछि अब अमूर्तको पनि छोटकरीमा वर्णन गरिन्छ । पाँच महाभूतहरूमध्ये पृथिवी, जल र तेज मूर्तभित्र पर्दछन् र तीदेखि बाहेक प्राण अर्थात् वायु र आकाश अर्थात् देहान्तर्गत आकाश अमूर्तभित्र पर्दछन् । यी दुवै अमूर्त हुन् । दक्षिण नेत्र भित्र रहने पुरुष यस त्यत्को रस अर्थात् सार हो । दाहिने आँखामा भनेर यसरी विशेष नेत्रको ग्रहण गर्नु शास्त्रप्रत्यक्ष भएका कारणले हो । किनभने लिङ्गदेहको विशेषरूपले दक्षिण नेत्रमा अधिष्ठातृत्व रहन्छ भनेर शास्त्रहरूले भनेको छ । सबै श्रुतिहरूले पनि यही कुरा भनेका छन् । **'त्यस्य ह्येष रसः'** भनेर मन्त्रमा भनिएको हो । यसको अर्थ यसलाई विशेषरूपले ग्रहण गर्न नसकिने भएको हुँदा त्यत् अर्थात् अमूर्त दुवैथरी भूतहरूलाई दाहिने आँखामा रहेको पुरुषको अमूर्तत्व र सारत्वको हेतुत्वप्रतिपादन गर्नकालागि नै हो भनेर बुझ्नु पर्दछ ।

अब यसपछि इन्द्रियात्मा पुरुषका स्वरूपको वर्णन तल उल्लेख गरिने छैटौँ मन्त्रले गर्दछ । योभन्दा पहिलेका मन्त्रहरूमा सत्य शब्दको वाच्य र ब्रह्मको उपाधिभूत अध्यात्मका साथै अधिदैवत मूर्तामूर्तको कार्यकारणको पनि विभाग गरिएकोछ । छैटौँ मन्त्र यसप्रकार छ – **तस्य हैतस्य पुरुषस्य रूपम् । यथा महारजनं वासो यथा पाण्ड्वाविकं यथेन्द्रगोपो यथाग्न्यर्चिर्यथा पुण्डरीकं**

**यथा सकृद्विद्युत्तं सकृद्विद्युत्तेव ह वा अस्य श्रीर्भवति य एवं वेदाथात आदेशो नेतिनेति न ह्येतस्मादिति नेत्यन्यत्परमस्त्यथ नामधेयं सत्यस्य सत्यमिति प्राणा वै सत्यं तेषामेव सत्यम् ॥६॥**
अर्थात् त्यस पुरुषको रूप बेसारमा रङ्गाएको वस्त्रजस्तो छ। सेतो उनी वस्त्रजस्तो छ। इन्द्रगोप कीराको रातो रङ्गजस्तो छ। अग्निको ज्वालाजस्तो छ। सेतो कमलजस्तो छ र विजुलीको चमकजस्तो छ। जसले यस्तो जान्दछ, उसको श्री बिजुलीको कान्ति वा चमकजस्तो भएर सबैतिर फैलिन्छ। अब यसपछि नेति नेति यस्तो ब्रह्मको आदेश आउँछ। नेतिनेतिभन्दा ठूलो अर्को कुनै उत्कृष्ट आदेश हुनसक्तैन। सत्यको सत्य नै त्यसको नाम हो। प्राण नै सत्य हो। उसको यही सत्य हो।

श्रीशङ्कराचार्यले यस मन्त्रको अत्यन्त लामू भाष्य लेख्नुभएकोछ। यसमा इन्द्रियात्मा पुरुषका स्वरूपको वर्णन गरिएको छ। बृहदारण्यकोपनिषद्को द्वितीय अध्यायको शुरूदेखि दृप्तवालाकि गार्ग्य र राजा अजातशत्रुका बीचमा ब्रह्मसम्बन्धी लामू संवाद भएको छ। अन्त्यमा राजाले गार्ग्यलाई सुतेको मानिसलाई उठाएर विभिन्न तरिकाले ब्रह्मज्ञान गराउने प्रयास गरेको देखिन्छ। यसरी उक्त प्रसङ्गद्वारा नामरूपअभिमानी विज्ञानमय आत्मा होइन, विज्ञानमय आत्मा त यीभन्दा पर छ भनेर श्रुतिले भनेको छ। सामान्यरूपमा सर्वत्र व्याप्त भएर पनि हृदयदेशमा त्यो आत्मा विशेषरूपमा अभिव्यक्त हुन्छ। वस्तुतः त्यही नै सबैको प्रेरक र भोक्ता पनि हो। अरू इन्द्रियाभिमानी देवताहरू यसै आत्माका विभूतिहरू हुन्। आत्माको सत्ताविना तिनको स्वतन्त्र अस्तित्व रहँदैन। त्यही विज्ञानमय आत्मालाई बुझाउँन यो मूर्तामूर्तब्राह्मण आएको हो। यसमा मूर्त पञ्चमहाभूतमध्येका भूतत्रय पृथ्वी, जल र तेजका

साथै अमूर्त पञ्चमहाभूतमध्येका बाँकी दुई भूतहरू वायु र आकाश तिनका चारचार विशेषणहरूसमेतको सारतत्त्व विज्ञानात्मा वा ब्रह्म नै हो। इन्द्रियहरूलाई प्रेरित गर्ने भएको हुँदा ऊ प्राण हो। प्राणलाई पनि प्रेरित गर्ने भएको हुँदा त्यो प्राणको पनि प्राण हो।

यसरी यस ब्राह्मणमा सत्यको अशेष स्वरूपको निरूपण गरेर ब्रह्मलाई सत्यको पनि सत्य भनिएको छ। त्यही परम ब्रह्मका स्वरूपको निश्चय गर्न मैत्रेयी ब्राह्मण अगाडि गएर शुरु हुन्छ। त्यहाँ **नेति नेति** भन्ने निर्देशद्वारा सत्यको पनि परम सत्यको निरूपण गरिएको छ। यस मूर्तामूर्तब्राह्मणको प्रयोजन यही नै हो। अस्तु। श्रीकृष्णार्पणमस्तु।

# विद्या

ज्ञानार्थक विद् धातुबाट क्यप् र टाप् प्रत्यय भएर विद्या शब्द बन्दछ। यसको सामान्य अर्थ ज्ञान, अवगम, शिक्षा, विज्ञान आदि हुन्छ। यसभित्र ४ वेद अर्थात् ऋक्, यजु, साम र अथर्ववेद, ६ वेदाङ्ग अर्थात् शिक्षा, कल्प, व्याकरण, निरुक्त, छन्द र ज्योतिष समेत पर्दछन्। ४ उपाङ्गहरू छन्। जसमा न्याय, मीमांसा, धर्मशास्त्र र पुराण समेत पर्दछन्। कसैकसैले ४ उपवेदहरूलाई पनि विद्यामा लिएको देखिनछ। यसरी विद्या भन्नाले १४ मुख्यरूपमा र ४ उपवेदहरूलाई गौणरूपमा लिनुपर्दछ। यो भयो विद्या शब्दबाट बुझिने सामान्य अर्थ। तर अद्वैतवेदान्तको दृष्टिकोणले विद्या भन्नाले पराविद्या र अपराविद्या गरेर दुईथरी विद्यालाई जनाउँछ। उपनिषद्मा पराविद्या भन्नाले ब्रह्मविद्या र अपराविद्या भन्नाले ब्रह्मविद्या बाहेकका अरू लौकिक घटपटादि विषयहरूलाई बुझाउने विद्यालाई लिइन्छ। केनोपनिषद्को खण्ड दुईको मन्त्र ३ मा **'विद्यया विन्दतेऽमृतम्'** अर्थात् विद्याबाट मोक्षप्राप्ति हुन्छ भनिएकोछ। यसैगरेर मनुले पनि **'तपसा कल्मषं हन्ति विद्ययाऽमृतमश्नुते'** अर्थात् तपले पापको नाश हुन्छ र ज्ञानले अर्थात् विद्याले अमरत्व प्राप्त हुन्छ भन्नुभएको छ।

विद्या पनि मायाकै सिर्जना हो। विद्या सत्वगुणी माया हो भने अविद्या रजोगुणी र तमोगुणी माया हो।

विद्या दुई प्रकारका हुन्छन् भन्नेकुरा मुण्डकोपनिषद्मा उल्लेख भएको पाइन्छ– **'द्वे विद्ये वेदितव्ये इति ह स्म यद्ब्रह्मविदो**

**वदन्ति परा चैवापरा च ।'** *(मु.उ.१।४)* अर्थात् जान्नुपर्ने परा र अपरा दुई विद्याहरू भएको कुरा ब्रह्मवेत्ताहरूले भनेका छन् ।

यिनमा पराविद्या भनेको परमात्मविद्या हो र अपराविद्या भनेको धर्म, अधर्मको साधन र तीबाट उत्पन्न हुने फलसँग सम्बद्ध विद्या हो । जस्तै – **'तत्रापरा, ऋग्वेदो यजुर्वेदः सामवेदोऽथर्ववेदः शिक्षाकल्पो व्याकरण निरुक्त छन्दो ज्योतिषमिति । अथ परा यया तदक्षरमधिगम्यते ।'** *(मु.उ.१।१५)* अर्थात् तिनमा ऋग्वेद, यजुर्वेद, सामवेद, अथर्ववेद, शिक्षा, कल्प, व्याकरण, निरुक्त, छन्द र ज्योतिष समेत अपरा विद्या हुन् । जसद्वारा त्यस अक्षर परमात्माको ज्ञान हुन्छ, त्यो परा विद्या हो ।

यहाँ अपराविद्या भनेर वेद र वेदाङ्गहरू समेतलाई लिइएको छ । यिनलाई साधनका रूपमा लिइन्छ भने पराविद्या ब्रह्मवाचक हो । उपनिषद्वेद्य अक्षरविषयक विज्ञान नै पराविद्या हो । उपनिषद् आदि शब्दसमूहको ज्ञान भएपछि पनि गुरूपसत्ति आदि प्रयत्नान्तरबाट वैराग्य भएपछिमात्रै अक्षरब्रह्मको ज्ञान हुन सक्तछ । ब्रह्मलाई ज्ञान गराउने साध्यसाधनरूप विद्या नै पराविद्या हो । उपनिषद्हरूले सर्वत्र ब्रह्मको ज्ञान गराउने काम गर्दछन् । यसैकारण यिनलाई पराविद्या भनिएको हो ।

विद्याका सम्बन्धमा **'विद्या ददाति विनयं विनयाद्याति पात्रताम् । पात्रत्वाद्धनमाप्नोति धनाद्धर्मस्ततः सुखम् ॥'** भनेर नीतिशास्त्रमा पनि उल्लेख भएको पाइन्छ । यस श्लोकमा विद्याबाट विनय, विनयबाट पात्रता, पात्रताबाट धन प्राप्ति र धनबाट सुख प्राप्त हुने कुरा उल्लेख भएको छ । विद्या प्राप्त भएपछि विनय आदि गुणहरूको आधान हुन्छ र अन्त्यमा सुख प्राप्त हुन्छ । प्रत्येक

व्यक्तिले विद्याबाट प्राप्त गर्न खोजेको त सुख र आनन्द नै हो। यहाँ बताइएको सुख वा आनन्द परमानन्द नभएर विषयानन्द हो। यहाँ विद्या भनेको ब्रह्मविद्या नभएर लौकिक वा मायिक विद्या हो। धनबाट सुख प्राप्त हुने भन्नुको अर्थ यही नै हुन्छ। धेरै ठाउँमा सामान्य शास्त्र जान्नु वा शिक्षा ग्रहण गर्नुलाई पनि विद्या भनेर उल्लेख गरेको पाइन्छ।

ईशावास्योपनिषद्ले विद्या र अविद्याको विशदरूपमा विवेचना गरेको पाइन्छ। जस्तै –

**अन्धन्तमः प्रविशन्ति येऽविद्यामुपासते।**
**ततो भूय एव ते तमो य उ विद्यायां रताः॥**

*– ई.उ. ९*

अर्थात् जुन मान्छेहरू अविद्या अर्थात् कर्मको उपासना गर्दछन्, ती मान्छेहरू अविद्यारूप घोर अन्धकारमा प्रवेश गर्दछन्। जुन मान्छेहरू विद्याको उपासना गर्दछन्, ती त अझै घोर अन्धकारमा प्रवेश गर्दछन्।

यसरी यहाँ विद्यालाई अझै घोर अन्धकार भनेर उल्लेख गरेको देखिन्छ। यसलाई आद्यजगद्गुरु श्रीशङ्कराचार्यले आफ्नू भाष्यमा यसरी स्पष्ट पार्नुभएकोछ– अविद्या भनेको विद्यादेखि भिन्न हो। जसले केवल अग्निहोत्रादिरूप अविद्याको अनुष्ठान गर्दछन्। ती अन्धकारमा जान्छन्। किनभने अविद्या अर्थात् कर्म विद्या अर्थात् आत्मज्ञानको विरोधी हो। त्यसैकारण पनि त्यसलाई अविद्या भनिएको हो। जुन मान्छे कर्म गर्न छोडेर खालि देवताज्ञानमा मात्रै लागेको हुन्छ, त्यो अझै अधिक अन्धकारमा जान्छ। यहाँ अविद्या भनेको सकाम कर्म र विद्या भनेको देवताज्ञान हो भनेर बुझ्नु पर्दछ।

जुन विद्या मुक्तिका लागि हुन्छ, त्यही नै विद्या हो। **'सा विद्या**

**या विमुक्तये'** भनेर श्रुतिले पनि भनेको छ। **'अनुभवावसाना हि ब्रह्मविद्या'** अर्थात् ब्रह्मविद्या भनेको अनुभवको चरम परिणति हो। **'अहं ब्रह्मास्मि'** बाट हुने अनुभवात्मक वा अनुभवजन्य ज्ञान वा अनुभूति नै ब्रह्मविद्या हो। यसैलाई श्रुतिमा **'यत्साक्षादरोक्षाद्ब्रह्म'** *(बृ.३।४।१)* भनिएको छ। यसैलाई अपरोक्षानुभूति पनि भनिन्छ।

विद्यातर्फ नलागेर अविद्यातर्फ लागेका मनुष्यहरूका सम्बन्धमा श्रुतिहरूले भनेकाछन्। जस्तै –

**अविद्यायामन्तरे वर्तमानाः स्वयं धीराः पण्डितंमन्यमानाः।**
**जङ्घन्यमानाः परियन्ति मूढा अन्धेनैव नीयमाना यथान्धाः॥**

*– मु.उ.१।२।८*

अर्थात् अविद्याका बीचमा रहने र आफैँलाई ठूलो बुद्धिमान् र पण्डित हुँ भनेर सम्झने मूढ पुरुषहरूले अन्धाका पछि लागेर हिँड्ने अन्धाले दुःख पाएझैँ गरेर दुःख पाउँछन्। त्यस्ता मान्छेहरू दुःख पाएर चारैतिर घुमिरहन्छन्।

यही मन्त्र नै कठोपनिषद्को १।२।५ मा पनि छ। त्यस मन्त्रको तेस्रो पाउको प्रथम शब्द **'जङ्घन्यमानः'** को ठाउँमा **'दन्द्रम्यमाणाः'** शब्द राखिएको छ। अरू शब्दहरू र अर्थमा समेत केही फरक पाइँदैन।

उक्त मन्त्रलाई व्याख्या गर्दै त्यस उपनिषद्ले अर्को मन्त्र पनि दिएको छ –

**अविद्यायां बहुधा वर्तमानाः वयं कृतार्थ इत्यभिमन्यन्ति बालाः।**
**यत्कर्मिणो न प्रवेदयन्ति रागा त्तेनातुराः क्षीणलोकाश्च्यवन्ते॥**

*– मु.उ. १।२।९*

अर्थात् धेरैजसो अविद्यामा नै स्थित रहने मूर्खहरू हामीहरू सुखी

छौँ भनेर अभिमान गर्दछन्। खासगरेर कर्मीहरूलाई कर्मफलका रागका कारण तत्त्वज्ञान हुँदैन। अतः कर्मफल भोगिसकेपछि तिनीहरू दुःखी भएर स्वर्गबाट पृथ्वीमा खस्तछन्।

यही कुरा गीतामा पनि भनिएको छ – **'ते तं भुक्त्वा स्वर्ग लोकं विशालं क्षीणे पुण्ये मर्त्यलोकं विशन्ति।'** *(गीता ९।२१)* अर्थात् विशाल स्वर्गलोकको भोग भोगिसकेपछि पुण्य समाप्त भएका ती कर्मीहरू मर्त्यलोकमा फर्कन्छन्।

महाभारतले पनि यस सम्बन्धमा उल्लेख गरेकोछ –

**कर्मणा बध्यते जन्तुर्विद्यया च विमुच्यते।**
**तस्मात्कर्म न कुर्वन्ति यतयः पारदर्शिनः॥**

*– महाभारत शान्तिपर्व*

अर्थात् जीव कर्म अर्थात् अविद्याले बाँधिन्छ र आत्मज्ञान अर्थात् विद्याबाट मुक्त हुन्छ। त्यसकारण पारदर्शी ब्रह्मज्ञानीहरू कर्म अर्थात् अविद्यातर्फ लाग्दैनन्।

अविद्याका अधीनमा रहेर काम र कर्मको दुश्चक्रमा रुमल्लिएको मान्छे कहिल्यै पनि मुक्त हुन सक्तैन। यही कुरा भागवतमा पनि उल्लेख भएको पाइन्छ। जस्तै –

**जनो वै लोक एतस्मिन्नविद्याकामकर्मभिः।**
**उच्चावचासु गतिषु न वेद स्वां गतिं भ्रमन्॥**

*– भागवत १०।२८।१३*

अर्थात् यस संसारमा जीवले आफ्नू असली स्वरूपलाई चिन्न नसकेमा ऊ अविद्या अर्थात् अज्ञानका वशमा पर्दछ। त्यसपछि उसले शरीरमा आत्मबुद्धि गरेर विभिन्न कामनाहरू राखेर नानाथरीका कर्महरू गर्दछ। त्यसबाट ऊ नाना थरीका देवतादेखि

लिएर पशुपक्षीसम्मका माथिल्ला र तल्लातहका योनिहरूमा घुमिरहन्छ । तर जति दुःख पाए पनि ऊ आफ्नू असली स्वरूप चिन्न समर्थ हुँदैन ।

विद्याले भने उक्त कुराको विपरीत ब्रह्मको अनुभूति गराउँछ –

**प्रतिबोधविदितं मतममृतत्वं हि विन्दते ।**
**आत्मना विन्दते वीर्यं विद्यया विन्दतेऽमृतम् ॥**

– *केनोपनिषद् २।२।४*

अर्थात् जुन प्रत्येक बोधमा प्रत्येगात्मरूपले जानिन्छ, त्यही ब्रह्म हो र त्यही नै ब्रह्मज्ञान हो । किनभने त्यसै ब्रह्मज्ञानले अमृतत्व प्राप्ति हुन्छ । अमृतत्व आफैँबाट प्राप्त हुन्छ, बाहिर खोजेर प्राप्त हुँदैन । विद्याले अज्ञानरूपी आवरणलाई अर्थात् अन्धकारलाई हटाएर प्रकाशस्वरूप अर्थात् अमृतमय ब्रह्मको ज्ञान गर्न सहयोग गर्दछ । जुन साधनले ब्रह्मज्ञान गराउँदछ त्यही विद्या हो । अस्तु । श्रीकृष्णार्पणमस्तु ।

# मुक्ति

**जन्तूनां नरजन्म दुर्लभमतः पुंस्त्वं ततो विप्रता**
**तस्माद्वैदिक धर्ममार्गपरता विद्वत्त्वमस्मात्परम् ।**
**आत्मानात्मविवेचनं स्वनुभवो ब्रह्मात्मना संस्थिति**
**मुक्तिर्नो शतकोतिजन्मसु कृतैः पुण्यैर्विना लभ्यते ॥**

– *विवेकचूडामणि २*

अर्थात् जीवलाई सर्वप्रथम त मनुष्यको शरीर नै पाउन मुश्किल छ । त्यसमा पनि पुरुषत्व र अझ त्यसमा पनि ब्राह्मणत्व पाउनु अझै दुर्लभ छ । ब्राह्मण भएर पनि वैदिक धर्मको अनुयायी र त्यसमा पनि अझ विद्वान् हुनु त झन् मुश्किल छ । यी सबै कुरा भएर पनि आत्मा र अनात्माको विवेक, आत्मज्ञान, ब्रह्मात्मभावको स्थिति र मुक्ति करोडौँ जन्ममा गरेका पुण्यकर्महरूको परिपाकविना प्राप्त हुन सक्तैनन् । यी पाउनु अत्यन्त असम्भव छ ।

**मुच्लृ मोक्षणे** धातुबाट **क्तिन्** प्रत्यय भएर **मुक्तिः** शब्द बन्दछ । मुक्ति भन्नाले मोक्ष, उद्धार, उन्मुक्ति, बन्धनबाट छुट्नु, निर्मुक्त हुनु आदि बुझिन्छ । मुक्ति भन्नाले जन्ममृत्युको दुश्चक्रबाट सधैँका लागि छुटकारा पाएर आनन्दस्वरूप ब्रह्म भएर अवस्थित हुनु नै हो । यसका अरू पर्यायवाची शब्दहरू यसै परम अवस्थामा पुगेर पर्यवसित हुन्छन् ।

मुक्तिका लागि ज्ञान पूर्वशर्त हो । ज्ञान नभईकन अज्ञान नाश हुन सक्तैन । अज्ञान नाश नहोउन्जेल संसारप्रतिको मोहमाया वा आसक्ति जाँदैन । जबसम्म संसारलाई सत्य मानेर मानिस संसारमा

नै रङ्मङिइरहन्छ, तबसम्म मान्छेको मुक्ति कुनै पनि हालतमा पनि हुन सक्तैन। यसै कुरालाई श्रीशङ्कराचार्यले यसरी व्यक्त गर्नुभएको छ– **'कुरुते गङ्गासागरगमनं व्रतपरिपालनमथवा दानम्। ज्ञानविहीनः सर्वमतेन मुक्तिं नभजति जन्मशतेन। भज गोविन्दं भज गोविन्दं गोविन्दं भज मूढमते॥** *(चर्पटमञ्जरिका स्तोत्रम्)* अर्थात् चाहे गङ्गासागर जाओस्, अथवा नानाथरीका व्रतहरू गरोस् वा दान गरोस्, जे सुकै गरे तापनि ज्ञानविना सयौँ जन्ममा पनि मुक्ति हुन सक्तैन। त्यसकारण हे मूढमते ! सधैँ गोविन्दको भजन गर। मुक्तिका लागि अरू कुनै पनि उपाय छैन।

मुक्ति भनेको कुनै पुरुषका पुरुषार्थबाट पाइने वस्तु होइन। चार पुरुषार्थहरूमध्ये धर्म, अर्थ र काम पुरुषका प्रयत्नसाध्य हुन् भने मुक्ति भने होइन। मुक्तिका लागि उपायका रूपमा श्रीमद्भगवद्गीतामा भगवान् श्रीकृष्णले अर्जुनलाई यही कुरा बताउनु भएको छ। जस्तै –

**यतेन्द्रियमनोबुद्धिर्मुनिर्मोक्षपरायणः ।**
**विगतेच्छाभयक्रोधो यः सदा मुक्त एव सः ॥**

*– गीता ५।२८*

अर्थात् मोक्षपरायण मुनिले आफ्ना इन्द्रियहरू, मन र बुद्धिसमेतलाई नियन्त्रणमा राख्न सक्तछ भने त्यो सधैँ नै मुक्त नै छ।

मुक्त हुनु भनेको सांसारिक बन्धनहरूबाट मुक्त हुनु हो। मलदोष, विक्षेपदोष र आवरणदोषसमेतलाई समाप्त गरेर निर्मुक्त हुनु हो। जीवात्मा र परमात्माका बीचमा रहेको लेशाविद्यालाई हटाएर सधैँकालागि एकाकार हुनु मोक्ष या मुक्ति हो। मुक्ति भनेको कुनै नयाँ प्राप्त गर्नु पर्ने वस्तु होइन, यो त सिद्धवस्तु नै हो। सिद्धवस्तुलाई प्राप्त गर्न पुरुषार्थ गरिरहनु पर्दैन। यो त सधैँ प्राप्तवस्तु नै हो।

जन्मजन्मान्तरदेखि जीव र ब्रह्मका बीचमा रहेका अविद्या, काम र कर्मरूपी पर्दालाई हटाएर ब्रह्मसँग एक हुनु नै मुक्ति हो। मन विषयमा गएर लाग्योभने जीवबद्ध हुन्छ र मन निर्विषय भयोभने मुक्त हुन्छ। **'मुक्तिर्निविषयं मनः।'** अर्थात् विषयरहित मन हुनु नै मुक्ति हो।

**'मुक्तिस्तु ब्रह्मतत्त्वस्य ज्ञानादेव न चान्यथा।'** अर्थात् ब्रह्मज्ञानबाटमात्रै मुक्ति हुन्छ भनेर विद्यारण्य स्वामीले पञ्चदशीमा लेख्नु भएको छ। श्रुतिले ज्ञान नभईकन मुक्ति हुँदैन भनेर स्पष्टैसँग भनेको छ– **'ऋते ज्ञानान्नमुक्तिः।'**

भगवान्का अनन्य भक्तहरूले मुक्ति नै पाए पनि त्यसको इच्छा गर्दैनन्। उनीहरू भगवान्कै सेवा गरेर बस्न चाहन्छन्। सोही कुरा भागवतमा उल्लेख भएको छ। जस्तै –

**सालोक्यसार्ष्टिसामीप्यसारूप्यैकत्वमप्युत।**
**दीयमानं न गृह्णन्ति विना मत्सेवनं जनाः॥**

*– भागवत ३।२९।१३*

अर्थात् मेरा भक्तहरू मेरो सेवा छोडेर सालोक्य, सार्ष्टि, सामीप्य, सारूप्य र सायुज्य मुक्ति दिए पनि लिँदैनन्।

अद्वैतवेदान्त अनुसार सद्योमुक्ति र क्रममुक्ति गरेर दुईथरी मुक्तिहरू छन्। यसै जीवनमा ब्रह्मज्ञान गरेर क्रमैसँग मुक्त हुनेक्रममा जानु चाहिँ क्रममुक्ति हो। सद्योमुक्ति चाहिँ यहीँ नै मुक्त हुनु हो। सद्योमुक्ति हुनेका प्राणहरू उत्क्रमण नगरेर यही नै मिल्दछन्। **'न तस्य प्राणा उत्क्रामन्ति अत्रैव समवलीयन्ते।'** भनेर श्रुतिले पनि भनेको छ। विदेहमुक्ति, कैवल्यमुक्ति आदि मुक्तिहरू पनि यिनै दुई क्रममुक्ति र सद्योमुक्ति भित्र नै अन्तर्भाव हुन्छन्। अस्तु। श्रीकृष्णार्पणमस्तु।

# भक्तपरायण भगवान्

**निरपेक्षं मुनिं शान्तं निर्वैरं समदर्शनम् ।**
**अनुव्रजाम्यहं नित्यं पूयेयेत्यङ्‌घ्रिरेणुभिः ॥**

– *भागवत ११।१४।१६*

अर्थात् कसैको अपेक्षा नभएका वा मायिक संसारबाट माथि उठेका मननशील, शान्त, रागद्वेषरहित, सबैमाथि समान दृष्टि राख्ने महात्माका पाउबाट धूलो उडेको शरीरमा पारेर पवित्र हुनकालागि म सधैँ उनका पछिपछि लागेर हिँड्‌दछु ।

उपर्युक्त कुरा भगवान् श्रीकृष्णले परम ज्ञानी उद्धवलाई उपदेश गर्ने क्रममा बताउनुभएको थियो । भक्तहरू भगवान्का चरणको रज पाउने लालसाले सधैँ भगवान्का पछि लाग्दछन् भने यहाँ त भगवान् नै भक्तका चरणरजको कामनाले पछि लाग्ने कुरा गरेर भगवान्ले भक्तको ठूलो सम्मान गर्नुभएको छ । यो सारै आश्चर्य लाग्दो कुरा हो । भगवान्को यो भनाइ सुन्दा हामीहरूजस्ता सामान्य व्यक्तिलाई आश्चर्य लाग्न सक्तछ । यो कुरा महात्मा भक्तहरूको महत्त्वख्यापन गर्नकालागि भगवान्ले भन्नु भएको हो । शास्त्रीय भाषामा यसलाई अर्थवाद भनिन्छ ।

भागवत, महाभारत र अरू पुराणहरूमा पनि भक्त तथा ज्ञानी महापुरुषहरूको मुक्त कण्ठले प्रशंसा गरेको पाइन्छ । कहीँ भगवान्ले आफ्नै मुखबाट नै आफैँले प्रशंसा गर्नुभएको छ भने कहीँ ऋषि, मुनि, महात्माहरू र शास्त्रहरूबाट प्रशंसा गराउनु भएको छ । महात्मा, भक्त, ज्ञानीहरूलाई प्रोत्साहन दिएर यस असार संसारबाट

सधैँकालागि मुक्त गराउनकालागि नै कृपासागर करुणावरुणालय श्रीभगवान्ले उक्त कुरा भन्नुभएको हो भन्ने बुझ्नु पर्दछ ।

भगवान्का परमभक्त राजा अम्बरीषलाई दुःख दिन अघि सरेका दुर्वासालाई सुदर्शन चक्रले खेद्दै वैकुण्ठ पुऱ्याएपछि भगवान् विष्णुले ऋषि दुर्वासालाई सम्झाउने क्रममा अम्बरीषजस्ता आफ्ना परमभक्तको प्रशंसा गर्नुभएको थियो । भक्तमाथि भएका अपराधको क्षमा भक्तले नै गर्न सक्तछन्, मबाट त्यसको क्षमा हुनसक्तैन । क्षमा माग्न तपाईंले राजा अम्बरीषसमक्ष जानु पर्दछ, किन भने म भक्तका अधीनमा छु भनेर ऋषि दुर्वासालाई भगवान्ले भन्नुभएबाट आफ्ना भक्तहरूलाई भगवान् कतिसम्म माया गर्नुहुँदोरहेछ भन्ने कुरा स्पष्टै बुझ्नसकिन्छ । जस्तै –

**अहं भक्तपराधीनो ह्यस्वतन्त्र इव द्विज ।**
**साधुभिर्ग्रस्तहृदयो भक्तैर्भक्तजनप्रियः ॥**
**नाहमात्मानमाशासे मद्भक्तैः साधुभिर्विना ।**
**श्रियं चात्यन्तिकीं ब्रह्मन् येषां गतिरहं परा ॥**

– *भागवत ९।४।६३, ६४*

अर्थात् हे ब्रह्मन् ! म सम्पूर्णरूपमा भक्तका अधीनमा छु र म कत्ति पनि स्वतन्त्र छैन । मेरा भक्तहरूले मेरो हृदयलाई जितेका छन् । मेरा भक्तहरू मलाई प्रेम गर्दछन् र म पनि उनीहरूलाई प्रेम गर्दछु । मेरा भक्तहरूको परम आश्रय म नै हुँ । त्यसैकारण त्यस्ता साधु भक्तहरूलाई छोडेर म आफैँलाई र मेरी अर्धाङ्गिनी लक्ष्मीलाई पनि म चाहन्न ।

भगवान् कतिसम्म भक्तपरायण र भक्तका अधीन हुनुहुन्छ भन्ने कुरा माथि उल्लेख भएको स्वयं भगवान्को भनाइबाट पनि थाहा

हुन्छ । भक्तका सम्बन्धमा श्रीमद्भगवद्गीतामा पनि भगवान् श्रीकृष्णले धेरै ठाउँमा आफ्नू उद्गार व्यक्त गर्नुभएको छ । जस्तै –

**यो मां पश्यति सर्वत्र सर्वं च मयि पश्यति ।**
**तस्याहं न प्रणश्यामि स च मे न प्रणश्यति ॥**

*– गीता ६।३०*

अर्थात् जसले सबैतिर मलाई र ममा नै सबै देख्तछ । त्यसकालागि म सधैँ प्राप्य छु र मेरालागि पनि त्यस्तो भक्त सधैँ प्राप्य छ ।

भगवान्ले भक्तका सम्बन्धमा त्यतिमात्रै नभनेर ज्ञानीभक्तको वर्गीकरण गर्नुका साथै ज्ञानीभक्त ता मेरो आत्मा नै हो भनेर भन्नु भएको छ । जस्तै –

**चतुर्विधा भजन्ते मां जनाः सुकृतिनोऽर्जुन ।**
**आर्तो जिज्ञासुरर्थार्थी ज्ञानी च भरतर्षभ ॥**
**तेषां ज्ञानी नित्ययुक्त एकभक्तिर्विशिष्यते ।**
**प्रियो हि ज्ञानिनोऽत्यर्थमहं स च मम प्रियः ॥**
**उदाराः सर्व एवैते ज्ञानी त्वात्मैव मे मतम् ।**
**आस्थितः स हि युक्तात्मा मामेवानुत्तमां गतिम् ॥**

*– गीता ७।१६–१८*

अर्थात् हे भरतर्षभ अर्जुन ! राम्रो काम गर्ने ४ थरी भक्तहरू मेरो भजन गर्दछन् । ती ४ थरी भक्तहरूमा आर्त, अर्थार्थी, जिज्ञासु र ज्ञानी समेत पर्दछन् । तिनीहरूमा अनन्य भक्तिगर्ने ज्ञानीभक्तले नै मलाई प्रेम गर्दछ र म पनि ज्ञानीभक्तलाई प्रेम गर्दछु । अतः ज्ञानीभक्त नै मेरो अत्यन्त प्रिय छ । यी चारैथरी भक्तहरू अत्यन्त उदार छन्, तर पनि ज्ञानीभक्त चाहिँ मेरो अत्यन्त प्यारो छ ।

किनभने ज्ञानीभक्त त मेरो आत्मा नै हो। आत्मा अत्यन्त प्यारो हुन्छ। स्थिरबुद्धि भएको ज्ञानीभक्त अत्यन्त उत्तम भएको हुँदा ऊ ता मेरो स्वरूप नै हो।

जति सुकै ठूलो भक्त भए पनि यदि सर्वात्मभावले मायापति भगवान्का शरणमा ऊ जाँदैन भने त्यस्ताले मायाको जालोलाई काटेर पार पाउँन सक्तैन। यसै कुरालाई स्पष्ट पार्दै भगवान् श्रीकृष्ण गीतामा अर्जुनलाई आज्ञा हुन्छ –

**दैवी ह्येषा गुणमयी मम माया दुरत्यया।**
**मामेव ये प्रपद्यन्ते मायामेतां तरन्ति ते ॥**

*– गीता ७।१४*

अर्थात् मेरो यो त्रिगुणमयी माया अत्यन्त दुस्तर छ। तर जसले मेरो भक्ति गर्दछ र मेरा अनन्यशरणमा आउँछ, उसले दुस्तर तथा दुर्लङ्घ्य मायालाई पनि पार गरेर सधैँकालागि अप्राप्य मुक्ति पनि प्राप्त गर्न सक्तछ। भगवान् भक्तका हितका लागि र भक्तका मुक्तिकालागि नै थरीथरीका लीलाहरू गर्नुहुन्छ। भगवान्ले भन्नु पनि भएको छ – **मद्भक्तानां विनोदार्थं करोमि विविधाः क्रियाः।** अर्थात् मेरा भक्तको विनोद अर्थात् कल्याणका लागि नै म नानाथरीका मनोरञ्जनपूर्ण लीलाहरू गर्दछु। यही कुरा बादरायणले ब्रह्मसूत्रमा पनि उल्लेख गर्नुभएको छ – **'लोकवत्तु लीलाकैवल्यम्'** *(ब्र.सू. २।१।३३)* अर्थात् ईश्वरको सृष्टिरचना लगायतका कार्यहरू तत्त्वज्ञ महापुरुषहरूको लीला सरह केवल लीलामात्र हो।

भगवान्का सबै साना ठूला क्रियाकलापहरू लीला हुन्छन्। ती लीला भक्तका कल्याणकालागि नै हुन्छन्। भगवान्का लीलाहरू केवल लीलामा मात्र सीमित नभएर ती सार्थक पनि हुन्छन्। भगवान्का

लीलाहरू सामान्य व्यक्तिहरूले बुझ्न सक्तैनन् र त्यसलाई त्यस्ता अज्ञहरूले गलत अर्थ लगाएर व्याख्या गर्ने दुष्प्रयास पनि गर्दछन्। यसबाट उसको र उसका पछि लाग्ने समेतको दुर्गति हुन्छ।

भगवान् भक्तको अनन्यभक्तिलाई नै हेर्नु हुन्छ। भक्तको आचरण, उमेर, विद्या, जाति, पुरुषार्थ, रूप, धन आदि केही पनि हेर्नु हुन्न। भगवान् ता भक्तको निश्छल भक्तिलाई हेर्नु हुन्छ। भगवान् भक्तको गुणबाट होइन भक्तिबाट खुशी हुनुहुन्छ। भगवान् भक्तिप्रिय हुनुहुन्छ। जस्तै –

**व्याधस्याचरणं ध्रुवस्य च वयो विद्या गजेन्द्रस्य का**
**जातिर्वा विदुरस्य यादवपतेरुग्रस्य किं पौरुषम्।**
**कुब्जायाः किमु वामरूपमधिकं किं तत्सुदाम्नो धनं**
**भक्त्या तुष्यति केवलं न च गुणैर्भक्तिप्रियो माधवः॥**

भगवान्लाई खुशी पार्न भक्तले कुनै प्रकारको अमूल्य उपहार र पूजासामग्री समेत अर्पण गर्नु पर्दैन। भगवान् ता केवल पत्रपुष्पबाट खुशी हुनुहुन्छ। भगवान् भक्तको प्रेमपूर्ण भक्ति र स्वच्छ अन्तःकरण हेर्नुहुन्छ, उपहार होइन। गीतामा भगवान् श्रीकृष्णले यही कुरा अर्जुनलाई भन्नुभएको छ –

**पत्रं पुष्पं फलं तोयं यो मे भक्त्या प्रयच्छति।**
**तदहं भक्त्युपहृतमश्नामि प्रयतात्मनः॥**

*– गीता ९।२६*

अर्थात् हे अर्जुन ! जसले मलाई भक्तिपूर्वक पत्र, पुष्प, फल र जल अर्पण गर्दछ। त्यो म अत्यन्त प्रसन्नतापूर्वक ग्रहण गर्दछु।

भक्तिविना जस्तोसुकै अमूल्य वस्तु चढाए पनि भगवान् स्वीकार गर्नु हुन्न भन्ने उक्त कुराबाट थाहा हुन्छ। माथि उल्लेख भएका पत्र, पुष्प,

फल र जल कसले भक्तिपूर्वक तथा प्रेमपूर्वक भगवान्लाई अर्पण गरेका थिए ? त्यसरी भक्तिपूर्वक अर्पण गरेका वस्तुहरू भगवान्ले ग्रहण गर्नु भयो भन्ने कुराको के प्रमाण छ ? भन्ने सम्बन्धमा – **'विदुरस्य पत्रं गजेन्द्रस्य पुष्पं शवर्याः फलं रन्तिदेवस्य तोयम् ।'** अर्थात् अत्यन्त भक्तिपूर्वक विदुरले भगवान् श्रीकृष्णलाई पत्र अर्पण गरेका थिए । त्यसैगरेर गजेन्द्र हात्तीले भगवान् हरिलाई कमलको पुष्प अर्पण गरेको थियो । शवरीले भगवान् रामलाई बयरका फल अर्पण गरेकी थिइन् । राजा रन्तिदेवले भगवत्स्वरूप पुल्कसलाई भक्तिपूर्वक जल अर्पण गरेका थिए । भगवान्ले श्रद्धापूर्वक अर्पण गरिएका ती सबै सात्त्विक वस्तुहरूलाई अत्यन्त प्रेम र प्रसन्नतापूर्वक ग्रहण गर्नुभएको थियो ।

भगवान्ले भक्तकै उद्धार र कल्याणकालागि हीनयोनि मत्स्य, कच्छप, वराहदेखि लिएर विचित्रको नृसिंहको अवतार समेत लिनु भएको थियो । ती अवतारहरू कुनै अंशांश, कुनै अंश, कुनै आवेश, कुनै कला, कुनै पूर्ण र कुनै परिपूर्ण थिए । तीमध्येमा परिपूर्णतम अवतार भगवान् श्रीकृष्णको भएको कुरा पनि गर्ग संहितामा उल्लेख भएको छ । जस्तै –

**अंशांशोंऽशस्तथाऽऽवेशः कलापूर्ण प्रकथ्यते ।**
**व्यासाद्यैश्च स्मृतः षष्ठः परिपूर्णतमः स्वयम् ॥**
**अंशांशस्तु मरीच्यादिरंशा ब्रह्मादयस्तथा ।**
**कलाः कपिलकूर्माद्या आवेशा भार्गवादयः ॥**
**पूर्णो नृसिंहो रामश्च श्वेतदीपाधिपो हरिः ।**
**वैकुण्ठोऽपि तथा यज्ञो नरनारायणः स्मृतः ।**
**परिपूर्णतमः साक्षाच्छ्रीकृष्णो भगवान् स्वयम् ॥**

*– गर्गसंहिता गोलोक खण्ड १।१६–१९*

यिनै कुरालाई श्रीमद्भागवतमहापुराणमा पनि उल्लेख गरिएका छन् । जस्तै –

**ऋषयो मनवो देवा मनुपुत्रा महौजसः ।**
**कलाः सर्वे हरेरेव सप्रजापतयस्तथा ॥**
**एते चांशकलाः पुंसः कृष्णस्तु भगवान् स्वयम् ।**
**इन्द्रारिव्याकुलं लोकं मृडयन्ति युगे युगे ॥**

*– भागवत १।३।२७, २८*

भगवान् श्रीकृष्णले उद्धवलाई आफ्ना विभूतिहरूको वर्णन गरिसकेपछि अन्त्यमा ती सबै नै मनोविकारमात्र हुन् भनेर भागवतमा भन्नुभएको छ । जस्तै –

**एतास्ते कीर्तिताः सर्वाः सङ्क्षेपेण विभूतयः ।**
**मनोविकाराः एवैते यथा वाचाऽभिधीयते ॥**

*– भागवत ११।१६।४१*

भक्तहरूले भगवान्‌लाई तल्लीन भएर जुनसुकै रूपमा र जुनसुकै भावमा ध्यान, नामस्मरण र पूजा अर्चना गरे पनि भगवान् खुशी हुनुहुन्छ । भगवान्‌लाई शत्रुभावले, मित्रभावले र अरू पनि जुनसुकै भावले स्मरण गरे पनि भगवान् खुशी हुनुहुन्छ । उसको कल्याण हुन्छ । जसरी भएपनि सम्भनु चाहिँ पर्‍यो । यस कुराको उल्लेख भागवतमा भएको छ –

**कामं क्रोधं भयं स्नेहमैक्यं सौहृदमेव च ।**
**नित्यं हरौ विदधतो यान्ति तन्मयतां हि ते ॥**

*– भागवत ११।१६।४१*

**वैरेण यं नृपतयः शिशुपालपौण्ड्र –**
**शाल्वादयो गतिविलास विलोकनाद्यैः ।**

**ध्यायन्त आकृतधियः शयनासनादौ**
**तत्साम्यमापुरनुरक्तधियां पुनः किम् ॥**

– *भागवत १०।२९।१५*

अर्थात् शिशुपाल, पौण्ड्र, शाल्व आदि राजाहरूले वैरभावले भगवान्का चाल, ढाल, विलास, हेराइ, बोलाइ आदिको बारम्बार स्मरण गरेका थिए । तिनीहरूले भगवान्को ध्यान, स्मरण आदि गर्दा वैरभावले गरेको हुँदा यतिबेला, यसरी स्मरण गर्नु पर्दछ भनेर कुनै नियम बनाएका थिएनन् । उनीहरू सुत्ता, बस्ता, हिँड्दा र जुनसुकै बेला पनि भगवान्लाई डरले सम्झन्थे । त्यसैकारण उनीहरू सारूप्य मुक्तिका अधिकारी भएका थिए । शत्रुभावले स्मरण गर्दा त तिनीहरू त्यसरी मुक्त भए भने प्रेमपूर्वक भक्तले भगवान्को स्मरण गरेमा मुक्ति प्राप्त नहुने कुरै छैन ।

भगवान् भक्तलाई यति स्नेह गर्नु हुन्छ कि भक्तलाई छोडेर उहाँ अन्यत्र बस्न पनि मन पराउनु हुन्न । जस्तै –

**नाहं वसामि वैकुण्ठे योगीनां हृदये न च ।**
**यत्र गायन्ति मद्भक्ता तत्र तिष्ठामि नारद ॥**

अर्थात् हे नारद ! म वैकुण्ठमा पनि बस्तिन र योगीहरूका हृदयमा पनि बस्तिन । जहाँ मेरा भक्तहरू मेरो भजन गर्दछन्, त्यहीँ नै म गएर बस्तछु ।

भक्तपरायण भगवान् भक्तका पछि लागेर हिड्ने, भक्तको सेवा गर्ने, भक्तका लागि जे गर्न पनि पछि नपर्ने र भक्तको प्रतिज्ञा पूरा गर्न आफ्नू प्रतिज्ञा तोड्ने काम समेत गर्नुहुन्छ । अनन्यभक्तकालागि योग र क्षेमको पनि व्यवस्था भगवान् आफैँ गरिदिनुहुन्छ । यही कुरा भगवान्ले गीतामा भन्नुभएको छ –

**अनन्याश्चिन्तयन्तो मां ये जनाः पर्युपासते ।**
**तेषां नित्याभियुक्तानां योगक्षेमं वहाम्यहम् ॥**

*– गीता ९।२२*

भगवान्ले भक्त अर्जुनको रथको सारथि र सयस भएर पनि काम गर्नु भएको थियो । राजा युधिष्ठिरको राजसूययज्ञमा ब्राह्मणहरूका पाउ धुने र खाएका जूठा भाँडाहरू उठाउने काम पनि भगवान्ले गर्नुभएको थियो । भगवान् आफ्ना भक्तहरूकालागि सबै काम गर्नुहुन्छ । द्रौपदीलाई निर्वस्त्र हुनबाट जोगाउनुभयो, आर्त गजेन्द्रको रक्षा गर्नुभयो, भक्त ध्रुवलाई ध्रुवपद दिनुभयो, भक्तराज प्रह्लादको कल्याणकालागि अनौठो नृसिंहको रूप धारणा गर्नुभयो। यसप्रकारका असङ्ख्य उदाहरणहरूको उल्लेख गर्न सकिन्छ । भक्तपरायण भगवान् आफ्ना भक्तकालागि जस्तोसुकै काम गर्न अघि सर्ने मात्र होइन, भगवान् ता भक्तसँग क्षमायाचना गर्न पनि पछिपर्नुहुन्न । भक्तराज प्रह्लादले भगवान्कै भक्ति गरेको कारण उनका पिता हिरण्यकशिपुबाट असह्य कोपको भाजन हुनु परेको थियो। तर आफ्ना भक्तलाई दुःखबाट उद्धार गर्न चाँडै आउन नसकेकोमा प्रह्लादसँग भगवान् नृसिंहले क्षमायाचना गर्नुभएको थियो । त्यतिमात्रै नभएर प्रह्लादको वचन पूरा गर्न र आफ्नू सर्वव्यापकता देखाउन जड खम्बाबाट हुनैनसक्ने सिंहको शिर र मानिसको शरीर लिएर भगवान् उत्पन्न हुनुभएको थियो।

**सत्यं विधातुं निजभृत्यभाषितं**
**व्याप्तिं च भूतेष्वखिलेषु चात्मनः ।**
**अदृश्यतात्यद्भुतरूपमुद्वहन्**
**स्तम्भे सभायां न मृगं न मानुषम् ॥**

*– भागवत ७।८।१८*

अर्थात् आफ्नो भक्तको भनाइ सत्य गर्न र भगवान्को व्यापकता समस्त वस्तुमा भएको प्रमाणित गर्नकालागि पनि जडखम्बाबाट नृसिंहको रूप लिएर भगवान् प्रकट हुनुभएको थियो ।

गोपीहरूसँग भगवान् श्रीकृष्णले क्षमायाचना गर्नुभएको थियो । जस्तै –

**न पारयेऽहं निरवद्यसंयुजां स्वसाधुकृत्यं विबुधायुषाऽपि वः ।**
**या माभजन् दुर्जरगेहशृङ्खलां संवृश्च्य तद् वः प्रतियातु साधुना ।।**

*– भागवत १०।३२।२२*

अर्थात् हे गोपीहरू हो ! तिमीहरूले मेरा प्रेममा परेर ठूलाठूला योगीहरूले पनि छिनाउन नसक्ने घरबारको साङ्लो छिनाएर यहाँ आएका छौ । तिमीहरूले लगाएको यो ऋण म कहिल्यै पनि तिर्न सक्तिन । तिमीहरूले क्षमा गरिदियौ भनेमात्रै म यस ऋणबाट उऋण हुनेछु ।

यस्ता भक्तपरायण भगवान्लाई भक्तले कसरी विर्सन सक्तछन् ? आफ्ना भक्तका निमित्त जेसुकै गर्न पनि सधैँ तंतयार भइरहने हुँदा नै भक्तहरूले भगवान्का अगाडि भक्तपरायण विशेष जोडिदिएका हुन् । भगवान्को यो नाम अत्यन्त सार्थक छ । भगवान्को सच्चा भक्त भएर भगवान्लाई आफ्नै माझमा सधैँ राख्ने हामीहरू प्रयत्न गरौँ । यसैमा हाम्रो कल्याण छ । अस्तु । श्रीकृष्णार्पणमस्तु ।

# हंसगीता

हंसगीता हंसस्वरूप भगवान् नारायणले आफ्ना शिष्य सनत्कुमारहरूलाई अघि कुनै समयमा उपदेश गर्नुभएको थियो । सोही हंसगीता पछि आएर भागवतमा भगवान् श्रीकृष्णले आफ्ना शिष्य उद्धवलाई सुनाउनुभएको यो प्रसङ्ग हो ।

एकदिन तत्त्वजिज्ञासाका क्रममा गुणहरूलाई कसरी जित्न सकिन्छ ? भनेर उद्धवले भगवान् श्रीकृष्णलाई सोध्नु भएको थियो । उद्धवलाई जबाफ दिने सन्दर्भमा भगवान्ले भन्नुभएको थियो –

**सत्त्वं रजस्तम इति गुणा बुद्धेर्न चात्मनः ।**
**सत्त्वेनान्यतमौ हन्यात् सत्त्वं सत्त्वेन चैव हि ॥**

अर्थात् हे उद्धव ! सत्त्व, रज र तम गरेर यी तीन थरी गुणहरू बुद्धि अर्थात् प्रकृतिका हुन्, आत्माका होइनन् । सर्वप्रथम सत्त्वगुणद्वारा रजोगुण र तमोगुणलाई जित्नु पर्दछ । त्यसपछि सत्त्वगुणद्वारा नै सत्त्वगुणलाई जित्नु पर्दछ । जब सत्त्वगुणको अभिवृद्धि हुन्छ, तब मात्रै मेरो भक्ति बढ्दछ ।

सत्त्वगुणको वृद्धि हुने र मेरो भक्ति बढ्ने काममा मात्रै मुमुक्षु साधक निरन्तर लागिरहनुपर्दछ । जबसम्म आत्माको साक्षात्कार, स्थूलसूक्ष्म शरीर र तिनका कारणभूत तीनैथरी गुणहरूको निवृत्ति हुँदैन, तबसम्म मुमुक्षुले सत्त्वगुण बढाउने खालका साधनाहरूको उपयोग गरी नै रहनु पर्दछ । गुणले गुणलाई नै समाप्त गर्नु पर्दछ । त्यो भन्दा अरू उपाय पनि छैन ।

यति कुरा सुनिसकेपछि उद्धव भगवान् श्रीकृष्णसँग फेरि जिज्ञासा

राख्नुहुन्छ– हे भगवन् ! यति कुरा बुझेर पनि मानिसहरू किन कुकुर, गधा र बाख्रा सरह भएर यस संसारमा नै घुमिरहन्छन् ? यसको उत्तरमा भगवान् श्रीकृष्ण उद्धवलाई सम्झाउँदै भन्नुहुन्छ – हे उद्धव ! जबसम्म मान्छे अज्ञानको भुमरीमा परेर आफ्नू सही स्वरूपलाई बिर्सिएर सूक्ष्म र स्थूल शरीर आदिमा अहं बुद्धि गरिरहन्छ, तबसम्म सत्त्वप्रधान उसको मन रजोगुण र तमोगुणतर्फ नै लागिरहन्छ । त्यसरी मन ओरालो लागेपछि ऊ सङ्कल्पविकल्पात्मक संसारको जालोभित्र निस्कनै नसक्ने गरेर फस्तछ ।

त्यसरी एक पटक रजोगुणमा फसेपछि अविद्या, काम र कर्मको दुश्चक्र अर्थात् जन्मनु र मर्नुरूपी ओहोरो र दोहोरोमा परेर प्राणी संसारमा घुमी नै रहन्छ । उसले त्यस दुश्चक्रबाट मुक्ति पाउन अत्यन्त कठिन हुन्छ । रजोगुण र तमोगुणका कारण विषयहरू चित्तमा पस्तछन् र चित्त विषयहरूमा गएर पस्तछ । फुकाउनै नसकिने गरेर ती दुईथरीको गाँठो पर्दछ । हे उद्धव ! यही कुरो एकपटक ब्रह्माजीका मानसपुत्र सनकादिहरूले ब्रह्माजीलाई सोधेका थिए –

**गुणेष्वाविशते चेतो गुणाश्चेतसि च प्रभो ।**
**कथमन्योऽन्य संत्यागो मुमुक्षोरतितितीर्षोः ॥**

*– भागवत ११।१३,१७*

अर्थात् हे पिताजी ! गुण अर्थात् विषयहरू चित्तमा गएर पस्तछन् र चित्त पनि गएर विषयमा पस्तछ । यस्तो अवस्थामा मुमुक्षुले विषयहरूलाई चित्तबाट छुटाएर कसरी मुक्ति पाउन सक्तछ ?

त्यसप्रकारको प्रश्न आफ्ना पुत्र सनकादिहरूले सोधेपछि कर्मधीः अर्थात् रजोगुणात्मक सृष्टिमा लागेका ब्रह्माजीले त्यसको जबाफ

दिन नसकेर भगवान्लाई सम्झनुभएको थियो। भगवान् पनि हाँसको रूप लिएर त्यहाँ जानुभएको थियो। सनकादि मुनिहरूले त्यही प्रश्न भगवान्लाई पनि सोधेका थिए। सोही नै प्रसङ्ग यहाँ भगवान्ले उद्धवलाई बताउनुभएको थियो।

त्यसरी भगवान् हाँसको रूप लिएर गएपछि भगवान्लाई देख्ने बित्तिकै सनकादिहरूले पादाभिवनदनपूर्वक **'ब्रह्मणमग्रतः कृत्वा प्रपच्छुः को भवानिति'** अर्थात् तत्त्व जान्ने इच्छाले ब्रह्माजीलाई अगाडि लगाएर **को भवान्** ? अर्थात् **तपाईं को हो** ? भनेर भगवान्लाई सोधेका थिए। त्यो सोधाइ ठीक नभएको हुँदा भगवान्ले उनीहरूको सोधाइलाई सँच्याउने दृष्टिकोणले प्रतिप्रश्न गर्नुभएको थियो। जस्तै –

**वस्तुनो यद्यनानात्वमात्मनः प्रश्न ईदृशः।**
**कथं घटेत वो विप्रा वक्तुर्वा मे क आश्रयः॥**
**पञ्चात्मकेषु भूतेषु समानेषु च वस्तुतः।**
**को भवानिति वः प्रश्नो वाचारम्भो ह्यनर्थकः॥**
**मनसा वचसा दृष्टया गृह्यतेऽन्यैरपीन्द्रियः।**
**अहमेव न मत्तोऽन्यादिति बुध्यध्वमञ्जसाः॥**

– *भागवत ११।१३।२२–२४*

अर्थात् हे सनकादि हो ! तिमीहरूको यो प्रश्न आत्माका लागि हो कि ? भूतसङ्घका लागि हो ? यदि आत्मालाई गरेको भन्छौ भने आत्मामा त नानात्व छैन। तिमीहरूको, मेरो र सबैको आत्मा एउटै हो। कसरी आफैँले आफैँलाई प्रश्न गर्न सकिन्छ ? अथवा मैले तिमीहरूलाई जवाफ दिऊँ भने पनि कुन जाति, गुण, क्रिया र सम्बन्ध आदिको आश्रय लिएर दिऊँ ? यदि म देवता, मनुष्य आदिको

पञ्चभूतात्मक शरीरको आश्रय लिएर जबाफ दिऊँ भने पनि पञ्चभूतबाट बनेका शरीरहरू कारणात्मना अभिन्न छन्। केवल वाणीको व्यवहारले (वाचारम्भणं विकारो नामधेयं मृत्तिकेत्येव सत्यम्) मात्र नानात्व देखा परेको हो। अतः तिमीहरूले को भवान् ? भनेर सोधेको प्रश्न नै निरर्थक छ।

अर्को कुरा हे सनकादि हो ! मनले, वाणीले, आँखाले र अरू इन्द्रियहरूले पनि जे जे ग्रहण गर्दछन्, ती पनि सबै मै हुँ। म भन्दा पृथक् केही कुरा पनि छैन। यस कुरालाई तिमीहरूले राम्रोसँग बुझ्ने प्रयास गर। यही नै मेरो उत्तर हो। यसरी प्रश्नको खण्डन गरेको बहानाले सनत्कुमारहरूले गरेको **'को भवान् ?'** भन्ने प्रश्नको उत्तर दिनुभएको थियो। यसमा आत्मा र अनात्माको विवेचना पनि भगवान्ले गर्नुभएको छ।

भगवान्ले सनकादिलाई गरेको यस प्रतिप्रश्नका सम्बन्धमा श्रीधरस्वामीले गर्नुभएको टिप्पणी अत्यन्त मननीय छ – यस शरीरलाई छुट्याएर आत्मज्ञान हुने भएको भए शरीरमा रहेका रागादिको अभाव हुन्थ्यो र स्वतः नै विषय र चित्त आपसमा अलग हुन्थे भन्ने मनसाय राखेर भगवान्ले सनकादिहरूको प्रश्नको खण्डन गर्ने बहानाले आत्मा र अनात्माको विवेक यी श्लोकहरूबाट गर्नुभएको हो।

सनकादिले ब्रह्माजीलाई सोधेको तर ब्रह्माजीले पनि जबाफ दिन नसकेको प्रश्नको उत्तर भगवान् दिनुहुन्छ।

**गुणेष्वाविशते चेतो गुणाश्चेतसि च प्रजाः।**
**जीवस्य देह उभयं गुणाश्चेतो मदात्मनः॥**

*– भागवत ११।१३।२५*

अर्थात् हे छोराहरू हो ! यो चित्त विषयको बारम्बार चिन्तन गर्दागर्दै विषयाकार भइहाल्दछ । त्यसपछि विषयहरू पनि चित्तमा संस्काररूपले पसिहाल्दछन् । तिमीहरूले भनेको कुरा सत्य हो । त्यति हुँदाहुँदै पनि विषय र चित्त दुवैथरी मेरा नै स्वरूपभूत जीवका देह अर्थात् अध्यस्त उपाधि हुन् ।

यसरी विषय र चित्तको परेको दोहोरो गाँठोलाई कसरी फुकाउन सकिन्छ त भन्ने सम्बन्धमा भगवान् भन्नुहुन्छ –

**गुणेषु चाविशच्चित्तमभीक्ष्णं गुणसेवया ।**
**गुणाश्च चित्तप्रभवा मद्रूप उभयं त्यजेत् ॥**

*– भागवत ११।१३।२६*

अर्थात् लगातार विषयको चिन्तन वा सेवन गरिरहनाले चित्त विषयासक्त हुन्छ र विषयहरू पनि चित्तमा गहिरोरूपमा टाँसिन पुग्दछन् । यस अवस्थामा म परमात्माको साक्षात्कार गरेर मुमुक्षुले तिनलाई त्याग गर्नुपर्दछ ।

जाग्रत्, स्वप्न र सुषुप्ति यी तीनै अवस्थाहरू सत्त्व, रज र तमोगुण अनुसार हुन्छन् । यी बुद्धिका वृत्तिहरू हुन् । यी परमात्माका स्वभाव होइनन् । यी वृत्तिहरूको साक्षी भएको कारण जीव ती अवस्थाहरूभन्दा पृथक् छ । उसो भए म जागा भएँ भन्ने आदि कुराको प्रतीति कसरी हुन्छ ? भन्ने सम्बन्धमा भगवान् भन्नुहुन्छ । जस्तै –

**यर्हि संसृतिबन्धोऽयमात्मनो गुणवृत्तिदः ।**
**मयि तुर्ये स्थितो जह्यात् त्यागस्तद् गुणचेतसाम् ॥**

*– भागवत ११।१३।२८*

अर्थात् बुद्धिवृत्तिबाट हुने जुन यो त्रिगुणात्मक बन्धन छ,

यसैले आत्मालाई पनि बाँढ्छ । अतः तीनै अवस्थाभन्दा विलक्षण तर तीनै अवस्थामा अन्वय अर्थात् अनुगत भएर रहेको म तुरीयतत्त्वमा स्थित भएर यस त्रिगुणात्मिका बुद्धिको बन्धनलाई मुमुक्षुले त्याग गरिदिनुपर्दछ । त्यसो गर्न सकेमा मात्रै विषय र चित्त दुवैको एकैचोटि त्याग हुनसक्तछ ।

बुद्धिबाट हुने बन्धन कस्तो हो ? र त्यसलाई कसरी छोड्न सकिन्छ भन्ने सम्बन्धमा भगवान् भन्नुहुन्छ–

**अहङ्कारकृतं बन्धमात्मनोऽर्थविपर्ययम् ।**
**विद्वान् निर्विद्य संसारचिन्तां तुर्ये स्थितस्त्यजेत् ॥**

अर्थात् यो बन्धन भनेको अहङ्कारकृत हो । यसैबाट सिर्जित आवरणले आत्मालाई छोपेर राखेको छ । यस तथ्यलाई बुझेर मुमुक्षु विरक्त बनोस् । सबै स्थितिमा अनुगत म तुरीयतत्त्वमा अवस्थित भएर संसारको चिन्ता छोडिदेओस् ।

जहिलेसम्म पदार्थहरूमा मुमुक्षुको सत्यत्वबुद्धि रहन्छ, मम बुद्धि र अहं बुद्धि युक्ति आदि उपायहरूद्वारा हट्तैन तबसम्म त्यो पुरुष जागा रहे तापनि निदाएकै सरह हुन्छ । किनभने सपनादेख्ने मान्छेले सपनालाई सपनाको अवधि भरी विपना नै ठान्दछ । सपनाको बेला देखेको सपनालाई कसैले पनि सपना हो भन्ने ठान्दैन । यही नै ठूलो विडम्बना हो । आत्मादेखि अतिरिक्त प्रतीयमान शरीर आदि नामरूपात्मक मायिकप्रपञ्चको पारमार्थिकरूपले कुनै अस्तित्व नै छैन । यो केवल व्यवहारिक सत्य मात्र हो । यसबाट सिर्जित आश्रमहरू, आश्रमधर्म, त्यसबाट प्राप्त हुने फल, तिनका कारणभूत धर्माधर्म आदि सबै कुरा मिथ्या हुन् । यी सपनाजस्तै भ्रमबाट सिर्जित प्रपञ्चहरू मात्रै हुन् ।

सनकादि ऋषिहरूलाई भगवान् भन्नुहुन्छ – जुन संसार जाग्रत् अवस्थामा देखापर्दछ, त्यस क्षणिक मिथ्या विषययुक्त संसारलाई जसले अनुभव गर्दछ, सपनाका अवस्थामा तिनै विषयहरूलाई समेटेर वासनाका रूपमा जसले मनद्वारा अनुभव गर्दछ र सुषुप्ति अवस्थामा सबै विषय, इन्द्रिय र अन्तःकरणसमेतलाई लय गरेर त्यसको साक्षीका रूपमा जो बस्तछ, त्यो अत्मा हो । त्यसरी ती सबै अवस्थाहरूमा अनुगत भएर बस्ने आत्मा एउटै हो । यी तीनैथरी अवस्थाहरू मन या बुद्धिका हुन् । यी अवस्थाहरू मायाद्वारा मेरो नै आध्यासिक आत्मामा कल्पित भएका हुन् । यी सबै अवस्थाहरू मिथ्या हुन् । यो सबै कुरा विचार गरेर हे सनकादि हो ! अनुमान, सदुक्ति, गुरुको उपदेश र उपनिषद् महावाक्यहरूको श्रवण समेतबाट प्राप्त हुने ब्रह्मज्ञानरूपी तीक्ष्ण तरबारले आफ्ना सम्पूर्ण संशयहरूको आधारभूमि भएको अहङ्कारलाई काट र हृदयस्थ मेरो स्वरूपको भजन गर ।

यसै कुरालाई अझ सशक्तरूपमा बल पुऱ्याउँदै अगाडि भगवान् अनुमान कसरी गर्ने भन्ने सम्बन्धमा भन्नु हुन्छ –

**ईक्षेत विभ्रममिदं मनसो विलासं**
**दृष्टं विनष्टमतिलोलमलातचक्रम् ।**
**विज्ञानमेकमुरुधेव विभाति माया**
**स्वप्नस्त्रिधा गुणविसर्गकृतो विकल्पः ॥**

अर्थात् यो संसार मनको विलास अथवा मनको कल्पनामात्र हो । यो संसार बलेको अगुल्टो जस्तै चञ्चल भएको हुँदा ज्ञान हुने बित्तिकै यसको नाश हुन्छ । अनुमानको स्वरूप दिइएको छ – यहाँ पक्ष – इदं जगत् हो, साध्य – विभ्रम अर्थात् मिथ्या हो, हेतुहरू –

मनोविजृम्भत्वात्, दृष्टत्वात्, विनाशित्वात्, र अति चञ्चलत्वात् हुन् र उदाहरण – अलातचक्रवत् हो ।

यसरी यस संसारलाई मिथ्या प्रमाणित गरिएको छ । ज्ञाता र ज्ञेयको विभेदरहित एक अद्वितीय आत्मा नै आध्यासिकरूप लिएर अनेकरूपमा देखापर्दछ ।

स्थूलशरीर, स्थूलशरीरमा आश्रित इन्द्रियहरू र अन्तःकरणसमेत गरेर यी तीन प्रकारका विकल्पहरू सत्त्व, रज र तमोगुणका परिणामबाट सिर्जित वस्तुहरू हुन् । यी सबै कुराहरू अज्ञानबाट कल्पित सपनाजस्तै झूटा हुन् । त्यसकारण देहादिरूप दृश्य पदार्थहरूबाट विरत भएर, इन्द्रियका दुश्चक्रबाट माथि उठेर र इच्छारहित भएर आत्मानन्दको अनुभवमा तिमीहरू डुब । यस मायिक पदार्थ र आफ्नू शरीरलाईसमेत मदिरामत्त मान्छेले विर्से झैँ गरेर तिमीहरू सबै कुराहरूलाई बिर्स । प्रारब्धकर्मले जता लैजान्छ तिमीहरू उतै जाऊ । स्त्री, पुत्र, धनसम्पत्ति आदिलाई सपनाका वस्तुजस्ता मिथ्या ठान ।

यसरी सनत्कुमारहरूलाई अद्वैततत्त्वको उपदेश गर्ने क्रममा शुरुमा उनीहरूले भगवान्को परिचयका रूपमा सोधेको **'को भवान् ?'** भन्ने प्रश्नको पनि भगवान्ले उत्तर दिनुभएकोछ –

**मयैतदुक्तं वो विप्रा गुह्यं यत् साङ्ख्ययोगयोः ।**
**जानीत माऽऽगतं यज्ञं युष्मद् धर्मविवक्षया ॥**

*– भागवत ११।१३।३८*

अर्थात् हे ऋषिहरू हो ! मैले माथि जे जति कुराहरूको उपदेश गरेँ त्यो सबै साङ्ख्य र योगको अत्यन्त गोप्य कुरा हो । तिमीहरूले जिज्ञासा गरेअनुसार मेरो परिचय पनि सुन । म स्वयं भगवान् हुँ । तिमीहरूलाई तत्त्वज्ञानको उपदेश गर्नकालागि नै म यहाँ आएकोहुँ ।

यी सबैको आधार म नै हुँ। म सबै गुणभन्दा माथि छु। तर ती सबै गुणहरू ममा नै आश्रित छन्। म सबैको हितैषी, सुहृद्, प्रियतम, बन्धु र आधार समेत हुँ। यिनलाई गुण भन्नु उपयुक्त हुँदैन। किनभने यी सत्त्वादि गुणका परिणाम होइनन्। यी गुणहरूभन्दा माथि छन्। यी नित्य वस्तु हुन्।

हंसगीताको अन्त्यमा भगवान् श्रीकृष्ण आफ्ना प्रिय शिष्य उद्धवलाई आज्ञा हुन्छ –

**इति मे छिन्न सन्देहा मुनयः सनकादयः।**
**सभाजयित्वा परया भक्त्यागृणतः संस्तवैः॥**
**तैरहं पूजितः सम्यक् संस्तुतः परमर्षिभिः।**
**प्रत्येयाय स्वकं धाम पश्यतः परमेष्ठिनः॥**

*– भागवत ११।१३।४१, ४२*

हे उद्धव ! त्यसरी जिज्ञासु सनकादि ऋषिहरूको जिज्ञासा मैले शान्त गरिदिएकोथिएँ। उनीहरूले मेरो पूजा र स्तुतिसमेत गरेका थिए। त्यसपछि ब्रह्माजीले हेर्दा हेर्दै म आफ्नू वैकुण्ठधाममा फर्किएर गएकोथिएँ।

यसरी भगवान्ले सनकादि मुनिहरूलाई दिनु भएको गुह्यतम ज्ञानको उपदेश श्रीमद्भागवतमहापुराणको महत्त्वपूर्ण अंश हो। यस हंसगीतामा विशुद्ध अद्वैतवेदान्तको व्याख्या भएको छ। शुरुमा सनकादि ऋषिहरूले ब्रह्माजीलाई गर्नुभएको प्रश्न **'गुणेष्वाविशते चेतो गुणाश्चेतसि च प्रभो। कथमन्योऽन्य संत्यागो मुमुक्षोरतितितीर्षोः॥'** *(यस श्लोकको व्याख्या माथि भइसकेको छ)* सनकादिमुनिहरूका प्रश्नको उत्तर भगवान् ब्रह्माले दिन नसकेपछि भगवान् स्वयं आएर दिनु भएको थियो। यसैबाट थाहा हुन्छ कि मुनिहरूको प्रश्न कति दुरूह थियो।

केही ऊहापोहपछि कसरी गुण र चित्तलाई छुट्याएर मुक्ति पाउँन सकिन्छ भन्ने कुराको उपदेश भगवान्ले मुनिहरूलाई स्पष्टरूपमा गर्नुभएको थियो। **'यर्हि संसृतिबन्धोऽयमात्मनो गुणवृत्तिदः। मयि तुर्ये स्थितो जह्यात्त्यागस्तद्गुणचेतसाम्॥'** *(यसको अर्थ पनि माथि खुलिसकेको छ)*

यसरी विचारगर्दा वास्तवमा जीवलाई संसारमा अनवरत घुमाइरहने विषय र अन्तःकरणको अन्योन्याध्यास नै हो भनेर बुझिन्छ। जबसम्म चित्तले विषयको ग्रहण गर्न छोड्दैन तबसम्म जीवको जन्ममरणको झन्झट छुट्न सक्तैन। जाग्रत्, स्वप्न र सुषुप्तिभन्दामाथि उठेर र गुणको प्रवाहलाई त्याग गरेर जब मुमुक्षु तुरीयअवस्था अर्थात् ब्रह्मभावमा स्थित रहन्छ, तबमात्रै ऊ विषयातीत र गुणातीत हुनसक्तछ। त्यसपछि मात्रै ऊ विषयदेखि उपराम हुन्छ र मुक्तावस्थामा पुग्दछ। अस्तु। श्रीकृष्णार्पणमस्तु।

# रुद्रगीता

यो रुद्रगीत अथवा स्तोत्र नारायणपरायण करुणार्द्रहृदय भगवान् श्रीशिवले आफ्ना अगाडि हात जोडेर उभिएका राजा बर्हिषद् अर्थात् प्राचीनबर्हिका १० भाइ छोरा प्रचेताहरूलाई सुनाउनु भएको हो । यस स्तोत्रमा भक्ति र ज्ञानको अनुपम सङ्गम रहेको देखिन्छ । त्यसै स्तोत्रलाई यहाँ रुद्रगीताका रूपमा प्रस्तुत गरिएको छ । जस्तै –

**जितं तं आत्मविद्धुर्यस्वस्तये स्वस्तिरस्तु मे ।**
**भवता राधसा राद्धं सर्वस्मा आत्मने नमः ॥१॥**

अर्थ – हे नाथ ! तपाईंले सबैलाई जित्नु भएको छ । सबै तत्त्वज्ञानीहरूलाई तपाईंले नै कल्याण गर्नुभएको छ । मेरो पनि कल्याण गर्नु हओस् । तपाईं सर्वदा आफ्नै आनन्दमय स्वरूपमा रहनु हुन्छ । तपाईं सम्पूर्ण सिद्धिका मूलस्रोत हुनुहुन्छ । आत्मस्वरूप हुनुहुन्छ । म तपाईंलाई नमस्कार गर्दछु । भगवान् नै ब्रह्म हुनुहुन्छ । उपनिषद्मा भगवान्लाई ब्रह्म र ब्रह्मलाई आनन्द स्वरूप भनिएको छ । जस्तै – **'आनन्दो ब्रह्मेति व्यजानात् ।'** *(तै.उ.३।६।१)*

**नमः पङ्कजनाभाय भूतसूक्ष्मेन्द्रियात्मने ।**
**वासुदेवाय शान्ताय कूटस्थाय स्वरोचिषे ॥२॥**

अर्थ – हे भगवन् ! तपाईं पद्मनाभ अर्थात् जगत्को आदिकारण हुनुहुन्छ । तपाईं नै भूतसूक्ष्म अर्थात् तन्मात्रास्वरूप हुनुहुन्छ । तपाईं नै सम्पूर्ण इन्द्रियहरूका स्वामी अर्थात् हृषीकेश हुनुहुन्छ । **'हृषीकं विषयेन्द्रियम्'** भनेर अमरकोषमा उल्लेख भएको छ ।

तपाईं नै शान्तस्वरूप, एकरस र स्वयंप्रकाश वासुदेव अर्थात् चित्तका अधिष्ठाता पनि हुनुहुन्छ। यस्ता तपाईंलाई म नमस्कार गर्दछु। यहाँ अन्तःकरणका चतुर्व्यूह मध्येका चित्तका अधिष्ठाता वासुदेवको उल्लेख भएको छ। वसु भनेर शुद्ध अन्तःकरणलाई भनिन्छ।

**सङ्कर्षणाय सूक्ष्माय दुरन्तायान्तकाय च।**
**नमो विश्वप्रबोधाय प्रद्युम्नायान्तरात्मने ॥३॥**

अर्थ – हे भगवन् ! तपाईं सूक्ष्म अर्थात् अव्यक्त हुनुहुन्छ। तपाईं नै दुरन्त अर्थात् अनन्त हुनुहुन्छ। तपाईं नै अन्तक अर्थात् मुखको आगोद्वारा सम्पूर्ण लोकको संहारक पनि हुनु हुन्छ। तपाईं नै अहङ्कारको अधिष्ठाता हुनुहुन्छ। यस्ता सङ्कर्षण स्वरूप तपाईंलाई नमस्कार गर्दछु।

हे भगवन् ! तपाईं नै विश्वका प्रकृष्टज्ञानका उद्गमस्थल हुनुहुन्छ। त्यसैकारण तपाईं अन्तरात्मा अर्थात् बुद्धिका अधिष्ठाता प्रद्युम्न हुनुहुन्छ। यस्ता तपाईंलाई मेरो नमस्कार छ।

**नमो नमोऽनिरुद्धाय हृषीकेशेन्द्रियात्मने।**
**नमः परम हंसाय पूर्णाय निभृतात्मने ॥४॥**

अर्थ – हे प्रभो ! तपाईं नै चक्षुरादि इन्द्रियहरूका स्वामी मनस्तत्त्वका अधिष्ठाता भगवान् अनिरुद्ध हुनुहुन्छ। तपाईं नै आफ्ना प्रखर तेजले जगत्लाई प्रकाशित गर्ने क्षय र वृद्धिरहित भगवान् श्रीसूर्य हुनुहुन्छ। यस्ता परिपूर्णतम परमहंसरूप तपाईंलाई म नमस्कार गर्दछु।

यसरी यहाँ अन्तःकरणावच्छिन्न भगवान्का चतुर्व्यूहको स्तुति गरिएको छ। चतुर्व्यूहका बारेमा भागवतमा नै यसरी वर्णन गरिएको

छ– **'वासुदेवः सङ्कर्षणः प्रद्युम्नः पुरुषः स्वयम् । अनिरुद्ध इति ब्रह्मन् मूर्तिव्यूहोऽभिधीयते ॥'** *(भागवत १२।११।२१)*

**स्वर्गापवर्गद्वाराय नित्यं शुचिपदे नमः ।**
**नमो हिरण्यवीर्याय चातुर्होत्राय तन्तवे ॥५॥**

अर्थ – हे भगवन् ! तपाईं स्वर्ग र अपवर्गको द्वार हुनुहुन्छ । अर्थात् कर्मको फल स्वर्ग र ज्ञानको कल मोक्ष प्राप्तिको कारण पनि तपाईं नै हुनुहुन्छ । नित्यनिरन्तर शुचिषत् अर्थात् पवित्र हृदयमा निवास गर्ने तपाईं नै हुनुहुन्छ । **'हंस शुचिषत्'** *(यजुः १२।१४)* भनेर वेदले पनि भनेको छ । चातुर्होत्र कर्मको साधन र त्यसलाई विस्तार गर्ने हिरण्यवीर्य अर्थात् सुन जस्तो शक्ति र तेज भएका अग्निदेव पनि तपाईं नै हुनुहुन्छ । यस्ता तपाईंलाई म नमस्कार गर्दछु ।

**स्निग्धप्रावृड्घनश्यामं सर्वसौन्दर्यसङ्ग्रहम् ।**
**चार्वायतचतुर्बाहुं सुजातरुचिराननम् ॥६॥**

अर्थ – हे भगवन् ! तपाईंको वर्षासमयको मेघ जस्तो समग्र सौन्दर्यको समष्टि सारभूत सुन्दर श्यामलरूप छ । तपाईंका राम्रा आजानु बाहु छन् । तपाईंको अत्यन्त मनोहारी कमलजस्तो मुख छ ।

भगवान्का सम्पूर्ण शरीरका अङ्गप्रत्यङ्गहरू कमल समान कोमल र सुन्दर भएको वर्णन पाइन्छ । जस्तै – **'नमः पङ्कजनाभाय नमः पङ्कजमालिने । नमः पङ्कजनेत्राय नमस्ते पङ्कजाङ्घ्रये ॥'** *(भागवत १।८।२२)*

**पद्मकोशपलाशाक्षं सुन्दरभ्रु सुनासिकम् ।**
**सुद्विजं सुकपोलास्यं समकर्णविभूषणम् ॥७॥**

अर्थ – हे भगवन् ! तपाईंका कमलदलजस्ता सुन्दरतम आँखाहरू छन् । अत्यन्त सुन्दर आँखीभुइँहरूछन् । अति आकर्षक नाँक छ ।

अत्यन्त आकर्षक दाँतहरू छन् । मनमोहक गाला भएको कमल समान मुख छ । असाध्य नै मनोहर अलङ्कारयुक्त दुई कान छन् ।

**पदा शरत्पद्मपलाशरोचिषा नखद्युभिर्नोऽन्तरघं विधुन्वता ।**
**प्रदर्शय स्वीयमपास्तसाध्वसं पदं गुरो मार्गगुरुस्तमोजुषाम् ॥८॥**

अर्थ – हे परमात्मन् ! तपाईंका चरणरूपी कमलका कान्तिले शरद्ऋतुमा फुल्ने सुन्दर कमलको शोभालाई जितेको छ । नङबाट बाहिर निस्किएका ज्योतिले जीवात्माका हृदयको अन्धकारलाई तुरुन्तै समाप्त गरिदिन्छ । हे भगवन् ! हामी भक्तहरू माथि दया गरेर हाम्रा सम्पूर्ण भयहरूलाई नाश गर्ने तपाईंको त्यो सुन्दररूपको दर्शन दिनुहोस् । हामी अविद्यारूपी घोरअन्धकारले ढाकिएका अज्ञानी प्राणीहरूको अज्ञानलाई हटाएर ब्रह्मज्ञानको बाटो देखाउने तपाईं नै हाम्रा गुरु हुनुहुन्छ ।

भगवान्लाई जगद्गुरु पनि भनिएको छ । **'कृष्णं वन्दे जगद्गुरुम् ।' 'आचार्यं मां विजानीयान्नावमन्येत कर्हिचित् । न मर्त्यबुद्धयाऽसूयेत सर्वदेवमयो गुरुः ॥'** *(भागवत ११।१७।२७)*

**क्षणार्धेनापि तुलये न स्वर्गं नापुनर्भवम् ।**
**भगवत्सङ्गिसङ्गस्य मर्त्यानां किमुताशिषः ॥९॥**

अर्थ – हे भगवन् ! कुनै मुमुक्षुले तपाईंका भक्तसँग आधा क्षण पनि सङ्गत गर्ने अवसर पायो भने ऊ आफूलाई कृतकृत्य सम्झन्छ । उसले स्वर्ग पनि चाहँदैन र त्यसभन्दा पनि माथिको मोक्षको पनि कामना गर्दैन । यसरी जब ऊ स्वर्ग र मोक्षलाई समेत केही गन्दैन भने मर्त्यलोकको निकृष्ट भोगलाई के गन्ला ?

**यत्रेदं व्यज्यते विश्वं विश्वस्मिन्नवभाति यत् ।**
**तत् त्वं ब्रह्म परं ज्योतिराकाशमिव विस्तृतम् ॥१०॥**

अर्थ – हे परब्रह्मन् ! तपाईंमा नै विवर्तरूपमा यो सम्पूर्ण संसार देखापरेको छ। तपाईं नै यस सम्पूर्ण सृष्टिको कणकणमा व्याप्त हुनुहुन्छ। संसारको सृष्टि गरेर तपाईं नै यस भित्र प्रवेश गर्नुभएको छ। यही कुरा श्रुतिले पनि भनेको छ– **'तत्सृष्ट्वा तदेवानुप्राविशत्।'** *(तै.उ. २।६।१)* हे भगवन् ! तपाई नै परमज्योति, स्वयंज्योतिःस्वरूप परमब्रह्म हुनुहुन्छ। **'ब्रह्मज्योतिः सनातनः'** भनेर वेदले पनि भनेको छ। तपाईं आकाश जस्तै सूक्ष्म र सर्वव्यापक पनि हुनुहुन्छ।

**यो माययेदं पुरुरूपयाऽसृजद् बिभर्ति भूयः क्षपयत्यविक्रियः।**
**यद्भेदबुद्धिः सदिवात्मदुःस्थया तमाततन्त्रं भगवन् प्रतीमहि ॥११॥**

अर्थ – हे भगवन् ! तपाईंकी बहुरूपिणी माया यो साँच्चैको संसार हो कि जस्तो गरेर सृष्टि गर्दछे। श्रुतिले भनेको पनि छ– **'इन्द्रो मायाभिः पुरुरूप ईयते।'** *(बृ.उ. २।५।१९)* अर्थात् परमात्मा मायाद्वारा अनेकरूप लिएर चेष्टा गर्दछ। **'मायी सृजते विश्वमेतत्।'** *(श्वेता उ. ४।९)* अर्थात् मायायुक्त अथवा मायावी परमात्मा यस सम्पूर्ण प्रपञ्चको रचना गर्दछ। तर यसप्रकारको क्रियाकलापबाट तपाईंमा कुनै प्रकारको विकृति आउँदैन। किनभने यो सबै तपाईंको अधिष्ठानसत्तामा भएको विवर्त मात्र हो। अर्थात् भ्रम मात्र हो। मायाका कारण अरूमा भेदबुद्धि सृजना हुन्छ। तर तपाईंलाई त्यस मायाले स्पर्शसम्म पनि गर्न सक्तिन। जस्तै – **'शश्वत्प्रशान्तमभयं प्रतिबोधमात्रं शुद्धं समं सदसतः परमात्मतत्त्वम्। शब्दो न यत्र पुरुकारकवान् क्रियार्थो माया परैत्यभिमुखे च विलज्जमाना ॥'** *(भागवत २।७।४७)* अर्थात् परमात्माको वास्तविक स्वरूप एकरस, शान्त, अभय र ज्ञानस्वरूपमात्रै हो। परमात्मामा न ता मायाको कश्मल छ, न ता उसबाट सिर्जित

विषमताहरू नै छन्। त्यो परमात्मा सत् र असत् दुवैभन्दा पर छ। कुनै पनि लौकिक र वैदिकशब्दहरूले त्यस परमात्मालाई विषय गर्न सक्तैनन्। धेरैप्रकारका साधनहरूबाट सम्पन्न हुने कर्मका फलहरू पनि परमात्मासम्म पुग्न सक्तैनन्। अरूको त के कुरा, स्वयं माया पनि परमात्मा अर्थात् ब्रह्मका सामु जान सक्तिन र ऊ लाज मानेर टाढै भाग्दछे।

**प्रमत्तमुच्चैरितिकृत्यचिन्तया प्रवृद्धलोभं विषयेषु लालसम्।**
**त्वमप्रमत्तः सहसाऽभिपद्यसे क्षुल्लेलिहानोऽहिरिवाखुमन्तकः ॥१२॥**

अर्थ – हे प्रभो ! व्यवहारमा फसेका मान्छेहरू यो काम गर्नुछ र ऊ काम गर्नुछ भनेर सधैँ घुमिरहेका हुन्छन्। यसरी इतिकृत्यमा लागेका मान्छेहरू अत्यन्त प्रमादी भएर आफ्नू जीवन बिताउँछन्। मनमा अति लालसा र कामनाहरू राखेर विषयासक्त भएका मानिसहरू तपाईंलाई चटक्कै बिर्सन्छन्। तर तपाईं भने सबैलाई हेरेर बसिरहनुहुन्छ। सर्पले मूसालाई खाए झैँ गरेर एक दिन थाहै नदिईकन त्यस्ता प्रमादी मान्छेहरूलाई कालरूप हजूर यस संसारबाट उठाएर लैजानुहुन्छ। **'कालोऽस्मि लोकक्षयकृत्प्रवृद्धो लोकान् समाहर्तुमिह प्रवृत्तः।'** *(गीता ११।३२)* भनेर गीतामा भनिएको पनिछ।

रुद्रगीतको फलश्रुति देखाउँदै भनिएको छ –

**इदं यः कल्य उत्थाय प्राञ्जलिः श्रद्धयान्वितः।**
**शृणुयाच्छ्रावयन्मर्त्यो मुच्यते कर्मबन्धनैः॥**

अर्थ – जुन मानिसले बिहान सबेरै उठेर श्रद्धायुक्त भईकन दुवैहात जोडेर यो स्तोत्र अर्थात् रुद्रगीता आफू सुन्दछ र अरूलाई पनि सुनाउँदछ भने त्यो मानिस सम्पूर्ण कर्मबन्धनहरूबाट मुक्त हुन्छ।

अन्त्यमा श्रीनारायण भन्नुहुन्छ –

**ये तु मां रुद्रगीतेन सायं प्रातः समाहिताः ।**
**स्तुवन्त्यहं कामवरान्दास्ये प्रज्ञां च शोभनाम् ॥**

अर्थ – जसले यस रुद्रगीतद्वारा एकाग्र चित्त भएर बिहानबेलुका मेरो स्तुति गर्दछ। त्यसलाई म अभीष्ट वर र प्रज्ञा अर्थात् उत्कृष्ट बुद्धिसमेत प्रदान गर्दछु ।

*(श्रीमद्भागवतमहापुराणको चतुर्थस्कन्धको २४ औँ अध्यायमा आधारित)*

# सिद्धगीता

योगवासिष्ठमहारामायण ३२ हजार श्लोक भएको एक अजातवादपरक अद्वैतवेदान्तको महाकाव्य हो। वैराग्यप्रकरण, मुमुक्षुव्यवहारप्रकरण, उत्पत्तिप्रकरण, स्थितिप्रकरण, उपशमप्रकरण, निर्वाणप्रकरण पूर्वार्ध र निर्वाणप्रकरण उत्तरार्ध समेत गरेर ७ प्रकरण र धेरै सर्गहरूमा यो महाग्रन्थ विभाजित भएको छ। रामलाई निमित्त बनाएर ब्रह्मर्षि कुलगुरु वसिष्ठले औपनिषदअद्वैतज्ञानको उपदेश सम्पूर्ण मुमुक्षुहरूकालागि गर्नुभएको हो। यसै उपदेशसमेतलाई समावेश गरेर महाकवि वाल्मीकिले योगवासिष्ठ नामक महाकाव्यको रचना गर्नुभएको हो। यो ग्रन्थ माण्डूक्योपनिषद्को व्याख्या हो पनि भनिन्छ। त्यसै उपनिषद्मा आधारित भएर यस ग्रन्थको रचना भएको हुँदा यसलाई अजातवादसिद्धान्तको उत्कृष्ट रचना हो भन्न सकिन्छ। योगवासिष्ठमहाकाव्य अत्यन्त विशालकाय ग्रन्थ भएको र यो बुझ्न पनि अत्यन्त दुरूह भएको हुँदा गौडपादाचार्यले माण्डूक्योपनिषद्को कारिका लेखेर योगवासिष्ठको अजातवादको सिद्धान्तलाई सङ्क्षिप्तरूपमा सबैले बुझ्नेगरी प्रस्तुत गर्नुभएको हो भन्ने पनि एकथरी विद्वान्हरूको भनाइ पाइन्छ।

योगवासिष्ठमा धेरैथरी प्राचीन कथा, कहानी र इतिहासको आवरणमा भर्सक सरल बनाएर जिज्ञासुलाई ब्रह्मज्ञान गराउने प्रयास आदिकवि एवं महाकवि वाल्मीकिले गर्नुभएको देखिन्छ। यसमा विभिन्न उपाख्यानहरू दिएर अद्वैतवेदान्त र अजातवादको व्याख्या गरेको पाइन्छ। जसमा मुख्यरूपले ब्रह्मर्षि वसिष्ठ र

रामका बीचमा र वाल्मीकि ऋषि र भारद्वाजका बीचमा भएको संवाद पाइन्छ। त्यसपछि जनकशुकदेव उपाख्यान, कचोपाख्यान, चूडाला उपाख्यान, वैवस्वत मनु र इक्ष्वाकु उपाख्यान, बलि उपाख्यान, भुशुण्डोपाख्यान, विद्याधरोपाख्यान, मङ्क्युपाख्यान, पाषाणोपाख्यान, अविद्योपाख्यान, ब्रह्माण्डोपाख्यान, लोमशोपाख्यान, सिद्धगीता, प्रह्लाद उपाख्यान आदि पर्दछन्। यीमध्ये अद्वैतज्ञानपरक उपाख्यानहरू अत्यन्त लामा र बुझ्न नसकिने खालका छन्। ती दुरूह उपाख्यानहरू मध्ये सिद्धहरूले राजा जनकलाई दिएको उपदेश पनि पर्दछ। त्यस अद्वैतज्ञानपरक उपदेशलाई सिद्धगीता पनि भनिन्छ। त्यसै सिद्धगीतालाई यहाँ प्रस्तुत गर्न लागिएको छ।

ब्रह्मर्षि वसिष्ठले रामलाई सम्बोधन गर्दै सिद्धगीताको पुरानू उपाख्यान बताउनु भएको थियो। यो गीता उपशमप्रकरणमा पर्दछ। यो उपाख्यान प्राचीन मिथिलाराज्यका प्रसिद्ध ज्ञानी राजा जनकसँग सम्बन्धित छ। राजा जनक सम्पूर्ण बाधाविपत्तिहरूबाट रहित सुखी थिए। उनीसँग सबै प्रकारका सम्पत्तिहरू थिए। उनी उदार, बुद्धिमान् र पराक्रमी पनि थिए। उनी माग्नेका लागि कल्पवृक्ष थिए। मित्रहरूकालागि सहयोगी र स्त्रीहरूका लागि कामदेव थिए। त्यसैकारण सबै थरी मानिसहरू उनकै दरबारतिर दौडन्थे। जस्तै – **'जनको जनक इति वै जना धावन्ति।'** *(बृ.उ.२।१।१)* अर्थात् जनक जनक भन्दै सबै जना दौडन्थे। उनी एकपटक वसन्तऋतुका समयमा अत्यन्त रमणीय इन्द्रको नन्दनवन जस्तै वनमा उत्तम विलासवती रमणीहरूलाई साथमा लिएर क्रीडा गर्न गएका थिए। रमणीय लताकुञ्जयुक्त त्यस काननमा चारैतिर सुन्दर फूलहरू फुलिरहेका थिए। तिनै

फूलको वासनालाई साथमा लिएर शीतल वासन्ती हावा मन्दमन्दरूपमा चलिरहेको थियो। त्यस्तो रमणीय तथा अत्यन्त मनोरम वनमा गएर राजा जनक आफ्ना साथमा गएका अनुचर, अङ्गरक्षक तथा अरू मानिसहरूलाई पनि छोडेर तिनै युवतीहरूका साथ पर्वतका कुञ्जहरूमा विहार गर्नलागेका बेलामा त्यतैकतै तमालवनका लताकुञ्जहरूमा अदृश्य भएर बसेका एकान्तवासी, सधैँ त्यसै पर्वतीय कन्दराहरूमा घुम्ने सिद्धहरूको आवाज उनले सुने। ती आवाजहरू उनैलाई उद्देश्य गरेर आएका थिए। ती आवाजहरू श्रुति र स्मृतिप्रतिपादित आत्मसाक्षात्कारपरक उपदेशहरू थिए। उपदेशहरू अदृश्यरूपमा १० थरी सिद्धहरूले दिएका थिए। तीमध्ये प्रथम सिद्धले अदृश्यरूपमा राजा जनकलाई लक्ष्य गर्दै उपदेश दिएका थिए। जस्तै –

**द्रष्टृदृश्यसमायोगात्प्रत्ययानन्दनिश्चयः ।**
**यस्तं स्वमात्मतत्त्वोत्थं निःस्पन्दं समुपास्महे ॥१॥**

अर्थात् द्रष्टाको दृश्यका साथ इन्द्रिय र अन्तःकरणको सम्बन्ध हुँदा विषयाकार बुद्धिवृत्तिमा जुन आनन्दको निश्चय हुन्छ, त्यो आनन्द भूमानन्दस्वरूप आत्मतत्त्वबाट नै उत्पन्न आनन्द हो। त्यो आनन्दस्वरूप आत्माको निर्विकल्प समाधिमा हामीहरू अनुभव गर्दछौँ।

यसरी पहिला सिद्धले आनन्दमय (भूमा) ब्रह्मको ध्यान गर्ने उपदेश दिएका थिए। भूमा नै ब्रह्म हो, भूमामा नै सुख छ र अल्पमा सुख छैन भनेर उपनिषद्ले पनि भनेको छ। जस्तै – **'यो वै भूमा तत्सुखं नाल्पे सुखमस्ति, भूमैव सुखं भूमा त्वेव विजिज्ञासितव्यः।'** *(छा.उ.७।२३।१)*

दोस्रा सिद्धले पनि अदृश्यरूपमा नै राजा जनकलाई उद्देश्य गर्दै भनेका थिए। जस्तै –

**द्रष्टृदर्शनदृश्यानि त्यक्त्वा वासनया सह।**
**दर्शनप्रथमाभासमात्मना समुपास्महे ॥२॥**

अर्थात् अनन्त जन्मजन्मान्तरका वासनाहरूले युक्त द्रष्टा, दर्शन र दृश्यस्वरूप अन्तःकरणको त्रिपुटीलाई त्याग गर्दछौँ। अन्तःकरणमा त्रिपुटीको उदय हुनुभन्दा पहिले नै आफ्ना अन्तःकरणमा झलझलाकार भएर रहने प्रकाशस्वरूप साक्षीचैतन्यको हामीहरू ध्यान गर्दछौँ।

यसरी दोस्रा सिद्धले जाग्रत्, स्वप्न र सुषुप्तिका साथै पञ्चकोष र त्रिपुटी समेतको साक्षी भएर अन्तःकरणमा रहेको साक्षीचैतन्य (आत्मा) लाई उपासना गर्दछौँ अर्थात् आत्माको अनुभव गर्दछौँ भनेर राजा जनकलाई उपदेश गरेका थिए। उपनिषद्मा पनि भनिएको छ– **'कश्चिद्धीरः प्रत्यगात्मानमैक्षदावृत्तचक्षुरमृतत्त्वमिच्छन्।'** (कठोपनिषद् १।२।१) अर्थात् कुनै धीर पुरुषले अमृतत्त्वको इच्छा गरेर बाहिरतर्फ लागेका इन्द्रियहरूलाई रोक्तछ र भित्रतर्फ हेर्दछ भने त्यसले भित्र दहराकाशमा अर्थात् हृदयमा रहेको प्रत्यगात्मा वा साक्षीचैतन्यलाई देख्तछ।

त्यसपछि तेस्रा सिद्धले त्यसैगरेर अदृश्यरूपमा राजा जनकलाई भने –

**द्योर्मध्यगतं नित्यमस्तिनास्तीति पक्षयोः।**
**प्रकाशनं प्रकाश्यानामात्मानं समुपास्महे ॥३॥**

अर्थात् साक्षीचैतन्य अर्थात् आत्माका बारेमा अस्ति र नास्ति अर्थात् छ र छैन भनेर दुईथरीका बीचमा वादविवाद हुन्छ। तर

साक्षीचैतन्यविना ता यस प्रकारको विवाद पनि हुन सक्तैन । यी दुबै पक्षलाई जसले छैन भन्छ र जसले छ भन्छ, ती दुवैथरीलाई साक्षीचैतन्यले नै प्रकाश दिइरहेको छ । छ र छैन भन्दा माथि रहेर जुन आत्माले सन्मात्ररूपले ती दुवैलाई सत्ता दिइरहेको छ, त्यसै आत्माको हामी उपासना गर्दछौँ । उपनिषद्मा पनि भनिएको छ – **'यस्यामतं तस्य मतं मतं मस्य न वेद सः । अविज्ञातं विजानतां विज्ञातमविजानताम् ॥'** *(केनोपनिषद् २।३)* अर्थात् आत्मालाई जसले जानेको छैन भन्दछ त्यसले जानेको हुन्छ । जसले आत्मालाई जानेको छु भन्दछ त्यसले जानेको हुँदैन । किनभने जान्दछु भन्नेले आत्मा जान्दैन र जान्दिन भन्नेले आत्मा जान्दछ । त्यसैगरेर अर्को उपनिषद्ले पनि भनेकोछ – **'विज्ञातारमरे केन विजानीयात् ।'** *(बृ.उ.।४।५।१५)* अर्थात् विज्ञातालाई कसले जान्दछ ।

त्यसपछि चारौँ सिद्धले अदृश्यरूपमा अत्यन्त गम्भीर स्वरमा भन्न थाले –

**यस्मिन्सर्वं यस्य सर्वं यतः सर्वं यस्मा इदम् ।**
**येन सर्वं यद्धि सर्वं तत्सत्त्यं समुपास्महे ॥४॥**

अर्थात् जुन परमात्मा सर्वाधिष्ठान हो । जुन परमात्मा सबैको नियन्त्रक र अन्तर्यामी हो । जुन परमात्मा सबै चराचर जगत्को उत्पत्तिको स्थान हो । जसबाट यो संसार चलेको छ । जुन परमात्मा सबैथोक हो । त्यस्तो सत्त्यरूप परमात्मालाई हामी नमस्कार गर्दछौँ । उपनिषद्ले पनि यस कुरालाई समर्थन गरेको छ । जस्तै – **'यतो वा इमानि भूतानि जायन्ते । येन जातानि जीवन्ति । यत्प्रयन्त्यभिसंविसन्ति । तद्विजिज्ञासस्व । तद्ब्रह्म ।'** *(तै.उ.३।१)* अर्थात् जसबाट यी सम्पूर्ण भूतप्राणीहरू

उत्पन्न हुन्छन् । उत्पन्न भएपछि जसका आश्रयमा जीवित रहन्छन् । अन्त्यमा ती सबै उसमा नै मिल्दछन् । त्यसैलाई विशेषरूपमा जान्नुपर्दछ । त्यो तत्त्व ब्रह्म हो ।

पाँचौँ सिद्धले पनि उपदेशगर्दै भने –

**अशिरस्कं हकारान्तमशेषाकारसंस्थितम् ।**
**अजस्रमुच्चरन्तं स्वं तमात्मानमुपास्महे ॥५॥**

अर्थात् अकार आदिमा भएर जसको अन्त्यमा हकारछ, त्यो अहं हो । त्यसैको आधारमा आत्मतत्त्व बुझिन्छ । त्यसैको आधारमा सम्पूर्ण संसार अडेको छ । जसमा अकारको शेष छैन । त्यस्तो अशेषाकार र सर्वाकाररूप अहंभन्दा माथि रहेको अर्थात् तत्पदले वाच्य आत्मस्वरूपको नित्य भावना गर्दछौँ । उपनिषद्ले पनि भनेको छ – **'आत्मन्येवात्मानं पश्यति सर्वमात्मानं पश्यति ।'** *(बृ.उ.४।४।२३)* अर्थात् जसले आत्मामा नै आत्मा देख्तछ त्यसले सबैतिर आत्मा देख्तछ ।

छैटौँ सिद्धले पनि ब्रह्मतत्त्वलाई प्रकाशित गर्ने महत्त्वपूर्ण उपदेश गरेका थिए । जस्तै –

**सन्त्यज्य हृद्गुहेशानं देवमन्यं प्रयान्ति ये ।**
**ते रत्नमभिवाञ्छन्ति त्यक्तहस्तस्थकौस्तुभाः ॥६॥**

अर्थात् जो हृदयरूपी गुफामा रहेको परमात्मालाई छोडेर अरूहरू देवताहरूको खोजीमा जान्छन्भने ती व्यक्तिहरू आफ्ना हातमा रहेको बहुमूल्य कौस्तुभमणि छोडेर अरू सामान्य रत्न पाउने इच्छा गर्दछन् । यसको अर्थ आफ्नै बुद्धिरूपी गुफामा सधैँ बसिरहेको आफ्नै स्वरूपभूत परमात्मालाई बिर्सिएर बाहिर अरू सामान्य देवताको खोजिगरिहिड्नु महामूर्खता हो । भित्रपट्टि फर्किएर आफूले आफूलाई अर्थात् आफ्नै

स्वरूपलाई खोज्नु पर्दछ। उपनिषद्ले पनि भनेको छ – **'तं दुर्दर्शं गूढमनुप्रविष्टं गुहाहितं गह्वरेष्ठं पुराणम्। अध्यात्मयोगाधिगमेन देवं मत्वा धीरो हर्षशोकौ जहाति।'** *(कठोपनिषद् १।२।१२)* अर्थात् अत्यन्त मुश्किलले देख्न सकिने, गूढस्थानमा पसेको, पुरातनपुराणपुरुषलाई अध्यात्म योगद्वारा जानेर बुद्धिमान् पुरुष हर्ष र शोकलाई त्याग गर्दछ। **'अङ्गुष्ठमात्रः पुरुषोऽन्तरात्मा सदा जनानां हृदये सन्निविष्ठः।'** अर्थात् अङ्गुष्ठमात्र प्रमाण भएका अन्तरात्मपुरुष सबै प्राणीका हृदयमा सधैँ विराजमान छन्।

सातौँ सिद्धले त्यसै प्रकारको उपदेश अदृश्यरूपमा गरेका थिए –

**सर्वाशाः किल सन्त्यज्य फलमेतदवाप्यते।**
**येनाशाविषवल्लीनां मूलमाला विलूयते ॥७॥**

अर्थात् सम्पूर्ण आशा एवं आकाङ्क्षाहरूको परित्याग गरेपछि ब्रह्मज्ञानरूपी फल प्राप्त हुन्छ। जसलाई प्राप्त गरेपछि आशारूपी विषवल्लीको जरा समेत काटिन्छ। जन्मजन्मान्तर, कल्पकल्पान्तर र युगयुगान्तरदेखि अन्तःकरणमा जम्मा भएर बसेका सञ्चित कर्महरू एकैचोटि भस्म भएर जान्छन्। हृदयग्रन्थिभेदन भएर जान्छ। श्रुतिले पनि भनेको छ – **'भिद्यते हृदयग्रन्थिश्छिद्यन्ते सर्वसंशयाः। क्षीयन्ते चास्य कर्माणि तस्मिन्दृष्टे परावरे॥'** *(मुण्डकोपनिषद् २।२।८)* अर्थात् परावर अथवा कार्यकारणरूप परब्रह्म परमात्माको साक्षात्कार गरेपछि जीवको हृदयग्रन्थि समाप्त हुन्छ। सम्पूर्ण संशयहरू नष्ट हुन्छन्। कर्महरू पनि क्षीण भएर जान्छन्।

आठौँ सिद्धको उपदेश निम्न अनुसार छ –

**बुद्ध्वाऽप्यत्यन्तवैरस्यं यः पदार्थेषु दुर्मतिः।**
**बध्नाति भावनां भूयो नरो नासौ स गर्दभः ॥८॥**

अर्थात् पदार्थहरू अत्यन्त नीरस छन् भन्ने थाहा पाएर पनि जुन दुर्बुद्धि अथवा बुद्धिविहीन मान्छे फेरि तिनै पदार्थहरूमा आसक्ति राख्तछ भने त्यो मान्छे होइन गधा हो । यही कुरा भागवतमा पनि उल्लेख गरिएको छ । जस्तै – **'श्वविड्वराहोष्ट्रखरैः संस्तुतः पुरुषः पशुः । न यत्कर्णपथोपेतो जातु नाम गदाग्रजः ॥'** *(भागवत २।३।१९)* अर्थात् जसका कानमा भगवान्का लीलाकथाहरू कहिल्यै पनि पर्दैनन् भने त्यो नरपशु हो । त्यो नरपशु कुकुर, सुँगुर, ऊँट र गधाभन्दा पनि अझ तलको हो । त्यसै गरेर अर्को श्लोकमा पनि भनिएको छ । जस्तै – **'विदन्ति मर्त्याः प्रायेण विषयान् पदमापदाम् । तथापि भुञ्जते कृष्ण तत् कथं श्वखराजवत् ॥'** *(भागवत ११।१३।८)* अर्थात् (भगवान् श्रीकृष्णसँग उद्धव सोध्दछन्) हे कृष्ण ! विषय विपत्तिको घर हो भनेर सबै मानिसहरू जान्दछन् । यति जान्दाजान्दै पनि फेरि किन ती मानिसहरू कुकुर, गधा र बोको जस्तो भएर सम्पूर्ण सांसारिक दुःखहरूलाई सहेर पनि त्यही सांसारिक विषयलाई भोगिरहन्छन् ? यसको उत्तरमा तीन गुणहरूको विवेचना गर्दै भगवान्ले उद्धवलाई यसै सन्दर्भमा हंसगीताको प्रसङ्गसमेत ल्याएर सुनाउनु भएको थियो ।

नवौँ सिद्धले पनि राजा जनकलाई लक्ष्य गरेर अदृश्यरूपमा उपदेश गरेका थिए –

**उत्थितानुत्थितानेतानिन्द्रियाहीन्पुनःपुनः ।**
**हन्याद् विवेकदण्डेन वज्रेणेव हरिर्गिरीन् ॥९॥**

अर्थात् बारम्बार उठिरहने, एक पटक दबाएर पनि फेरि विषयतिर उन्मुख हुने इन्द्रियहरूलाई अत्यन्त दृढताका साथ दमन गर्नु पर्दछ । ती विषयासक्त इन्द्रियहरूलाई दोहोऱ्याएर उठ्न दिनु

हुँदैन । परापूर्वकालमा पर्वतहरूका पखेटा थिए । पर्वतहरू निर्बाधरूपमा यत्रतत्र उडिरहन्थे । त्यसबाट प्राणीहरूलाई अत्यन्त कष्ट भएको थियो । त्यो देखेर देवराज इन्द्रले त्यसरी नउड्न पर्वतहरूलाई सम्झाएका थिए । तर पनि पर्वतहरूले नटेरेका हुँदा इन्द्रले ती पर्वतहरूका पखेटाहरू आफ्नू वज्रद्वारा काटेर कहिल्यै पनि उड्न नसक्ने बनाइदिएका थिए । त्यसै गरेर जितेन्द्रिय पुरुषले आफ्ना इन्द्रियहरूलाई उठ्नै नसक्ने गरेर वशमा पार्नु पर्दछ ।

यसै कुरालाई भगवान् श्रीकृष्णले भागवतमा यसरी भन्नुभएको छ – **'बन्ध इन्द्रियविक्षेपो मोक्ष एषां च संयमः ।'** *(भागवत ११।१८।२२)* अर्थात् इन्द्रियहरूको विक्षेप किंवा इन्द्रियहरूको निग्रह नहुनु बन्धन हो र तिनको संयम हुनु नै मोक्ष हो । गीतामा पनि भगवान् श्रीकृष्ण भन्नुहुन्छ । जस्तै – **'इन्द्रियस्येन्द्रियस्यार्थे रागद्वेषौव्य-वस्थितौ । तयोर्न वशमागच्छेत्तौ ह्यस्य परिपन्थिनौ ॥'** *(गीता ३।३४)* अर्थात् इन्द्रियहरूको उनका विषयहरूमा राग र द्वेष रहन्छ । तर मान्छेले राग र द्वेषका वशमा पर्नुहुँदैन । किनभने यी दुवै कल्याणका मार्गमा विघ्न उत्पन्न गर्ने भएका महान् शत्रुहरू हुन् ।

अन्त्यमा दशम सिद्धले पनि राजा जनकलाई अरू सिद्धहरूले सरह नै उपदेश गरेका थिए –

**उपशमसुखमाहरेत्पवित्रं सुशमवतः सममेति साधुचेतः ।**
**प्रशमितमनसः स्वके स्वरूपे भवति सुखे स्थितिरुत्तमा चिराय ॥१०॥**

अर्थात् पवित्र उपशमसुख अथवा इन्द्रिय र मनलाई समेत शान्त बनाएपछि प्राप्त हुने सुख हो । जुन व्यक्तिको सम्यक्रूपले इन्द्रियको संयम भएको छ । त्यस्ता व्यक्तिको चित्त सम्यक्रूपले शान्त भएको हुन्छ । त्यसरी मन शान्त भए आफ्नो सुखस्वरूपमा

चिरकालपर्यन्त ऊ स्थित बनिरहन सक्तछ । यसैलाई अर्को शब्दमा भन्ने हो भने बाह्य तथा आभ्यन्तर अर्थात् बाहिरी र भित्री इन्द्रियहरूको व्यापारको उपशमबाट विक्षेपजनित दुःख उपशम भएपछि आत्मसुख प्राप्त हुन्छ । यसबाट इन्धनरहित आगो झैँ चित्त अत्यन्त शान्त हुन्छ । त्यसरी जसको चित्त शान्त हुन्छ उसको सुखरूप परमार्थभूत आफ्नू स्वरूपमा अर्थात् आत्मामा चिरकालसम्म उत्तम स्थिति रहन्छ ।

उपनिषद्ले पनि भनेको छ – **'तं दुर्दर्शं गूढमनुप्रविष्टं गुहाहित गह्वरेष्ठं पुराणम् । अध्यात्मयोगाधिगमेनदेवं मत्वा धीरो हर्षशोकौ जहाति ॥'** *(कठोपनिषद् १।२।१२)* अर्थात् अत्यन्त मुश्किलले देख्न सकिने, गोप्य ठाउँमा अनुप्रविष्ट, बुद्धिमा रहेको, गहनस्थानमा बस्ने पुरातनदेवलाई अध्यात्मयोगद्वारा जानेर धीर अर्थात् बुद्धिमान् पुरुष हर्ष र शोक दुवैलाई त्यागगरेर शान्त भएर बस्तछ ।

उपर्युक्त अनुसारको सिद्धगीता सुनिसकेपछि राजा जनकमा तीव्र वैराग्यको उदय भएको थियो । दरबारमा फर्केर आएपछि खानापिनासमेत छोडेर उनले एकान्तमा बसेर चिन्तन गर्न थालेका थिए । विलाप गर्दै राजा जनकले भनेका थिए । जस्तै –

**हा कष्टमति कष्टासु लोकलोलदशास्वयम् ।**
**पाषाणेष्विव पाषाणा आलुठामि बलादहम् ॥**
**अपर्यन्तस्य कालस्य कोऽप्यंशो जीव्यते मया ।**
**तस्मिन्भावं निबध्नामि धिङ्मामधमचेतनम् ॥**
**कियन्मात्रमिदं नाम राज्यमाजीवितं मम ।**
**किमेतेनविना दुःखं तिष्ठामि हतधीर्यथा ॥**

**आदावन्तेऽप्यनन्तोऽहं मध्ये पेलवजीवितः ।**
**बालश्चित्रेन्दुनेवाहं किं मुधाधृतिमास्थितः ॥**

*– यो.वा. उपशम १९।५–८*

अर्थात् हरे ! अत्यन्त खेदपूर्वक म आज भन्दैछु। अनवरत चल्ने जन्ममृत्यु आदि अत्यन्त दुःखदायी अवस्थाका बीचबाट एउटा ढुङ्गो माथि अर्को ढुङ्गो बजारिएझैँ गरेर म हठात् अगाडि बढिरहेको छु। यस अपार कालको कुनै अंशमा मेरो जीवन छ। यस्तो क्षणिक जीवनमा पनि धेरैथरी अनर्थको आशा गरेर हिँड्ने मलाई धिक्कार छ। यो मेरो राज्यको कुनै अर्थ छैन। तै पनि म यसैमा सन्तुष्ट भएर भविष्यको कत्ति पनि चिन्ता नलिएर बसिरहेको छु। मेरो स्वरूप अनादि र अनन्त हो। बीचमा यो अत्यन्त छोटो जीवन शरीरका सम्बन्धबाट प्राप्त भएको हो। चित्रमा लेखिएको चन्द्रमालाई बालकले साँच्चैको चन्द्रमा ठानेर मस्त भएझैँ गरेर म पनि अनात्म देहादिमा आत्मबुद्धि गरेर अत्यन्त धैर्यका साथ बसिरहेको छु।

उपर्युक्त अनुसार विलाप र पश्चाताप गर्दै राजा जनकले आफ्नो राज्य, स्त्री, पुत्र र धनसम्पत्ति समेतको आसक्ति छोडिदिएका थिए। उनले ब्रह्मज्ञानकालागि ब्रह्मज्ञानी याज्ञवल्क्यका समक्ष गएर विधिपूर्वक गुरूपसत्ति गरेका थिए। याज्ञवल्क्य मुनिले पनि उनको संसारप्रतिको अनासक्ति र तीव्र वैराग्य देखेपछि उनलाई उपनिषद्का तत्त्वमसि महावाक्य आदि महावाक्यहरूको उपदेशपूर्वक ब्रह्मपरक अरू शास्त्रहरू पनि पढाएका थिए। राजा जनकलाई गृहस्थ आश्रममा रहँदा रहँदै र अनासक्त भएर राज्य गर्दागर्दै पनि ब्रह्मज्ञान भएको थियो। गुरु याज्ञवल्क्यले राजा जनकलाई अभयपद अर्थात् ब्रह्म प्राप्त गरेको कुरा घोषणा गरेका थिए। बृहदारण्यकोपनिषद्मा

भनिएको छ – **'अभयं वै जनक प्राप्तोऽसि ।'** *(बृ.उ.४।२।४)* अर्थात् हे जनक ! निश्चय नै तिमीले अभयलाई प्राप्त गऱ्यौ । अर्थात् तिमी अभयरूप ब्रह्म नै भयौ । अभयशब्दले ब्रह्मलाई बुझाउने कुरा उपनिषद्मा उल्लेख भएको छ – **'स वा एष महानज आत्माजरोऽमरोऽमृतोऽभयो ब्रह्माभयं वै ब्रह्माभयं हि वै ब्रह्म भवति य एवं वेद ।'** *(बृ.उ.४।४।२५)* अर्थात् यो महान् अजन्मा आत्मा अजर, अमर, अमृत एवं अभय बह्म हो । अभय नै ब्रह्म हो । जसले यस्तो जान्दछ त्यो अभय अर्थात् ब्रह्म हुन्छ ।

त्यसरी ब्रह्मज्ञान भइसकेपछि राजा जनकले गुरु याज्ञवल्क्यलाई गुरुदक्षिणकारूपमा आफ्नू राज्य र आफैँलाई समेत समर्पण गरेका थिए – **'सम्राडेनं प्रापितोऽसीति होवाच याज्ञवल्क्यः सोऽहं भगवते विदेहान् ददामि मां चापि सह दास्यायेति ।'** *(बृ.उ.४।४।२३)* अर्थात् हे सम्राट् ! तिमीले ब्रह्म प्राप्तगऱ्यौ भनेर गुरु याज्ञवल्क्यले भनेपछि राजा जनकले यो विदेह राज्य म हजुरलाई दिन्छु र म आफैँलाई पनि हजुरको दासको रूपमा समर्पण गर्छु भनेर राजा जनकले आफैँलाई समेत समर्पण गरिदिएका थिए । अस्तु । श्रीकृष्णार्पणमस्तु ।

# ध्रुवगीता

आदिराज स्वायम्भुवमनुका नाति तथा राजा उत्तानपादका जेठा छोरा ध्रुवको पावन कथा श्रीमद्भागवतमहापुराणमा आउँछ । उत्तानपादकी जेठी रानी सुनीतिका गर्भबाट जन्मिएका ५ वर्षका ध्रुव आफ्नै पिता र सौतेनी आमा सुरुचिबाट अपहेलित भएपछि आमा सुनीति र देवर्षि नारदको उपदेश पाएर कालिन्दी नदीका तटमा अवस्थित मधुवनमा गएर उनले भगवान् नारायणको तपस्या गरेका थिए । उनको ६ महिनाको अत्यन्त कठिन तपस्याबाट खुशी भएर उनलाई दर्शन दिन भगवान् मधुवनमा जानु भएको थियो । भगवान्ले आफ्नू ब्रह्ममयशङ्खले ध्रुवको गाला छोइदिएपछि उनको वाक्य खुलेको थियो । त्यसपछि उनले १२ श्लोकहरूद्वारा भगवान्को स्तुति अद्वैतवेदान्तपरक उपनिषद्वाक्यहरूले गरेका थिए । त्यसै स्तुतिलाई यहाँ ध्रुवगीताका नामबाट प्रस्तुत गरिएकोछ ।

**योऽन्तः प्रविश्य मम वाचमिमां प्रसुप्तां**
**सञ्जीवयत्यखिलशक्तिधरः स्वधाम्ना ।**
**अन्यांश्च हस्तचरणश्रवणत्वगादीन्**
**प्राणान्नमो भगवते पुरुषाय तुभ्यम् ॥**

**(१)**

अर्थ – हे भगवन् ! मेरा अन्तःकरणमा प्रवेश गरेर हजूरले आफ्ना चित्शक्तिद्वारा मेरो सुतेको वाणीलाई उठाइदिनुभयो । त्यतिमात्रै नभएर मेरा हात, पाउ, कान, छाला आदि सबै इन्द्रियहरू र प्राणसमेतलाई चेतना दिनुभयो । यस्ता सर्वान्तर् तथा सर्वसाक्षी भगवान्लाई म नमस्कार गर्दछु ।

सृष्टिका प्रथम प्रभातमा परब्रह्म परमेश्वरले भूतप्राणीको सृष्टि गर्नुभयो। **'यतो वा इमानि भूतानि जायन्ते येन जातानि जीवन्ति।'** *(तै.उ.३।१।१)* अर्थात् जसबाट अथवा जुन ब्रह्मबाट सम्पूर्ण भूतप्राणी उत्पन्न हुन्छन् र उत्पन्न भएपछि उही परब्रह्म परमात्माको आश्रय पाएर जीवित रहन्छन्।

त्यसरी परमात्माले भूतप्राणीको सृष्टि गरिसकेपछि तिनलाई सजीव पारेर उठाउँन चित्शक्तिका रूपमा परमात्मा आफैँ प्राणीहरूका अन्तःकरणमा पस्नुभएको कुरा श्रुतिले बताएको छ – **'तत्सृष्ट्वा तदेवानुप्राविशत्।'** *(तै.उ.२।६।१)* अर्थात् प्राणीहरूको सृष्टि गरेर प्राणीहरूका अन्तःकरणमा जीवात्मा वा चिदाभासका रूपमा अथवा अन्तर्यामीका रूपमा परमात्मा आफैँ प्रवेश गर्नु भयो।

कसरी परमात्मा प्राणीका अन्तःकरणमा प्रवेश गरेर नियमन गर्नुहुन्छ भन्ने सम्बन्धमा अर्को श्रुतिले भनेकोछ – **'यः पृथिव्यां तिष्ठन् पृथिव्या अन्तरो यं पृथिवी न वेद यस्य पृथिवी शरीरं यः पृथिवीमन्तरो यमयत्येष त आत्मान्तर्याम्यमृतः।'** *(बृ.उ.३।७।३)* अर्थात् जुन परमात्मा पृथिवीमा नै रहेर पृथिवीका भित्र पनि रहन्छन् तर त्यस परमात्मालाई पृथिवी जान्दिनन्। जुन परमात्माको शरीर पृथिवी हो र त्यही परमात्मा पृथिवीका भित्र बसेर पृथिवीको नियमन पनि गर्दछन् त्यही तिम्रो आत्मा हो। त्यही आत्मा अन्तर्यामी र अमृत हो।

परमात्मा नै आँखाको आँखा आदि भएको कुरा अर्को श्रुतिले बताएको छ – **'श्रोत्रस्य श्रोत्रं मनसो मनो यद्वाचो ह वाचं स उ प्राणस्य प्राणश्चक्षुषश्चक्षुरतिमुच्यं धीराः प्रेत्यास्माँल्लोकादमृता भवन्ति।'** *(केनोपनिषद् १।२)* अर्थात् जुन परमात्मा श्रोत्रको श्रोत्र,

मनको मन, वाणीको पनि वाणी, प्राणको पनि प्राण र चक्षुका पनि चक्षु हुन्। यस प्रकारले परमात्मालाई जान्यो भने त्यो धीरपुरुष यस लोकबाट मुक्त भएर जान्छ र ऊ अमर हुन्छ।

यही कुरा अर्को उपनिषद्ले नि भनेको छ – **'प्राणस्य प्राणमुत चक्षुषश्चक्षुरुत श्रोत्रस्य श्रोत्रं मनसो ये मनो विदुः। ते निचिक्युर्ब्रह्म पुराणमग्रचम्।'** *(बृ.उ. ४।४।१८)* अर्थात् जसले परमात्मालाई प्राणको प्राण, चक्षुको चक्षु, श्रोत्रको श्रोत्र र मनको मन भनेर जान्दछ। उसले त्यस पुराण तथा अनादि ब्रह्मलाई जान्दछ।

उपर्युक्त अनुसार उपनिषद्वाक्यहरूद्वारामात्रै वेद्य ब्रह्मको स्तुति उपनिषद्वाक्यहरूकै आधारमा ध्रुवले गरेका थिए। भगवान्ले आफ्नू ब्रह्ममय अर्थात् वेदात्मक शङ्खले अबोध अर्थात् किंकर्तव्यविमूढ ध्रुवका गालामा छोइदिने बित्तिकै उनका अन्तःकरणमा अद्वैतवेदान्तपरक उपनिषद्मय स्तुति स्फुरण भएको थियो। त्यसपछि मात्रै भगवान्को स्तुति गर्न उनी समर्थ भएका थिए।

सारांशमा, हे भगवन् ! मेरो सुतेको वाणीलाई र मेरा अरू इन्द्रियहरूसमेत सबैलाई आफ्नो चित्शक्तिद्वारा जगाइदिनु भयो। ज्ञानशक्ति, क्रियाशक्तिलगायतका सम्पूर्ण शक्तिहरूलाई प्राणीका भित्र अन्तःकरणमा बसेर नियमन गर्ने यस्ता अन्तर्यामी पुरुष हजूरलाई म नमस्कार गर्दछु भनेर ध्रुवले भगवान्को स्तुति गरेका थिए॥

**एकस्त्वमेव भगन्निदमात्मशक्त्या**
**मायाख्ययोरुगुणया महदाद्यशेषम्।**
**सृष्ट्वानुविष्य पुरुषस्तदसद्गुणेषु**
**नानेव दारुषु विभावसुवद्विभासि॥**

**(२)**

अर्थ – हे भगवन् ! हजूर एउटै मात्र हुनुहुन्छ । तर आफ्ना अनन्त गुणमयी शक्तिहरूले युक्त मायाद्वारा महदादि सम्पूर्ण सृष्टिको रचना गरेर हजूर आफैँ त्यसैभित्र अन्तर्यामीका रूपमा बस्नु हुन्छ । जसरी विभिन्न आकारका काठहरूमा प्रकट भएको अग्नि काठरूपी उपाधि अनुरूप थरीथरीका रूपहरू धारणा गरेर भासित हुन्छ ।

परमात्मा एक तथा अद्वितीय भएर पनि त्रिगुणात्मिका मायाद्वारा यो संसारको सृष्टि गर्नुहुन्छ । श्रुतिले भनेको पनि छ– **'रूपंरूपं प्रतिरूपो बभूव तदस्य रूपं प्रतिचक्षणाय । इन्द्रो मायाभिः पुरुरूप इयते ।'** *(ब्र.उ.२।५।१९)* अर्थात् परमात्मा रूप–रूपहरूबाट प्रतिरूप हुनुहुन्छ । उहाँको त्यो रूप प्रकट गर्नलाई हो । त्रिगुणात्मिका मायाद्वारा परमात्मा अनेकरूप लिएजस्तो देखिनुहुन्छ ।

त्यस्तै अर्को श्रुतिले वर्णन गरेको छ –**'अग्निर्यथैको भुवनं प्रविष्टो रूपं रूपं प्रतिरूपो बभूव । एकस्तथा सर्वभूतान्तरात्मा रूपं रूपं प्रतिरूपो बहिश्च ।'** *(कठोपनिषद् २।२।९)* अर्थात् जसरी सम्पूर्ण भुवनमा प्रविष्ट भएको अग्नि उपाधिअनुरूपका रूपहरू लिएर भासित हुन्छ । त्यसैगरेर सम्पूर्ण भूतहरूको एकमात्र अन्तरात्मा उनीहरूका रूप अनुरूप भित्र र बाहिर पनि विद्यमान रहन्छ ।

सारांशमा परमात्मा परब्रह्म अन्तर्यामीका रूपमा प्रत्येक प्राणीका भित्र पसेर नियमन गर्नुहुन्छ । मायाशक्तिद्वारा अनन्तरूपहरू लिएर, असत्य गुण र इन्द्रियहरूमा बसेर विभिन्न अधिष्ठातृ देवताका रूपमा पनि परमात्मा प्रतिभासित हुनुहुन्छ । परमात्मा बाहेक अरू कुनै पनि शक्ति संसारमा छैन । उही परमात्मा नै विभिन्न आकार भएका दाउराहरूमा अग्नि रहेजस्तैगरेर रहनु भएको छ । ज्ञानशक्ति, क्रियाशक्ति लगायतका सम्पूर्ण शक्तिका

रूपमा सर्वत्र परमात्मा नै व्याप्त हुनुहुन्छ ।

**त्वद्दत्तया वयुनयेदमचष्ट विश्वं**
**सुप्तप्रबुद्ध इव नाथ भवत्प्रपन्नः ।**
**तस्यापवर्ग्यशरणं तव पादमूलं**
**विस्मर्यते कृतविदा कथमार्तबन्धो ॥**

**(३)**

अर्थ – हे दीननाथ ! सृष्टिको आरम्भमा ब्रह्माजी पनि हजूरकै शरणमा पर्नुभएको थियो । हजूरले दिएका ज्ञानका प्रभावले गर्दा नै ब्रह्माजीले यस जगत्लाई सुतेर उठेको मान्छेले देखेजस्तो गरेर देख्नुभएको थियो । अजूरका तिनै चरणकमलहरूको आश्रय मुक्तपुरुषहरूले पनि लिने गर्दछन् । कुनै पनि कृतज्ञ पुरुषले हजूरका चरणकमललाई कसरी बिर्सन सक्तछ र ?

भगवान्बाट ब्रह्माजीले ज्ञान प्राप्त गरेपछि **'यथा धाता पूर्वमकल्पयत् ।'** अर्थात् ब्रह्माजीले पूर्व सृष्टिजस्तैगरेर सृष्टिको कल्पनागर्नु भएको थियो भनेर श्रुतिले पनि भनेको छ । कुनै पनि प्राणी परमात्माको कृपा र आश्रयविना बाँच्न सक्तैन । अर्को श्रुतिले पनि भनेको छ – **एको हंसो भुवनस्यास्य मध्ये स एवाग्निः सलिले संनिविष्टः । तमेव विदित्वातिमृत्युमेति नान्यः पन्था विद्यतेऽयनाय ॥***(श्वेताश्वतरोपनिषद् ६।१५)* अर्थात् यस भुवनका मध्यभागमा एउटा हंस छ । त्यही हंसरूपी अग्नि यस शरीररूपी जलमा बसेको छ । त्यसै हंसलाई जानेर पुरुष मृत्युबाट पार हुन्छ । यसदेखि बाहेक मोक्षप्राप्तिको अर्कोबाटो छैन ।

सारांशमा, ब्रह्माजस्ता ज्ञानशक्ति र क्रियाशक्तिसमेत भएका देवताका पिता पनि परब्रह्म परमात्माको कृपाबाट ज्ञान प्राप्त

भएपछिमात्रै सृष्टि गर्न समर्थ हुनुभएको हो। अतः परमात्मा मुक्तपुरुषहरूका पनि आश्रय हुनुहुन्छ। यति कुरा जानेर पनि परमात्माका शरणमा कुनै व्यक्ति जाँदैन भने त्यो आत्मघाती हो।

**नूनं विमुष्टमतयस्तव मायया ते**
**ये त्वां भवाप्ययविमोक्षणमन्यहेतोः।**
**अर्चन्ति कल्पकतरुं कुणपोपभोग्य-**
**मिच्छन्ति यत्स्पर्शजं निरयेऽपि नृणाम्॥**

**(४)**

अर्थ – जुन मानिस आफ्नै इन्द्रियतृप्तिका लागि मात्रै हजूरको आराधना गर्दछ भने त्यस्तो मान्छे भाग्यले ठगिएको हो। किनभने इन्द्रियतृप्ति त नरकमा पनि हुन्छ। यहाँ त जन्ममरणरूपी बन्धनलाई सधैँकालागि समाप्त गरिदिने हजूरको कल्पतरुसमानको स्वरूपको आराधना गर्नु नै मनुष्यजीवनको सार्थकता हो।

जुन व्यक्तिहरू कामना लिएर हजूरको भजन गर्दछन् ती त अत्यन्त नै मूढ हुन्। मनुष्यको शरीर पाएको बेलामा पनि तिनीहरूले हजूरको सेवा गर्न सकेनन् भने त तिनीहरूलाई भाग्यले ठगेको मान्नु पर्छ। कामादि शारीरिक सुखहरू त जुनसुकै योनि जहाँ पनि भोग गर्न पाइन्छ। ब्रह्मज्ञान गरेर मुक्ति पाउँन भने अत्यन्त मुश्किल पर्दछ। मनुष्ययोनि पाएको बेलामा ब्रह्मज्ञान गरेर मुक्त हुनुमा नै मनुष्यजीवनको सार्थकता हो। श्रुतिले पनि भनेको छ –

**अविद्यायामन्तरे वर्तमाना स्वयं धीराः पण्डितंमन्यमानाः।**
**दन्द्रम्यमाणाः परियन्ति मूढा अन्धेनैव नीयमाना यथान्धाः॥**

*(कठोपनिषद् १।२।५)* अर्थात् संसारी मानिसहरू अज्ञानी हुन्छन्। उनीहरू आफूलाई अत्यन्त बुद्धिमान् र पण्डित ठान्दछन्। तर ती

मूढहरू अन्धाका पछि लागेका अन्धाहरू जस्ता भएर यत्रतत्र भौँतारिइरहन्छन् ।

सारांशमा, यो मानवशरीर भोग गर्नकालागि होइन । भोग गर्न त सुँगुर र कुकुरका योनिमा पनि पाइन्छ । भोग गर्न ता नरकमा पनि पाइन्छ । यो मानव शरीर त भगवान्को उपासना र ब्रह्मज्ञान गरेर मुक्त हुनकालागि नै हो ।

**या निर्वृतिस्तनुभृतां तव पादपद्म–**
**ध्यानाद्भवज्जनकथाश्रवणेन वा स्यात् ।**
**सा ब्रह्मणि स्वमहिमन्यपि नाथ मा भूत्**
**किं त्वन्तकासिलुलितात्पततां विमानात् ॥**

**(५)**

अर्थ – हे भगवन् ! हजूरका चरणकमलको ध्यान गर्दा र हजूरका महिमाको श्रवण गर्दा ब्रह्मानन्दभन्दा पनि बढी आनन्द पाइन्छ । यस आननदको स्वर्गीय क्षणिक सुखसँग त तुलना नै हुन सक्तैन । किनभने भोग सकिएपछि स्वर्गमा गएका प्राणीहरू सोभै पृथ्वीमा झर्दछन् ।

भगवान्को ध्यान र महिमाश्रवणबाट प्राप्त हुने आनन्द सबैभन्दा उत्तम आनन्द हो भनेर ध्रुवजीले आफ्नू भगवत्स्तुतिमा भनेका छन् । त्यो आनन्द नै ब्रह्म हो । त्यसैलाई प्राप्त गरेर सबै आनन्दित हुन्छन् । यसबारेमा श्रुति भन्दछ – **'आनन्दो ब्रह्मेति व्यजानात् । आनन्दाद्ध्येव खल्विमानि भूतानि जायन्ते । आनन्देन जातानि जीवन्ति । आनन्दं प्रयन्त्यभिसंविशन्ति ।'** *(तै.उ.३।६।१)* अर्थात् आनन्द ब्रह्म भनेर जान । किनभने आनन्दबाट नै यी सबै प्राणीहरू उत्पन्न हुन्छन् । उत्पन्न भएर आनन्दमा नै जीवित रहन्छन् ।

अन्त्यमा आनन्दमा नै गएर मिल्दछन्।

सारांशमा, यसरी सबै प्राणीहरू ब्रह्मबाट आएर अन्त्यमा ब्रह्ममा नै पर्यवसित हुन्छन्। आनन्द नै ब्रह्म र ब्रह्म नै आनन्द भएको हुँदा ध्रुवबाट उपासना गरिएका भगवान् पनि आनन्दमय ब्रह्म नै हुनुहुन्छ। अतः यस स्तुतिबाट पनि ध्रुवले आनन्दस्वरूप ब्रह्मको नै उपासना गरेको देखिन्छ। ब्रह्मबाहेक अरू कुनै पनि वस्तु छैन। **'सर्वं खल्विदं ब्रह्म।'** अर्थात् यो सम्पूर्ण संसार ब्रह्म हो भनेर अर्को श्रुतिले पनि भनेको छ।

**भक्तिं मुहुः प्रवहतां त्वयि मे प्रसङ्गो**
**भूयादनन्त महतामलाशयानाम्।**
**येनाञ्जसोल्बणमुरुव्यसनं भवाब्धिं**
**नेष्ये भवद्गुणकथाऽमृतपानमत्तः॥**
**(६)**

अर्थ – हे भगवन्! मलाई हजूरका उत्तम तथा शुद्ध हृदय भएका महात्मा भक्तहरूसँग सङ्गत गर्ने अवसर प्राप्त हओस्। जसबाट हजूरका महिमाकथारूपी अमृतको पान गरेर यस दुःखमय संसारबाट म पार हुन सकौँ।

जसले त्यस परमात्मा परम ब्रह्मलाई जान्दछ, त्यो ब्रह्म नै हुन्छ। त्यस्तो ब्रह्मज्ञानी ब्रह्म नै हुन्छ भनेर श्रुतिले पनि भनेको छ। जस्तै – **'स यो ह वै तत्परमं ब्रह्मवेद ब्रह्मैव भवति।** *(मु.उ.३।२९)* अर्थात् जसले निश्चयपूर्वक परब्रह्म परमात्मालाई जान्दछ त्यो ब्रह्म नै हुन्छ।

सारांशमा, जुन भक्तले अनन्यभाव अर्थात् अव्यभिचारिणी भक्तिद्वारा परमात्माको भक्ति गर्दछ, त्यसले सायुज्य मुक्ति प्राप्त गर्दछ। ब्रह्मको उपासना गर्ने मान्छे ब्रह्म नै हुन्छ।

**ते न स्मरन्त्यतितरां प्रियमीश मर्त्यं**
**ये चान्वदः सुतसुहृद्गृहवित्तदाराः ।**
**ये त्वब्जनाभ भवदीयपदारविन्द–**
**सौगन्ध्यलुब्धहृदयेषु कृतप्रसङ्गाः ॥**
**(७)**

अर्थ – हे कमलका नाभि भएका भगवन् ! तपाईंका भक्तहरूको सङ्गत गरिसकेपछि मान्छेले आफ्नो प्रिय शरीर, पुत्र, मित्र, घर, स्त्री आदि सबैलाई बिर्सन्छ ।

भगवान्का सेवामा लागेको भक्त वा आत्मज्ञानमा लागेको मुमुक्षुले संसारका सम्पूर्ण मायिक कुराहरू बिर्सन्छ । अन्त्यमा पुत्रादिको त के कुरा आफ्नै शरीरलाई पनि उसले बिर्सन्छ । आत्माभन्दा प्रिय अरू केही कुरा पनि हुन सक्तैन । आत्माका लागि सबै प्रिय हुन्छन् । उपनिषद्ले पनि भनेको छ – **'न वा अरे पत्युःकामाय पतिः प्रियो भवत्यात्मनस्तु कामाय पतिः प्रियो भवति । .... न वा अरे सर्वस्य कामाय सर्वं प्रियं भवत्यात्मनस्तु कामाय सर्वं प्रियं भवति ।'** *(बृ.उ.२।४।५)* अर्थात् हे मैत्रेयि ! पतिकालागि पति प्रिय हुँदैन, आत्माकालागि पति प्रिय हुन्छ । सबैकालागि सबै प्रिय हुँदैनन् । आफ्ना आत्माकालागि नै सबै प्रिय हुन्छन् ।

सारांशमा, आत्माको उद्धारका लागि नै आफ्ना स्त्री, पुत्र र सम्पत्ति आदि वस्तुहरू मान्छेलाई प्रिय हुन्छन् । यदि भगवत्प्राप्ति वा ब्रह्मप्राप्तिकालागि यी सहायक भएनन् भने यिनको कुनै अर्थ रहँदैन । यही कुरा प्रकारान्तरबाट ध्रुवले आफ्नू स्तुतिको माध्यमबाट उपर्युक्त श्लोकमा व्यक्त गरेका छन् ।

**तिर्यङ्नगद्विजसरीसृपदेवदैत्य-**
**मर्त्यादिभिः परिचितं सदसद्विशेषम् ।**
**रूपं स्थविष्ठमज ते महदाद्यनेकं**
**नातः परं परम वेद्मि न यत्र वादः ॥**
**(८)**

अर्थ – हे भगवन् ! म त हजूरको पशु, वृक्ष, पर्वत, पक्षी, सरीसृप, देवता, दैत्य, मनुष्य समेतले खचाखच भएको यो दृश्यमान् महदादि तत्त्वले बनेको सदसदात्मक यो स्थूल अर्थात् विराट्स्वरूपलाई मात्रै जान्दछु । हजूर वाणी आदि इन्द्रियहरूबाट नजानिने हुनुहुन्छ । अतः हजूरको स्वरूप कस्तो छ म जान्न सक्तिन ।

हामीहरू परब्रह्म परमात्माको केवल सगुण तथा साकार स्वरूपलाईमात्रै जान्दछौँ । भगवान्‌को निर्गुण तथा निरतिशय स्वरूपलाई भने हामी जान्न सक्तैनौं । हामी ध्येय ब्रह्मको केवल ध्यान गर्न सक्तछौं । तर ज्ञेय ब्रह्मलाई भने हामीहरू जान्न सक्तैनौँ । जुन परमात्मा अवाङ्मनसगोचर छ । हाम्रा मायिक इन्द्रियहरूबाट त्यस परम तत्त्वलाई हामीहरू जान्न सक्तैनौ । श्रुतिले पनि भनेको छ – **'यद्वाचानभ्युदितं येन वागभ्युद्यते । तदेव ब्रह्म त्वं विद्धि नेदं यदिदमुपासते ॥** *(केनोपनिषद् १।४)* अर्थात् जुन परब्रह्म परमात्मा वाणीबाट प्रकाशित हुँदैन अर्थात् उसलाई वाणीद्वारा भन्न सकिँदैन । तर जसबाट वाणी प्रकाशित हुन्छ अर्थात् वाणी सञ्चालित हुन्छ । त्यसैलाई परमात्मा परब्रह्म भनेर जान्नु पर्दछ । जसलाई उपास्य सम्झेर उपासना गरिन्छ, त्यो परमात्मा होइन, त्यो ब्रह्म होइन ।

सारांशमा, सगुण साकार भगवान्‌बाट उपासना सुरु गरेर क्रमशः ध्येय ब्रह्मबाट ज्ञेय ब्रह्म अर्थात् निर्गुण तथा निर्विशेष ब्रह्मको

ज्ञान गर्नु नै जीवनको परमध्येय हुनुपर्ने तथ्य यस श्लोकमा ध्रुवबाट अभिव्यक्त भएको देखिन्छ ।

**कल्पान्त एतदखिलं जठरेण गृह्णन्**
**शेते पुमान् स्वदृगनन्तसखस्तदङ्के ।**
**यन्नाभिसिन्धुरुहकाञ्चनलोकपद्म**
**गर्भे द्युमान् भगवते प्रणतोऽस्मि तस्मै ॥**
**(९)**

अर्थ हेनाथ ! कल्पान्त भएपछि सम्पूर्ण विश्वलाई आफ्ना पेटभित्र राखेर हजूर योगनिद्रामा रहेर शेषका शय्यामा सुत्नुहुन्छ । हजूरका नाइटाबाट उम्रिएको सुवर्णमय कमलमा परम तेजस्वी ब्रह्माजीको प्रादुर्भाव हुन्छ । यस्ता सर्वाधार परमब्रह्म परमेश्वरलाई म नमस्कार गर्दछु ।

सृष्टि हुनुभन्दा पहिले सत् मात्रै थियो । चराचर केही पनि थिएन । सबै त्यसै सत्मा निहित थिए । उपनिषद्ले पनि भनेको छ – **'सदेव सोम्येदमग्र आसीदेकमेवाद्वितीयम् ।'** *(छा.उ.६।२।१)* अर्थात् हे सोम्य ! आरम्भमा यो एक अद्वितीय सत् मात्रै थियो । अर्को श्रुतिले अर्केरूपमा भनेको छ – **'हिरण्यगर्भः समवर्तताग्रे भूतस्य जातः पतिरेक आसीत् ।'** *(यजुर्वेद १३।४)* अर्थात् सृष्टि हुनुभन्दा पहिले हिरण्यगर्भ अर्थात् ब्रह्मा हैमाण्डभावले विद्यमान हुनुहुन्थ्यो ।

सारांशमा, उही परमात्मा परब्रह्मको एकमात्र सत्ता सृष्टि हुनुभन्दा पहिले सद्रूपमा थियो । पछि सृष्टिको क्रममा आफ्नै नाभिकमलमा जगत्स्रष्टा ब्रह्मालाई उत्पन्न गर्ने त्यस्ता सर्वाधार परब्रह्मलाई बालक ध्रुव नमस्कार गर्दछन् ।

**त्वं नित्यमुक्तपरिशुद्धविबुद्ध आत्मा**
**कूटस्थ आदिपुरुषो भगवांस्त्र्यधीशः ।**
**यद्बुद्ध्यवस्थितिमखण्डितया स्वदृष्ट्या**
**द्रष्टा स्थितावधिमखो व्यतिरिक्त आस्से ।।**
**(१०)**

अर्थात् हे प्रभो ! हजूर आफ्नू अखण्ड दिव्य दृष्टिद्वारा अन्तःकरणको साक्षी भएर बस्नुहुन्छ । हजूर नित्यमुक्त, शुद्धसत्त्वमय, सर्वज्ञ, परमात्मस्वरूप, निर्विकार, आदिपुरुष, षडैश्वर्यसम्पन्न परमात्मा हुनुहुन्छ । हजूर प्राणीमात्रका बुद्धि अर्थात् अन्तःकरणमा बस्नुहुन्छ । तै पनि जीवात्मादेखि अत्यन्त भिन्न साक्षीका रूपमा हजूर रहनु हुन्छ । संसारको पालना गर्न हजूर नै यज्ञको अधिष्ठाता भगवान् विष्णुका रूपमा पनि रहनुहुन्छ ।

यहाँ भगवान्लाई निष्कल, साक्षी, कूटस्थ, शुद्ध, बुद्ध, निरञ्जन, निर्विशेष ब्रह्मका रूपमा ध्रुवले स्तुति गरेका छन् । उपनिषद्ले पनि भनेको छ – **'निष्कलं निष्क्रियं शान्तं निरवद्यं निरञ्जनम् ।'** अर्थात् जुन आत्मा अर्थात् परब्रह्म कलारहित, क्रियाहीन, शान्त, निरवद्य र निरञ्जन छ । स्थितिकालमा उही परमात्मा यज्ञका अधिष्ठाता अर्थात् अधियज्ञका रूपमा रहनुहुन्छ । जसलाई **'यज्ञो वै विष्णुः'** भनेर श्रुतिले पनि भनेको छ । त्यही नै भूमा हो । भूमा नै सुख हो । त्यसैलाई जान्नु पर्दछ । श्रुतिले भनेको छ – **'यो वै भूमा तत्सुखं नाल्पे सुखमस्ति । भूमैव सुखं भूमा त्वेव विजिज्ञासितव्य इति ।'** *(छा.उ.७/२३/१)* अर्थात् जुन भूमा हो त्यही नै सुख हो । अल्पमा सुख छैन । भूमा नै सुख भएको हुँदा त्यसै भूमालाई जान्नुपर्दछ । **'यत्र नान्यत्पश्यति नान्यच्छृणोति नान्यद्विजानाति तदल्पं यो वै**

**भूमा तदमृतमथ यदल्पं तन्मर्त्यम्।'** *(छा.उ.७/२४/१)* अर्थात् जहाँ अरू केही देख्तैन, जहाँ अरू केही सुन्दैन र अरू केही जान्दैन त्यही नै भूमा हो। तर जहाँ अरू केही देख्तछ, अरू नै केही सुन्दछ र अरू केही जान्दछ। त्यो अल्प हो। जुन भूमा हो त्यो अमृत हो, जुन अल्प हो त्यो मृत्यु हो।

सारांशमा, यस श्लोकमा ध्रुवले भगवान्को साकार तथा सगुण र निराकार तथा निर्गुण परमब्रह्मको स्तुति गरेका छन्। त्यसका साथै भगवान्लाई सर्वपालक अधियज्ञका रूपमा पनि स्तुति गरेका छन्।

**यस्मिन् विरुद्धगतयो ह्यनिशं पतन्ति**
**विद्यादयो विविधशक्तय आनुपूर्व्यात्।**
**तद्ब्रह्म विश्वभवमेकमनन्तमाद्य–**
**मानन्दमात्रमविकारमहं प्रपद्ये ॥**
**(११)**

अर्थ – हे भगवन्! हजूरबाट विद्या र अविद्या आदि गरिएका विभिन्न गति भएका शक्तिहरू निरन्तररूपमा निस्किरहन्छन्। हजूर नै जगत्को कारण, अखण्ड, अनादि, अनन्त, आनन्दमय र निर्विकार ब्रह्मस्वरूप हुनुहुन्छ। अतः म हजूरका शरणमा पर्दछु।

आत्मा, परमात्मा र परब्रह्मस्वरूपले सम्पूर्ण धर्महरूको अधिष्ठान तपाईं नै हुनुहुन्छ। तपाईंबाट नै विद्या, अविद्या आदि गरेका सारा विरुद्ध धर्महरू नित्य प्रवाहित भइरहन्छन्। सबभन्दा सानू र सबभन्दा ठूलो पनि तपाईं नै हुनुहुन्छ। उपनिषद्ले भनेको पनि छ – **'अणोरणीयान्महतो महीयान्'** *(कठोपनिषद् १/२/२०)* अर्थात् आत्मा सानोभन्दा पनि सानो छ र ठूलोभन्दा पनि ठूलो छ। अर्को श्रुतिले

भनेको छ – **तदेजति तन्नैजति तद्दूरे तद्वन्तिके। तदन्तरस्य सर्वस्य तदु सर्वस्यास्य बाह्यतः ॥** *(ईशावास्योपनिषद् ५।६)* अर्थात् त्यो आत्मतत्त्व हिँड्छ र हिँड्दैन पनि। त्यो नजिकै छ र टाढा पनि छ। त्यो नै सबैको भित्र छ र सबैको बाहिर पनि छ। त्यसैगरेर अर्को श्रुतिले पनि भनेको छ – **अपाणिपादो जवनो ग्रहीता पश्यत्यचक्षुः स शृणोत्यकर्णः। स वेत्ति वेद्यं न च तस्यास्ति वेत्ता तमाहुरग्र्यं पुरुषं महान्तम् ॥** *(श्वेताश्वतरोपनिषद् ३।१९)* अर्थात् हातगोडा नभए पनि दौडन्छ र समाउँछ। आँखा नभए पनि देख्तछ। कान नभए पनि सुन्दछ। उसले सबैलाई जान्दछ तर उसलाई कसैले पनि जान्दैन। सर्वाधार परमात्मा परब्रह्मलाई हाम्रा इन्द्रियहरू र मनले जान्न सक्तैनन्। त्यसै आनन्द ब्रह्मलाई जानेपछि कुनै प्रकारको भय हुँदैन। अन्त्यमा श्रुति भन्दछ – **'यतो वाचो निवर्तन्ते। अप्राप्य मनसा सह। आनन्दं ब्रह्मणो विद्वान्। न बिभेति कदाचनेति।'** *(तै.उ.२।४।१)* अर्थात् जहाँबाट मनसहित वाणी जसलाई भेट्न नसकेर फर्केर आउँछ। त्यस आनन्द ब्रह्मलाई जान्ने पुरुष कहिल्यै डराउँदैन।

सारांशमा, त्यो इन्द्रियातीत परमात्मा नै आनन्दस्वरूप ब्रह्म हो। त्यसैलाई जानेर, त्यसैको ध्यान र उपासना गरेर नै मान्छेले मुक्ति पाउँन सक्तछ भनेर ध्रुवले भगवान्‌को स्तुति गरेका छन्।

**सत्याऽऽशिषो हि भगवंस्तव पादपद्म-**
**माशीस्तथानुभजतः पुरुषार्थमूर्तेः।**
**अप्येवमार्य भगवान् परिपाति दीनान्**
**वाश्रेव वत्सकमनुग्रहकातरोऽस्मान् ॥**

**(१२)**

अर्थ – हे प्रभो ! हजूर आनन्दमूर्ति र कल्पतरु समान हुनुहुन्छ । निष्कामरूपले भजन गर्ने हजूरका भक्तहरू सांसारिक राज्य आदि तुच्छ विषयभोगको साटो हजूरका पाउको सेवा गर्न नै मन पराउँदछन् । भर्खरै जन्मेको आफ्नू बाछोलाई गाईले संरक्षण गरेजस्तै गरेर हामी सकामी प्राणीहरूको कामनालाई पनि पूर्ण गरेर हजूर संसारको भयबाट हामी दीनदुःखीहरूको संरक्षण गर्नु हुन्छ । अतः हजूरभन्दा दयालु अरू को हुनसक्तछ ?

धेरै कुरा जानेर र धेरै कुरा गरेर आत्मा किंवा परमात्मा प्राप्त हुन सक्तैन । शुद्ध मनले परमात्मालाई जान्यो भने त्यसको बेडा पार भइहाल्छ । शास्त्रहरूले बताएका कामकुराहरू विनाज्ञान गरिहिड्नु समय र धनलाई खेरफाल्नु मात्रै हो । यसबाट आत्मकल्याण हुँदैन । आत्मकल्याणकालागि त उपनिषद्ले बताएको बाटो नै हिँड्नुपर्दछ – **'तमेव धीरो विज्ञाय प्रज्ञां कुर्वीत ब्राह्मणः । नानुध्यायाद्बहूञ्छब्दान् वाचो विग्लापनं हि तत् ॥'** *(बृ.उ.४।४।२१)* अर्थात् बुद्धिमान् व्यक्तिले उसै परमात्मा परब्रह्मलाई जानेर उसैमा आफ्नू बुद्धि लगाउनु पर्दछ । धेरैथरी शास्त्रहरू अध्ययन गर्नु भनेको वचनलाई खेर फाल्नु मात्रै हो ।

व्यवहारकालमा द्वैतको उपासना र आराधना गरे तापनि परमार्थमा व्यवहारातीत हुनु पर्दछ भनेर श्रुतिले भनेको छ । जस्तै – **'यत्र हि द्वैतमिव भवति तदितर इतरं जिघ्रति तदितर इतरं पश्यति तदितर इतरं शृणोति तदितर इतरमभिवदति तदितर इतरं मनुते तदितर इतरं विजानाति यत्र वा अस्य सर्वमात्मैवाभूत्तत्केन कं जिघ्रेत्तत्केन कं पश्येत्तत्केन कं शृणुयात्तत्केन कमभिवदेत्तत्केन कमन्वीत तत्केन कं विजानीयात् । येनेदं सर्वं विजानाति तं केन विजानीयाद्विज्ञातारमरे केन विजानीयादिति ।'** *(बृ.उ.२।४।१४)*

अर्थात् जुन द्वैतको अवस्थामा द्वैतजस्तो हुन्छ। त्यस बेला एउटाले अर्कालाई सुँघ्दछ, सुन्दछ, अभिवादन गर्दछ, मनन गर्दछ र जान्दछ। तर अद्वैत अवस्थामा जहाँ आत्मामात्रै छ, त्यस अवस्थामा कसले कसलाई सुँघ्ने, सुन्ने, अभिवादन गर्ने, मनन गर्ने र जान्ने ? जुन विज्ञाताले यी सबैलाई जान्दछ, त्यस विज्ञातालाई हे मैत्रेयि ! कुन माध्यमबाट कसरी जान्ने ?

यसरी बालक ध्रुवले ५ वर्षकै उमेरमा देवर्षि नारदको उपदेश पाएर भगवान्को तपस्या गरेर दर्शन पाएका थिए। भगवान्ले आफ्नू ब्रह्ममय शङ्खले ध्रुवको गालामा छोइदिनुभएपछि ध्रुवले वसन्ततिलका छन्दका १२ श्लोकहरूद्वारा भगवान्को स्तुति गरेका थिए। यी स्तुतिपद्यहरूद्वारा ध्रुवले सगुण तथा साकार भगवान्को स्तुति गरेकोजस्तो देखिए तापनि उनले यी स्तुतिपद्यहरूद्वारा निर्गुण ब्रह्मको स्तुति गरेका छन्। यी सबै स्तुतिपद्यहरू उपनिषद्का गहन अर्थले आप्लावित भएका देखिन्छन्।

ध्रुवले आफ्नू स्तुति साकार तथा सगुण ब्रह्मबाट शुरु गरेर निराकार तथा निर्गुण ब्रह्ममा पुगेर आफ्नू स्तुतिलाई पर्यवसित गरेका छन्। उनी स्थूलबाट सूक्ष्म र सूक्ष्मबाट सूक्ष्मतरमा प्रवेश गरेर अन्त्यमा निरतिशय र निर्विशेष ज्ञेयब्रह्मको उनले स्तुति गरेका छन्। शुरुमा निष्कामभावबाट शुरु भएको ध्रुवको स्तुति अन्त्यमा गएर सकामभावमा समाप्त हुनपुगेको देखिन्छ। त्यसैकारण नै ३६ हजार वर्षसम्म संसारको दुश्चक्रमा उनले घुम्नु परेको थियो। उनले भनेका पनि छन् –

**मयैतत्प्रार्थितं व्यर्थं चिकित्सेव गतायुषि।**
**प्रसाद्य जगदात्मानं तपसा दुष्प्रसादनम्।**

**भवच्छिदमयाचेऽहं भवं भाग्यविवर्जितः ॥**
**स्वाराज्यं यच्छतो मौढ्यान्मानो मे भिक्षितो बत ।**
**ईश्वरात्क्षीणपुण्येन फलीकारानिवाधनः ॥**

अर्थात् *(ध्रुव मनमनै भन्दछन्)* भगवान्लाई खुसी पार्न अत्यन्त नै मुश्किल पर्दछ । तिनै भगवान्लाई तपस्याद्वारा खुशी पारेर पनि म अभागीले भगवान्सँग तुच्छ कुरा माग्न पुगेँ । त्यसरी माग्नुभनेको आयु समाप्त भइसकेको मान्छेको चिकित्सा गर्नु जस्तै हो । म अत्यन्त भाग्यहीन मान्छे हुँ । किनभने जसरी कुनै गरीबले चक्रवर्ती सम्राट्लाई खुशी पारेर भूससहित चामलको याचना गर्दछ । त्यसैगरेर मैले पनि मोक्षप्रदाता भगवान्सँग मोक्ष नमागेर मूर्खतावश यस असार तथा दुःखद संसारको भोगको तुच्छ याचना गरेँ । अस्तु । श्रीकृष्णार्पणमस्तु ।

*(श्रीमद्भागवतमहापुराणचतुर्थस्कन्धको नवौँ अध्यायमा आधारित)*

# भिक्षुगीता

भगवान् श्रीकृष्णले उद्धवलाई प्राचीन समयमा उज्जैनमा बस्ने एकजना तितिक्षु ब्राह्मणको कथा ल्याएर भागवतमा सुनाउनु भएको थियो । त्यही कथालाई यहाँ सङ्क्षिप्तरूपमा प्रस्तुत गरिएकोछ ।

उज्जैननगरमा बस्ने एकजना कदर्यब्राह्मणले खेती र व्यापार गरेर प्रशस्त धन कमाएका थिए । उनी क्रोधी र अत्यन्त लोभी पनि थिए । उनी आफ्नू सम्पत्ति धर्मकार्यमा पनि लगाउँदैनथे, अरूलाई पनि दिँदैनथे र आफू पनि उपभोग गर्दैनथे । आफ्ना परिवारजन, इष्टमित्र, राजा र देवता समेत उनीसँग रिसाएका थिए । उनको सम्पत्ति अन्त्यमा गएर केही आफ्नै कुटुम्बजनले, केही चोरले र केही सरकारले पनि अपहरण गरेका थिए । बाँकी रहेको दैवीप्रकोपसमेतबाट नष्ट भएको थियो ।

त्यसरी कदर्यब्राह्मणको धनसम्पत्ति नष्ट भएको थियो । अन्त्यमा उनी आफ्नै परिवारजनबाट पनि उपेक्षित भएका थिए । उनलाई अन्त्यमा वैराग्य उत्पन्न भएको थियो । उनी संसारबाट विरक्त भएर अवधूतभेषमा हिँडेका थिए । उनी मधुकरी वृत्तिद्वारा आफ्नू जीवन निर्वाह गर्दै घुम्ने गर्दथे । तर उनको पुरानू चरित्रले गर्दा दुष्टहरूबाट उनले सर्वत्र अपहेलित र ताडित हुनु परेको थियो । उनमा संसारप्रति उपेक्षाभाव र तीव्र वैराग्य आइसकेको हुँदा ती सबै प्रकारका कष्टहरूलाई उनले शान्तभावले सहेका थिए । अन्त्यमा अत्यन्त विरक्त भएर उनले गीत गाएका थिए । त्यही गीतलाई यहाँ भिक्षुगीता भनिएको हो । जसलाई गाथा पनि

भनिन्छ। गाथा भन्नाले **'स्वपरोपदेशमयं वाक्यसमूहम्'** लाई भनिन्छ। जुन गाथा १८ श्लोकहरूमा निम्न अनुसार छ।

भिक्षु भन्दछन् –

**नायं जनो मे सुखदुःखहेतुर्न देवताऽऽत्मा ग्रहकर्मकालाः।**
**मनः परं कारणमामनन्ति संसारचक्रं परिवर्तयेद् यत्॥१॥**

अर्थ – मेरा सुखदुःखका कारण मान्छे पनि होइनन्, देवता पनि होइनन्, शरीर पनि होइन, ग्रह पनि होइनन्, कर्म र काल पनि होइनन्। शास्त्रहरूले यसको कारण मनलाई नै मानेका छन्। जुन मनले संसारचक्रलाई घुमाइरहन्छ। **'मनसा ह्येव पश्यति मनसा शृणोति।'** भनेर श्रुतिले पनि भनेको छ।

**मनो गुणान् वै सृजते बलीयस्ततश्च कर्माणि विलक्षणानि।**
**शुक्लानि कृष्णान्यथ लोहितानि तेभ्यः सवर्णाः सृतयो भवन्ति॥२॥**

यो मन अत्यन्त बलवान् छ। यसै मनले नै विषयहरू, तिनका कारण गुणहरू र तिनीहरूका बीचमा सम्बन्ध राख्ने वृत्तिहरूको पनि सृजना गर्दछ। तिनै वृत्तिहरू अनुसार नै सात्त्विक, राजस र तामस गरेका विभिन्न कर्महरू मानिसले गर्दछ। कर्म अनुसार नै जीवका विविध ऊर्ध्व गति र अधोगति समेत हुन्छन्। **'मन एव मनुष्याणां कारणं बन्धमोक्षयोः।'** भनेर शास्त्रले पनि भनेको छ।

**अनीह आत्मा मनसा समीहता हिरण्मयो मत्सख उद्विचष्टे।**
**मनः स्वलिङ्गं परिगृह्य कामान् जुषन् निबद्धो गुणसङ्गतोऽसौ॥३॥**

अर्थ – मनले नै सम्पूर्ण चेष्टाहरू गर्दछ। मनसँग रहेर पनि आत्मा निष्क्रिय छ। ऊ ज्ञानशक्ति प्रधान हो। ऊ जीवको सनातन साथी हो। ऊ अलुप्तज्ञानद्वारा सम्पूर्ण गतिविधिहरूलाई हेरिरहन्छ। मनको माध्यमले नै ऊ सबै कुरा अभिव्यक्त गर्दछ। मनलाई

स्वीकार गरेर ऊ विषयको भोक्ता बन्दछ, तब जीव कर्मका आसक्तिले बन्धनमा पर्दछ। अन्तःकरणका साथ चिदाभासको अध्यास भएको कारणले नै अभोक्ता जीवात्मा भोक्ता बन्दछ, अकर्ता जीवात्मा कर्ता बन्दछ र अप्रमाता जीवात्मा प्रमाता बन्दछ। यसरी शुद्ध चैतन्यआत्मा जड बुद्धिका साथ अध्यास भएर अविद्या, काम र कर्मको दुश्चक्रमा परेर संसारमा घुमिरहन्छ।

**दानं स्वधर्मो नियमो यमश्च श्रुतं च कर्माणि च सद्व्रतानि।**
**सर्वे मनोनिग्रहलक्षणान्ताः परो हि योगो मनसः समाधिः॥४॥**

अर्थ – दान, स्वधर्मपालन, नियम, यम, वेदाध्ययन, सत्कर्म र ब्रह्मचर्य समेतका सम्पूर्ण सद्व्रतहरूको अन्तिम फल भनेको मनको निग्रह नै हो। मनलाई एकाग्र गराएर भगवान्मा लगाउनु नै हो। मनलाई समाहित गर्नु परम योग वा समाधि हो। उपनिषद्ले भनेको पनि छ – **'तमेतं वेदानुवचनेन ब्राह्मणा विविदिषन्ति यज्ञेन दानेन तपसानाशकेन।'** *(बृ.उ.४।४।२२)* अर्थात् त्यस आत्मालाई ब्राह्मणहरू वेदको स्वाध्याय, यज्ञ, दान र निष्काम तपको माध्यमबाट जान्ने इच्छा गर्दछन्।

**समाहितं यस्य मनः प्रशान्तं दानादिभिः किं वद तस्य कृत्यम्।**
**असंयतं यस्य मनो विनश्यद् दानादिभिश्चेदपरं किमेभिः॥५॥**

अर्थ – जसको मन शान्त र समाहित छ, त्यसलाई दान आदि सम्पूर्ण सत्कर्महरूको फल प्राप्त भइसकेको छ। उसले प्राप्त गर्नुपर्ने अरू केही बाँकी छैन। जसको मन चञ्चल छ, विक्षिप्त छ र आलस्ययुक्त छ उसले दानादि शुभकर्मको फल प्राप्त गर्न सक्तैन। शास्त्रले पनि **'ज्ञाने सर्वं समाप्यते।'** भनेर भनेको छ।

**मनोवशेऽन्ये ह्यभवन् स्म देवा मनश्च नान्यस्य वशं समेति।**

**भीष्मो हि देवः सहसः सहीयान् युञ्जाद् वशे तं स हि देवदेवः ॥६॥**

अर्थ – सबै इन्द्रियहरू मनका वशमा छन् । मन भने कुनै पनि इन्द्रियका वशमा छैन । यो मन बलवान् भन्दा पनि बलवान् अत्यन्त भयङ्कर देव हो । जसले यस भयङ्कर देवलाई आफ्ना वशमा गर्न सक्तछ, त्यो नै देवको पनि देव हो । त्यो सबै इन्द्रियहरूको विजेता हो । श्रुतिले भनेको पनि छ – **'मनसो वशे सर्वमिदं बभूव नान्यस्य मनो वशमन्वियाय । भीष्मो हि देवः सहसः सहीयान् ।'** त्यसैगरेर पुराणमा पनि भनिएको छ – **'स ज्ञेयो भगवान्विष्णुर्मनो यस्य वशे स्थितम् ।'**

**तं दुर्जयं शत्रुमसह्यवेगमरुन्तुदं तन्न विजित्य केचित् ।**
**कुर्वन्त्यसद्विग्रहमत्र मर्त्यैर्मित्र्याण्युदासीनरिपून् विमूढाः ॥७॥**

अर्थ – मन अत्यन्त ठूलो शत्रु हो । यसको आक्रमण असह्य हुन्छ । यसले शरीरका बाहिर र भित्र सबैतर्फ हमला गर्दछ । यसलाई विजय गर्न मुश्किल पर्दछ । केही मूर्ख मानिसहरू आफ्नै मनलाई जित्नेतर्फ नलागेर शुष्कवैरभावद्वारा कसैलाई मित्र, कसैलाई तटस्थ र कसैलाई शत्रु बनाउँछन् ।

**देहं मनोमात्रमिमं गृहीत्वा ममाहमित्यन्धधियो मनुष्याः ।**
**एषोऽहमन्योऽयमिति भ्रमेण दुरन्तपारे तमसि भ्रमन्ति ॥७॥**

अर्थ – त्यसरी मान्छे अन्धो भएर मनले कल्पना गरेको आफ्नू मायिक शरीरलाई म र आफ्ना स्त्रीपुत्रादिलाई मेरा भन्दछ । यसैका दुश्चक्रमा परेर म यो हुँ र यो अर्को हो भन्ने ऊ भेददृष्टि राख्तछ । यस दुरन्त अहन्ता र ममताको जालोमा फसेर ऊ अनन्तकालसम्म अज्ञानरूपी अन्धकारमा नै घुमिरहन्छ । यसबारेमा वेदस्तुतिमा भनिएको छ – **'सदिव मनस्त्रिवृत्त्वयि**

**विभात्यसदामनुजात् ।'**

**जनस्तु हेतुः सुखदुःखयोश्चेत् किमात्मनश्चात्र ह भौमयोस्तत् ।**
**जिह्वां क्वचित् संदशति स्वदद्भिस्तद्वेदनायां कतमाय कुप्येत् ॥८॥**

अर्थ – मान्छेलाई नै यदि सुखदुःखको कारण मान्ने हो भने पनि आत्मासँग त्यसको कुनै सम्बन्ध देखिँदैन । शरीरलाई सुखदुःख पुऱ्याउने पनि पार्थिव तत्त्व हो र भोग्ने पनि पार्थिवतत्त्व नै हो । खाना खाँदाखेरि यदि आफ्नै दाँतले आफ्नै जिब्रोलाई टोकेर दुख्यो भने कसलाई दोष दिने ? शास्त्रहरूमा भनिएको पनि छ – **'भोक्तृत्वे सुखदुःखानां पुरुषं कारणं विदुः ।'**

**दुःखस्य हेतुर्यदि देवतास्तु किमात्मनस्तत्र विकारयोस्तत् ।**
**यदङ्गमङ्गेन निहन्यते क्वचित् क्रुध्येत कस्मै पुरुषः स्वदेहे ॥८॥**

अर्थ – केही गरी देवताहरूलाई नै दुःखको कारण मान्ने हो भने पनि यसबाट आत्मालाई कुनै प्रकारको हानि हुँदैन । प्रत्येक इन्द्रियका अधिष्ठातृ देवताहरू भोक्ता हुन्छन् । जति देवताहरू एक व्यक्तिका शरीरमा बस्तछन्, तिनै देवताहरू अरूहरूका शरीरमा पनि बस्तछन् । यस अवस्थामा तिनै देवताहरूले आफैँले आफैँलाई दुःख दिन्छन् भने कोसँग क्रोध गर्ने वा रिसाउने ? शास्त्रहरूमा – **'देवाः सत्त्वं परिणतास्तमो दैत्या रजो नराः ।'** भनिएको हुँदा देवताहरूबाट पनि दुःख प्राप्त हुने देखिँदैन ।

**आत्मा यदि स्यात् सुखदुःखहेतुः**
**किमन्यतस्तत्र निजस्वभावः ।**
**न ह्यात्मनोऽन्यद् यदि तन्मृषा स्यात्**
**क्रुध्येत कस्मान्न सुखं न दुःखम् ॥९॥**

अर्थ – कथंकदाचित् आत्मा आफैँ नै सुखदुःखको कारण हो

भनेर भनौँ भने पनि आत्मा एउटा मात्रै भएको हुँदा आफैँले आफैँलाई दुःख दिने कुरै भएन। यदि आत्मादेखि बाहेक अर्को केही देखिन्छ भने त्यो मिथ्या हो। त्यसकारण सुख पनि छैन र दुःख पनि छैन। सबै मिथ्या हो। उपनिषद्ले भनेको पनि छ– **'नेह नानास्ति किञ्चन।'** *(बृ.उ.४।४।१९)* अर्थात् यहाँ नाना केही पनि छैन। **'न तु तद्द्वितीयमस्ति।'** *(बृ.उ.४।३।२३)* अर्थात् त्यो आत्मा बाहेक अरू केही छैन। **'एकमेवाद्वितीयम्।'** *(छा.उ.६।२।१)* अर्थात् एक नै अद्वितीय हो। **'एको देवः सर्वभूतेषु गूढः।'** *(श्वेता उ.६।११)* अर्थात् सम्पूर्ण भूतमा एउटै आत्मा छ। **'यत्र त्वस्य सर्वमात्मैवाभूत्तत्केन कं पश्येत्।'** *(बृ.उ.४।५।१५)* अर्थात् जुन बेला सबै आत्मा नै हुन्छ त्यस बेला कसलाई कसले देख्ने।

**ग्रहा निमित्तं सुखदुःखयोश्चेत् किमात्मनोऽजस्य जनस्य ते वै।**
**ग्रहैर्ग्रहस्यैव वदन्ति पीडां क्रुध्येत कस्मै पुरुषस्ततोऽन्यः॥१०॥**

अर्थ – यदि ग्रहलाई सुखदुःखको कारण मान्ने हो भने पनि अजन्मा आत्मालाई यसबाट केही हानि हुँदैन। ग्रहको प्रभाव जन्ममरणशील शरीरमा पर्दछ। यसले आत्मालाई छुन सक्तैन। तब कोमाथि रिसाउने ? त्यो आत्मालाई केही कुराले पनि छुँदैन। गीतामा भनिएको पनि छ – **'नैनं छिन्दन्ति शस्त्राणि नैनं दहति पावकः। न चैनं क्लेदयन्त्यापो न शोषयति मारुतः॥'** *(गीता २।२३)*

**कर्मास्तु हेतुः सुखदुःखयोश्चेत् किमात्मनस्तद्धि जडाजडत्वे।**
**देहस्त्वचित् पुरुषोऽयं सुपर्णः क्रुध्येत कस्मै न हि कर्ममूलम्॥११॥**

अर्थ – अब कर्मलाई नै सुखदुःखको कारण मान्ने हो भने पनि कर्मले आत्मालाई छुन सक्तैन। त्यसले चिज्जडरूपलाई मात्रै छुन्छ। शरीर अचेतन हो र यसमा पक्षीरूपले रहने आत्मा सर्वथा निर्विकार

हो । यसरी विचार गर्दा कर्मको सुखदुःखमा कुनै हात नै छैन । अतः क्रोध कोसँग गर्ने ? जीवात्मा र साक्षीचैतन्यलाई उपनिषद्मा एउटा वृक्षमा बसेका दुई पक्षीहरूका रूपमा चित्रित गरिएको छ– **'द्वा सुपर्णा सयुजा सखाया समानं वृक्षं परिषस्व जाते ।'** *(श्वे.उ. ४।६)* त्यसै गरेर त्यसै उपनिषद्मा साक्षीलाई **'एको देवः सर्वभूतेषु गूढः सर्वव्यापी सर्वभूतान्तरात्मा । कर्माध्यक्षः सर्वभूताधिवासः साक्षी चेता केवलो निर्गुणश्च ॥'** पनि भनिएको छ ।

**कालस्तु हेतुः सुखदुःखयोश्चेत्**
**किमात्मनस्तत्र तदात्मकोऽसौ ।**
**नाग्नेर्हि तापो न हिमस्य तत् स्यात्**
**कुध्येत कस्मै न परस्य द्वन्द्वम् ॥१२॥**

अर्थ – काललाई नै सुखदुःखको कारण पनि मान्न मिल्दैन । किनभने काल ता आत्मस्वरूप नै हो । भगवान् श्रीकृष्णले गीतामा **'कालोऽस्मि लोकक्षयकृत्प्रवृद्धो लोकान्समाहर्तुमिह प्रवृत्तः ।'** *(गीता ११।३२)* भन्नु भएको छ । जसरी अग्निले अग्निलाई जलाउँदैन र हिउँले हिउँलाई गलाउँदैन । त्यसैगरेर आत्मस्वरूप कालले आफैँलाई सुखदुःख दिँदैन । आत्मा सुखदुःख, चिसो तातो आदि द्वन्द्वभन्दा माथि छ । अतः कोसँग रिसाउने ?

**न केनचित् क्वापि कथञ्चनास्य**
**द्वन्द्वोपरागः परतः परस्य ।**
**यथाहमः संसृतिरूपिणः स्या–**
**देवं प्रवुद्धो न बिभेति भूतैः ॥१३॥**

अर्थ – आत्मा प्रकृतिको अर्थात् मायाको स्वरूप, धर्म, कार्य, लेश, सम्बन्ध र गन्धबाट पनि रहित छ । उसलाई कहिल्यै,

कसैबाट र कुनै प्रकारको द्वन्द्वले छुन सक्तैन । यसले त जन्ममृत्युका दुश्चक्रमा घुमिरहने अहंलाई मात्रै छुन सक्तछ । जसले यस कुरालाई राम्रोसँग जानेको छ । त्यो कुनै पनि भयबाट भयभीत हुँदैन । उपनिषद्ले भनेको पनि छ– **'न बिभेति कुतश्चनः ।'**

> **एतां स आस्थाय परात्मनिष्ठा–**
> **मध्यासितां पूर्वतमैर्महर्षिभिः ।**
> **अहं तरिष्यामि दुरन्तपारं**
> **तमो मुकुन्दाङ्घ्रिनिषेवयैव ।।१४।।**

अर्थ – पहिलेका ठूलाठूला ऋषिमुनिहरूले यस परमात्मनिष्ठाको आश्रय लिएका थिए । म पनि यसै मार्गको अनुसरण गर्दछु । भगवान्का चरणकमलको सेवाद्वारा नै म यस दुरन्त अज्ञानमय भवसागरबाट सजिलैसँग तरेर पार हुनेछु ।

वास्तवमा सुखदुःख बाहिरबाट अरूले दिइने कुरा नभएर यी अन्तःकरणका धर्महरू हुन् । सुखदुःख प्रारब्ध कर्मबाट प्राप्त हुन्छन् । प्राणीले आफ्नै कर्मले सुख र दुःख आर्जन गर्दछ । यसमा अरूलाई दोष दिन मिल्दैन भन्ने भिक्षुगीताको तात्पर्य हो । शास्त्रहरूमा प्रष्टसँग भनिएको पनि छ । जस्तै – **सुखस्यदुःखस्य न कोऽपि दाता परोददातीति कुबुद्धिरेषा । अहं करोमीति वृथाभिमानः स्वकर्मसूत्रे ग्रथितो हि लोकः ।।** अर्थात् सुख र दुःखको दाता कोही पनि हुँदैन । अरूले दिन्छ भन्नु कुबुद्धि हो । म गर्छु भन्नु व्यर्थको अभिमान हो । वास्तवमा आफूले गरेका राम्रा नराम्रा कर्महरूबाटै सुख र दुःखहरू प्राप्त हुन्छन् । अस्तु । श्रीकृष्णार्पणमस्तु ।

*(श्रीमद्भागवतमहापुराणको एकादशस्कन्धको २३ औँ अध्यायमा आधारित)*

# जाग्रत् अवस्था

जाग्रत् शब्द पाणिनीय कौमुदीको अदादिप्रकरणमा रहेको जागृ निद्राक्षये धातुबाट शतृ प्रत्यय भएर बन्दछ। यो शब्द अवस्थाको अगाडि लागेपछि जाग्रद् अवस्था भनेर भनिन्छ। यो अवस्था स्वप्न, सुषुप्ति र समाधिको अवस्थाभन्दा भिन्नै अवस्था हो। यस अवस्थामा इन्द्रिय र विषयको प्रत्यक्ष सम्बन्ध भएर व्यवहार हुन्छ। प्राणीले आफ्नू प्रारब्ध अनुसार भोग गर्ने अवस्था यही जाग्रद् अवस्था नै हो। जाग्रत्कालका अनुभवहरूलाई वासना या संस्कारका रूपमा सङ्गृहीत भएर सपनामा मनले मनोमय वा मायामय संसार सिर्जना गरेर भोग गर्दछ। सुषुप्तिकाल घोरअन्धकारको साक्षीद्वारा आनन्दको अनुभव हुन्छ। समाधि अवस्था त्रिपुटीरहितको अवस्था भएको हुँदा त्यस समयमा बाहिरी संसारको अनुभव कत्ति पनि हुँदैन। सुषुप्तिअवस्था अचेतको अवस्था हो भने समाधि सचेतनाको अवस्था हो।

जाग्रत्कालका सम्बन्धमा आद्यजगद्गुरु श्रीशङ्कराचार्यले तत्त्वबोधमा उल्लेख गर्नुभएको छ – **'श्रोत्रादिज्ञानेन्द्रियैः शब्दा-दिविषयैश्च ज्ञायते इति यत् सा जाग्रदवस्था। स्थूलशरीरा-भिमानी आत्मा विश्व उच्यते।'** अर्थात् श्रवण आदि पाँच ज्ञानेन्द्रियहरूले शब्द आदि पाँच विषयहरूको प्रत्यक्ष ज्ञान गराउने अवस्था नै जाग्रत् अवस्था हो। जाग्रत् अवस्थामा नै प्राणीले आफ्ना शुभकर्मद्वारा अर्थात् प्रारब्धद्वारा प्राप्त शरीरमा रहेर भोग गर्दछ। भोगको आयतन पञ्चमहाभूतबाट बनेको शरीर हो। भोगका

साधनहरू इन्द्रियहरू हुन्। यही कुरा तत्त्वबोधमा व्यक्त गरिएको छ – **'पञ्चीकृतपञ्चमहाभूतैःकृतं सत्कर्मजन्यं सुखदुःखादि भोगायतनं शरीरम्, भोगसाधनं पञ्चज्ञानेन्द्रियाणि, पञ्चकर्मेन्द्रियाणि, पञ्चप्राणादयः, मनश्चैकम्, बुद्धिश्चैका।'**

यसरी प्रारब्धकर्मबाट प्राप्त यस शरीरमा रहेर सुखदुःखादि भोग्दै यस संसारको दुश्चक्रबाट सधैँकालागि मुक्त हुने कर्म पनि मान्छेले गर्नसक्तछ। मुक्त हुनेतर्फ नलागेर फेरि अर्को जन्ममा पनि चौरासी लाख योनिमा आएर कहिल्यै पनि पार पाउन नसकिने दुश्चक्रमा फस्ने काम पनि गर्नसक्तछ। यसै जाग्रत् अवस्थामा नै गुरुबाट वेदान्तको श्रवण, मनन र निदिध्यासन गरेर ब्रह्मज्ञान प्राप्तगर्नसक्तछ। यस जीवनमा पनि मान्छेले मुक्तिको मार्ग खोलेन भने ऊ आत्मघाती हो। शास्त्रहरूले यही कुरा भनेका छन् – **'तांस्ते प्रेत्याभिगच्छन्ति ये के चात्महनो जनाः।'** *(ईशावास्योपनिषद् २।३)*

भागवतमा पनि यही कुरा भनिएको छ। जस्तै – **'पुमान् भवाब्धिं न तरेत् स आत्महा।'** *(भागवत ११।२०।१७)* अर्थात् प्रारब्ध राम्रो भएर जीवले मानिसको दुर्लभ शरीर पाएको छ। भगवान्को कृपा र गुरुको कृपा पनि पाएको यस बेलामा पनि यदि मान्छेले यस संसाररूपी दुस्तर समुद्रबाट तर्ने काम गर्न सकेन भने त्यो आत्मघाती हो।

जाग्रत्, स्वप्न र सुषुप्ति अवस्थाको भिन्नता देखाउँदै उपनिषद् भन्दछ – **'यत्र वा अन्यदिव स्यात् तत्रान्योऽन्यत् पश्येदन्योऽन्यज्जिघ्रेदन्योऽन्यद् रसयेदन्योऽन्यद् वदेदन्योऽन्य-च्छृणुयादन्योऽन्यन्मन्वीतान्योऽन्यत् स्पृशेदन्योऽन्यद् विजानीयात्।'** (बृ.उ.४।३।३१) अर्थात् जाग्रत् र स्वप्नावस्थामा यो संसार आत्माभन्दा

भिन्नै अरू जस्तो देखिन्छ। जहाँ एकले अर्कोलाई देख्तछ। जहाँ एकले अर्कोलाई सुँघ्दछ। एकले अर्कालाई चाख्तछ। एकले अर्कासँग बोल्दछ। एकले अर्कालाई सुन्न सक्तछ। एकले अर्कालाई मनन गर्दछ। एकले अर्कालाई छुन्छ। एकले अर्कालाई जान्दछ।

जाग्रत् अवस्थामा इन्द्रियहरूको तत्तत् इन्द्रियहरूका विषयहरूसँग साक्षात् सम्बन्ध हुन्छ। तर सपनामा त्यस्तो हुँदैन। केवल संस्कारबाट नै सबै काम चल्दछ। सुषुप्तिमा अविद्या वा अज्ञानको घोरअन्धकारमा जीवात्मा वा चिदाभास अन्तःकरण र इन्द्रियहरू सहित विलीन हुन्छ। प्राणले शरीरलाई संरक्षण गरेर राख्तछ र साक्षीचैतन्यले अरू अवस्थालाई सरह यस सुषुप्ति अवस्थालाई पनि हेरिरहेको हुन्छ। जाग्रत् अवस्थाको र अरू दुई अवस्थाहरूका बीचको यही भिन्नता हो।

जाग्रत् अवस्थामा चिदाभासले भोक्ता भएर गरेको भोगले परमात्मालाई सम्पृक्त गर्दैन। यही कुराको सङ्केत उपनिषद्मा गरिएको छ – **'स वा एष एतस्मिन् बुद्धान्ते रत्वा चरित्वा दृष्ट्वैव पुण्यं च पापं च पुनः प्रतिन्यायं प्रतियोन्याद्रवति स्वप्नान्तायैव।'** *(बृ.उ.४।३।१७)* अर्थात् त्यो पुरुष यस जाग्रत् अवस्थामा रमण गरेर, विहार गरेर र पाप र पुण्यलाई समेत हेरेर जुन बाटोबाट आएको थियो फेरि त्यसै बाटोबाट यथास्थान स्वप्नस्थानमा नै फर्कन्छ।

ठूलो घर भएको घरको मालिक जसरी विनारोकटोक उसको इच्छा अनुसार प्रत्येक कोठामा घुमिरहन सक्तछ। त्यसैगरेर जाग्रत् र स्वप्न दुवै अवस्थामा परमात्मा घुमिरहनसक्तछ। यसै कुरालाई श्रुतिले अर्कै उदाहरण दिएर यसरी वर्णन गरेको छ। जस्तै – **'तद् यथा महामत्स्य उभेकूले अनुसञ्चरति पूवं चापरं चैवमेवायं पुरुष**

**एतावुभावन्तावनुसञ्चरति स्वप्नान्तं च बुद्धान्तं च ।'** *(बृ.उ.३।४।१८)* अर्थात् जसरी कुनै महामत्स्य अर्थात् ठूलो माछो नदीका वारिपारिका दुवै किनारमा निर्बाध आउँने जाने गर्दछ । त्यसै गरेर यो पुरुष पनि स्वप्नस्थानमा र जागरितस्थानमा पनि निर्बाध आउँने र जाने गर्दछ ।

यसरी श्रुतिले पुरुष अर्थात् जीवात्मालाई जाग्रत् र स्वप्न दुवै स्थानमा बारम्बार विचरण गरिरहने भनेर दर्शाएको छ । यो पुरुष ती दुई अवस्थामा मात्रै घुमिरहने नभएर सुषुप्ति अवस्थामा पनि पुग्ने गर्दछ । सबै अवस्थामा अन्वयरूपमा यो विद्यमान रहन्छ । तर ती तीन अवस्था भने एक अर्कामा व्यतिरेक रहन्छन्,अर्थात् जाग्रत् अवस्थामा स्वप्न अवस्था हुँदैन, स्वप्नावस्थामा सुषुप्ति अवस्था हुँदैन र सुषुप्ति अवस्थामा जाग्रत् अवस्था हुँदैन ।

जाग्रत् अवस्थाको महत्त्व अरू दुई अवस्थाभन्दा बढी भएको कुरा सम्पूर्ण शास्त्रहरूको अनुशीलनबाट थाहा हुन्छ । यसै कुरालाई भागवतले प्रष्टपारेको छ । जस्तै –

**यथा ह्यप्रतिबुद्धस्य प्रस्वापो बह्वनर्थभृत् ।**
**स एव प्रतिबुद्धस्य न वै मोहाय कल्पते ॥**

*– भागवत ११।२८।१४*

अर्थात् जब मान्छे सपनाको अवस्थामा रहन्छ त्यसबेला उसले नानाथरीका डरलाग्दा सपनाहरूसँग लड्नुपर्दछ । सपनाबाट उठिसकेपछि उसलाई सपनाका विपत्तिहरूले न त सताउँछन्, न त उसलाई सपनाका वस्तुहरूमा कुनै प्रकारको मोह नै हुन्छ । अस्तु । श्रीकृष्णार्पणमस्तु ।

# स्वप्न अवस्था

स्वप्न शब्द पाणिनीय व्याकरणको ञिष्वप् शये धातुबाट नक् प्रत्यय भएर बन्दछ। संस्कृत भाषामा यसलाई स्वप्न भनिन्छ भने नेपाली भाषामा सपना भनिन्छ। सपना भन्नाले सुत्नु, निदाउनु, उँघ्नु आदिलाई लिइन्छ। सपनाको खास अर्थ भने सुतेको बेलामा देखा पर्ने अनेक थरीका सम्भव असम्भव दृश्यावलीलाई लिइन्छ। मनको कल्पनालाई पनि सपना भन्ने चलन छ। त्यस्ता सपनाहरू धेरैजसो पूरा हुँदैनन्।

आद्यजगद्‌गुरु श्रीशङ्कराचार्यले स्वप्न अर्थात् सपनाको सङ्क्षिप्त परिचय तत्त्वबोधमा दिनु भएको छ। जस्तै – **'स्वप्नावस्था का इति चेत् जाग्रदवस्थायां यद् दृष्टं यच्छ्रुतं तज्जनितवासनया निद्रासमये यः प्रपञ्चः प्रतीयते सा स्वप्नावस्था। सूक्ष्मशरीराभिमानी आत्मा तैजस इति उच्यते।'** स्वप्नावस्था कुन हो ? भन्ने जिज्ञासामा जाग्रत्‌कालमा जे देखिन्छ, जे सुनिन्छ त्यसबाट उत्पन्न भएको वासना नै अन्तःकरणमा संस्कारका रूपमा रहन्छ। त्यही संस्कार नै सपनाका अवस्थामा प्रपञ्चका रूपमा देखापर्दछ। यसैलाई सपना भनिन्छ। यो अन्तःकरणयुक्त सूक्ष्मशरीरले अनुभव गर्दछ। सपनाको अभिमानी व्यष्टि आत्मालाई तैजस भनिन्छ। जाग्रद् अवस्थामा पूर्ण हुन नसकेका अतृप्त कामनाहरू सपनामा पूर्ण हुन्छन्। सपनाका बारेमा हाम्रा वेद, उपनिषद्, पुराणदेखि लिएर विभिन्न शास्त्रहरूमा उल्लेख गरेको पाइन्छ। सपनाका शुभफल र अशुभफलको समेत विस्तृत विवरण शास्त्रहरूमा पाइन्छन्। सपनामा देखिएका कुराहरू

अनुभव गरिएका, नगरिएका, भविष्यमा आइपर्न सक्ने र पूर्वजन्ममा अनुभव गरिएका कुराहरू पनि देखा पर्दछन् भन्ने कुरा शास्त्रहरूमा उल्लेख भएको पाइन्छ। सपनाको कुरामा अन्धविश्वासको ठूलो हात रहेको देखिन्छ। सपनाका बारेमा पश्चिमी जगत्का अनुसन्धाताहरूले पनि अनुसन्धानपूर्ण ग्रन्थहरू प्रकाशन गरेका छन्। संसारका सबै भागका सभ्य वा पिछडिएका समाजका व्यक्तिहरूमा आफ्नू चेतनाको स्तर, विश्वास, धारणा, धर्म, संस्कृति र परम्परा अनुसार पनि सपनामा देखिएका कुराहरूको विश्लेषण गर्ने चलन छ।

सपनाका सम्बन्धमा उपनिषद्ले के भनेको छ ? त्यतातिर विचार गरौँ – **'स हि स्वप्नो भूत्वा ध्यायतीव लेलायतीव'** *(बृ.उ.४।३।७)* उही आत्मा स्वप्नरूप हुन्छ र ध्यान गरेझैँ गर्दछ अनि चेष्टा गरेझैँ गर्दछ। माथि भनेजस्तो स्वप्नावस्थामा मनबाट सञ्चालित संस्कारबाहेक अरू कुनै वस्तु हुँदैन। वस्तु केही नभएता पनि मायामय विचित्रको संसार सपनामा देखिन्छ। त्यो सबै तैजस मनको नै सृजना हो। सोही कुरा श्रुतिले पनि भनेको छ– **'न तत्र रथा न रथयोगा न पन्थानो भवन्त्यथ रथान् रथयोगान् पथः सृजते।'** *(बृ.उ.४।३।१०)* अर्थात् स्वप्नावस्थामा रथ पनि हुँदैनन्। रथमा जोतिने घोडाहरू पनि हुँदैनन् र रथ हिँड्ने बाटो पनि हुँदैन। तर पनि रथ, रथमा जोतिने घोडा र बाटोको समेत मनले रचना गर्दछ। यसै कुरालाई माण्डूक्यकारिकामा यसरी वर्णन गरिएको छ। जस्तै –

**अभावश्च रथादीनां श्रूयते न्यायपूर्वकम्।**
**वैतथ्यं तेन वै प्राप्तं स्वप्न आहुः प्रकाशितम्॥**

अर्थात् श्रुतिमा पनि रथादिको अभाव युक्तिपूर्वक सुनिएकोछ। सिद्ध भएको मिथ्यालाई नै सपनाले पनि प्रमाणित गरेकोछ।

**अन्तःस्थानात्तु भेदानां तस्माज्जागरिते स्मृतम् ।**
**यथा तत्र तथा स्वप्ने संवृतत्त्वेन भिद्यते ॥**

यसैबाट जाग्रत् अवस्थामा पनि पदार्थहरूको मिथ्यात्व देखिन्छ । किनभने जसरी ती पदार्थहरू स्वप्नावस्थामा मिथ्या हुन्छन्, त्यसैगरी जाग्रत् अवस्थामा पनि मिथ्या ठहरिन्छन् । खालि शरीरका भित्र रहनु र स्थानको सीमितता हुनुमामात्र भिन्नता देखिन्छ । जस्तै –

**स्वप्नजागरितस्थाने ह्येकमाहुर्मनीषिणः ।**
**भेदानां हि समत्वेन प्रसिद्धेनैव हेतुना ॥**

अर्थात् यसप्रकारको प्रसिद्ध हेतुबाट नै जाग्रत् र सपनाका पदार्थहरूमा समानता भएको कारण विवेकी पुरुषहरूले सपना र जागरित अवस्थालाई एकै हो भनेका छन् ।

सपनाका विषयमा अर्को उपनिषद्ले यसभन्दा पनि अझ बढी व्याख्या गर्दै भनेको छ । जस्तै –**'स्वप्नेन शारीरमभिप्रहत्या सुप्तः सुप्तानभिचाकशीति ।'** *(बृ.उ.४।३।११)* अर्थात् आत्मा सपनाको माध्यमबाट शरीरलाई निश्चेष्ट पारेर आफू नसुतीकन सुतेका सारा पदार्थहरूलाई प्रकाशित गर्दछ । त्यस अवस्थाको अझ अतिरञ्जनापूर्णरूपमा श्रुतिले वर्णन गरेको छ । जस्तै – **'स्वप्नान्त उच्चावचमीयमानो रूपाणि देवः कुरुते बहूनि । उतेव स्त्रीभिः सह मोदमानो जक्षदुतेवापि भयानि पश्यन् ॥'** *(बृ.उ.४।३।१२)* अर्थात् त्यो आत्मा स्वप्नावस्थामा ऊँच र नीच भावमा पुगेर नानाथरीका रूपहरू निर्माण गर्दछ । त्यसरी निर्माण गरेपछि ऊ स्त्रीहरूका साथ आनन्द मनाउँछ, हाँस्तछ र कुनै बेला भयद्वारा आक्रान्त पनि हुन्छ ।

सपनाकै विषयमा छान्दोग्योपनिषद्ले केही भिन्न शैलीमा उल्लेख गरेकोछ । जस्तै – **'य एष स्वप्ने महीयमानश्चरत्येष आत्मेति**

**होवाचेतदमृतमभयमेतद्ब्रह्मेति ।'** *(छा.उ.८।१०।१)* अर्थात् सपनामा पूजित भए जस्तो गरेर जुन घुम्दछ, त्यो नै बह्म हो । यस श्रुतिको भनाइ के हो भने, सपनामा साक्षीचैतन्यका रूपमा र अरू अवस्थामा पनि विद्यमान रहने आत्मा नै ब्रह्म हो ।

सपनाका सम्बन्धमा प्रश्नोपनिषद्ले पनि व्याख्या गरेको छ । जस्तै – **'अत्रैष देवः स्वप्ने महिमानमनुभवति । यद्दृष्टं दृष्टमनुपश्यति श्रुतं श्रुतमेवार्थमनुश्रृणोति । देशदिगन्तरैश्च प्रत्यनुभूतं पुनः पुनः प्रत्यनुभवति दृष्टं चादृष्टं च श्रुतं चाश्रुतं चानुभूतं चाननुभूतं च सच्चासच्च सर्वं पश्यति सर्वः पश्यति ।'** *(प्र.उ.४।५)* अर्थात् यस स्वप्नावस्थामा त्यो आत्मा आफ्ना विभूतिको अनुभव गर्दछ । यसले जाग्रत् अवस्थामा जे जे देखेको हुन्छ त्यसैलाई सपनामा देख्तछ । जे सुनेको हुन्छ त्यही सुन्दछ । दिशाविदिशामा अनुभव गरेका कुराहरूको नै अनुभव गर्दछ । देखे नदेखेको, सुने नसुनेको, अनुभव गरे नगरेको र सत् असत् सबै प्रकारका पदार्थलाई ऊ देख्तछ । आफैँ पनि सर्वरूप भएर देख्तछ ।

यसरी विभिन्न श्रुतिहरूले सपनाका बारेमा विभिन्न प्रकारले व्याख्या गरेका छन् । सपनाको खास आफ्नू अस्तित्व नभएर जाग्रत् अवस्था आदिका अनुभवहरू नै संस्कारात्मना सपनामा देखा पर्दछन् । त्यसको अनुभव साक्षीचैतन्यको सहयोगमा बुद्ध्युपहित चेतनले नै गर्दछ ।

शास्त्रहरूले स्वप्नलाई खास महत्त्व दिएको देखिँदैन । जाग्रत् अवस्था प्राणीमात्रकालागि विशेष महत्त्वको छ । सम्पूर्ण जीवको चक्र यसै अवस्थाबाट नै चलेको छ । जीवन भन्नु नै जाग्रत् अवस्था हो । सम्पूर्ण पुरुषार्थ को साधना यसै अवस्थामा नै गरिन्छ । माथि र तल जाने सबै सुकृत र कुकृतकर्महरू पनि यसै जाग्रत् अवस्थामा

नै गरिन्छन् । त्यसपछि जीवनमा सुषुप्ति अवस्थाको महत्त्व आउँछ । सुषुप्ति अवस्थाले प्राणीमात्रलाई पुनर्जीवन दिन्छ र मुमुक्षुकालागि ब्रह्मानन्दको अनुभूति पनि गराउँछ। यसलाई श्रुतिले **'ब्रह्म पुच्छं प्रतिष्ठा'** भनेर संज्ञा दिएको छ। तर स्वप्नलाई भने कुनै पनि शास्त्रले महत्त्व दिएको देखिँदैन। झूटो र हुनै नसक्ने कुराको उदाहरण दिनु पर्‍यो भने सपनाको उदाहरण दिइन्छ। श्रीमद्भागवतमहापुराणमा सपनालाई यसै कोटिमा राखेर धेरै ठाउँमा व्याख्या गरेको पाइन्छ। जस्तै –

**देहोऽपि दैववशगः खलु कर्म यावत्**
**स्वारम्भकं प्रतिसमीक्षत एव सासुः ।**
**तं सप्रपञ्चमधिरूढसमाधियोगः**
**स्वप्नं पुनर्नभजते प्रतिबुद्धवस्तुः ॥**

*– भागवत ३।२८।३८*

अर्थात् ज्ञानीको शरीर पूर्वजन्मका संस्कारका अधीनमा हुन्छ। जबसम्म ज्ञानीको जीवनको आरम्भक प्रारब्धकर्म बाँकी रहन्छ, तबसम्म ऊ शरीर र इन्द्रियसहित बाँचिरहन्छ। सिद्ध भइसकेको ज्ञानीले आफ्ना परिवारसहित आफ्नू शरीरलाई पनि सपनाका वस्तुजस्तै ठान्दछ। जसरी सपनाबाट बिउँझिसकेको मान्छेले सपनामा देखिएका वस्तुहरूलाई सत्य मानेर फेरि खोज्दैन। त्यसैगरेर ज्ञानीले साँच्चैका वस्तुहरूलाई पनि सत्य मानेर फेरि ती वस्तुहरूमाथि ममता राख्दैन।

यसरी भागवतमा सपनालाई पूर्ण मिथ्या ठानिएको छ। मिथ्या ठानिएको सपनालाई आधार मानेर ज्ञानीहरू संसारलाई पनि मिथ्या ठान्दछन्। सपनामा अनुभव गरिएका कुराहरू सपनाबाट बिउँझेपछि जसरी मिथ्या ठहरिन्छ, त्यसैगरेर ज्ञानोत्तरकालमा अर्थात् अविद्याको

वा अज्ञानको आवरण हटिसकेपछि ब्रह्मज्ञानीलाई यो जाग्रत् संसार पनि सपना जस्तै मिथ्या प्रतीत हुन्छ। पारमार्थिक अवस्थामा यो सम्पूर्ण जाग्रत् संसार कपूर उडेझैँ उडेर समाप्त हुन्छ। अतः ज्ञानीहरू जाग्रत्काललाई सपना जस्तै मिथ्या ठानेर संसारका वस्तुहरूमा पनि ममता राख्तैनन्।

हुन त शास्त्रहरूमा सपनामा देखिएका राम्रा नराम्रा सपनाको परिणति यसै जीवनमा प्राप्त हुने कुरा उल्लेख गरिएको पाइन्छ। रावण र कंस आदिले आफ्नू अन्त्य समयमा अशुभ वा खराब सपना देखेका थिए। मृत्युको सङ्केत सपनामा उनीहरूले पाएका थिए। सपनामा दान दिने वचन दिएको घटनाबाट नै राजा हरिश्चन्द्रले जाग्रत् अवस्थामा आफ्नू सर्वस्व दान गरेर सत्यवादी राजा हरिश्चन्द्रको नामबाट उनी प्रसिद्ध भएका थिए। बाणासुरकी छोरी उषाले सपनामा देखेको आधारमा भगवान् श्रीकृष्णका नाति अनिरुद्धसँग विवाह गरेकी थिइन्। यस्ता घटनाहरूका कथा सर्वत्र पाइन्छन्। तै पनि सपना सपना नै हो, यो सत्य कत्ति गरे पनि हुन सक्तैन।

अन्त्यमा सपना मिथ्या भएको प्रसङ्ग भागवतबाटै उद्धृत गर्दै यस प्रसङ्गलाई यहीँ विराम दिन्छु। जस्तै –

**स्वप्ने यथा पश्यति देहमीदृशं मनोरथेनाभिनिविष्टचेतनः।**
**दृष्टश्रुताभ्यां मनसानुचिन्तयन् प्रपद्यते तत् किमपि ह्यपस्मृतिः॥**

*– भागवत १०।१।४१*

अर्थात् मान्छेले जाग्रत् अवस्थामा पूर्ण हुन नसकेका आफ्ना मनका कामनाहरू सपनामा देख्तछ र आफूले इच्छा गरे अनुसारको कामना पूरा गरेको अनुभव पनि गर्दछ। कहिलेकाहीँ त मान्छे जाग्रत् अवस्थामा नै दिवास्वप्न देखेर आफू त्यसैभित्र हराउँछ। सोमशर्माका पिताको कथा यसैभित्र पर्दछ। अस्तु। श्रीकृष्णार्पणमस्तु।

# सुषुप्ति अवस्था

सुषुप्ति शब्द पाणिनीय व्याकरणको अदादि प्रकरणमा रहेको सुत्नु अर्थ भएको **'ञिष्वप् शये'** धातुबाट क्तिन् प्रत्यय भएर बन्दछ। यसको सामान्य अर्थ गहिरो निद्रा अथवा गाढा निद्रा भन्ने बुझ्नु पर्दछ। अद्वैतवेदान्तमा भने यसको अत्यन्त महत्त्वपूर्ण स्थान छ। हाम्रा प्राचीन ग्रन्थहरूदेखि लिएर आधुनिक मनोविज्ञान र चिकित्साशास्त्रहरूमा समेत यसका बारेमा विशदरूपमा चर्चा भएको पाइन्छ।

अद्वैतवेदान्तमा ईश्वरकृत सृष्टि र जीवकृत सृष्टि भनेर दुईथरी सृष्टिको उल्लेख गरेको पाइन्छ। यसैलाई पञ्चदशीमा विद्यारण्य स्वामीले **'ईक्षणादिप्रवेशान्ता सृष्टिरीशेन कल्पिता। जाग्रदादिविमोक्षान्तः संसारो जीवकल्पितः ॥'** अर्थात् ईश्वरकृत सृष्टिमा ईक्षणदेखि लिएर प्रवेशसम्म र जीवकृत सृष्टिमा जाग्रत् अवस्थादेखि लिएर मोक्ष पर्यन्तलाई लिइएको छ। म यहाँ जीवकृत सृष्टिको सुषुप्ति अवस्थालाईमात्र लिएर केही चर्चा गर्न लागेको छु। यस सम्बन्धमा तत्त्वबोधमा आद्यजगद्गुरु श्रीशङ्कराचार्यले **'अहं किमपि नजानामि, सुखेन मया निद्रा अनुभूयते इति सुषुप्त्यवस्था। कारणशरीराभिमानी आत्मा प्राज्ञ इत्युच्यते।'** भनेर लेख्नुभएको छ। यसको अर्थ मैले केही पनि जानिन, म आनन्दसँग सुतें भनेर अनुभव गर्नु सुषुप्ति अवस्था हो। त्यस बेलाको कारणशरीराभिमानी आत्मा प्राज्ञ हो। ओछ्यानमा गाढा निद्रा मस्तसँग निदाएर उठेपछि मनुष्यले गरेको अभिव्यक्तिको उल्लेख उपर्युक्त अनुसार गरिएको छ।

यसै गरेर ब्रह्मसूत्रको भाष्यमा पनि श्रीशङ्कराचार्यले सुषुप्तिका सम्बन्धमा धेरै ठाउँमा उल्लेख गर्नु भएको छ । जस्तै– **‘अविद्यात्मिका हि बीजशक्तिरव्यक्तशब्दनिर्देश्या परमेश्वराश्रया मायामयी महासुषुप्तिः, यस्यां स्वरूपप्रतिबोधरहिताः शेरते संसारिणो जीवाः ।’** *(ब्र.सू. १।४।३)* अर्थात् अज्ञान वा अविद्यास्वरूपा बीजशक्तिलाई अव्यक्त शब्दले निर्वचन गरिन्छ । त्यो ब्रह्ममा आश्रित भएर रहन्छे । यही नै मायामयी महासुषुप्ति हो । यसलाई चिन्न नसक्ने अज्ञानी संसारी जीवहरू यसैमा मस्त भएर निदाउँछन् ।

सुषुप्ति भनेको पूर्णरूपमा आनन्द अनुभव गर्ने अवस्था हो । यस अवस्थालाई वेदान्तमा **ब्रह्मानन्दसहोदर** भनेर पनि भनिएको छ । अशिक्षित र साधारण मान्छेले पनि सुषुप्तिमा भएको आनन्दलाई सजिलै अनुभव गर्न सक्तछ । उसले वेदान्तशास्त्र पढिरहनु पर्दैन । यदि कुनै व्यक्तिलाई रातमा गाढा निद्रा परेन भने चिकित्सकले त्यस्ता व्यक्तिलाई रोगीको कोटिमा राखेर निद्रा लाग्ने औषधि दिएर सुताउने प्रयास गरेको पाइन्छ । गाढा निद्रा पर्नु स्वास्थ्यका लागि अति आवश्यक छ । गाढा निद्रालाई नै शास्त्रीय भाषामा सुषुप्ति भनिन्छ ।

सुषुप्तिका बारेमा चर्चा गर्दा सर्वप्रथम सो अवस्था कुन बेलामा हुन्छ ? भनेर विचार गर्नुपर्ने देखिन्छ । जाग्रत्, स्वप्न र सुषुप्तिहरू अन्तःकरणका तीन अवस्था हुन् । श्रीमद्भागवतमहापुराणमा देवर्षि नारदले धर्मराज युधिष्ठिरलाई उपदेश गर्दै भन्नु भएको छ –

**सुप्तप्रबोधयोः सन्धावात्मनो गतिमात्मदृक् ।**
**पश्यन् बन्धं च मोक्षं च मायामात्रं न वस्तुतः ॥**

*– भागवत ७।१३।५*

अर्थात् सुषुप्ति अवस्था र जाग्रत् अवस्थाको बीचमा जुन छोटो समय रहन्छ, त्यसैबेलामा मुमुक्षुले ब्रह्मको चिन्तन गर्नुपर्दछ । त्यसैबाट नै उसको मोक्ष हुन्छ । वास्तवमा जाग्रत् र सुषुप्ति भन्नु पनि मायामात्रै हो । तर योगग्रन्थले भने यसको विपरीत भनेको छ । जस्तै –

**निद्रादौ जागरस्यान्ते यो भाव उपजायते ।**
**तं भावं भावयन्नित्यं मुच्यते नेतरो यतिः ॥**

अर्थात् जाग्रत्अवस्था र सुषुप्तिअवस्थाका बीचको अमूल्य छोटो समयमा जुन मुमुक्षुले ब्रह्मचिन्तन गर्दछ, त्यसको मुक्ति हुन्छ । त्यसदेखि बाहेक अरू कुनै उपाय छैन ।

यस सम्बन्धमा एकथरीको अनुभव अनुसार सुत्ने बित्तिकै गाढा निद्रा हुने र त्यसपछिमात्रै सपना देख्ने गरेको पाइन्छ भने अर्काथरीको सुत्ने बित्तिकै सपना देख्ने र बिहानीपख उठ्ने बेलामामात्रै सुषुप्तिको अवस्था हुने भन्ने पनि अनुभव भएको पाइन्छ । दुवैथरीका भनाइहरू सत्य नै देखिन्छन् । यसको विश्लेषण गर्दा जुन व्यक्तिले दिनमा शारीरिक परिश्रम गरेको हुन्छ । त्यस्तो व्यक्ति रातको खाना खाएर सुत्ने बित्तिकै गाढा निद्रा अर्थात् सुषुप्ति अवस्थामा पुग्दछ । जसलाई सामान्य बोलचालको भाषामा भातेनिद्रा पनि भनिन्छ । त्यसपछि बिहानीपख सुषुप्ति अवस्थाबाट सपनाको अवस्थामा पुग्दछ । जुन व्यक्तिले दिनमा शारीरिक परिश्रम गरेको हुँदैन, त्यस्तो व्यक्तिले सुत्ने बित्तिकै सपना देख्न थाल्दछ र सपनाको परिश्रमले थाकेपछि प्रायः सुषुप्ति अवस्थामा जाने हुन्छ । कतिपय अस्वस्थ व्यक्तिहरू गाढा निद्रामा अर्थात् सुषुप्तिमा नै नपुगीकनै बिउँझने गर्दछन् । जुन व्यक्ति गाढा निद्रा अर्थात् सुषुप्तिमा नपुगीकनै बिउँझने गर्दछ त्यस्तो व्यक्तिले निद्राबाट बिउँझिसकेपछि

पनि आफूलाई स्वस्थ भएको अनुभव गर्दैन । जुन व्यक्ति राम्रोसँग गाढा निद्रा निदाएर बिहान बिउँझिएको हुन्छ, त्यस व्यक्तिले आफूलाई दिनभरि ताजा र स्वस्थ भएको अनुभव गर्दछ । यसमा वेदान्तको दृष्टिकोणका साथै शरीरविज्ञान र चिकित्साशास्त्रको दृष्टिकोणले पनि अध्ययन गरिएको छ ।

दिनभरि कडा परिश्रम गरेर रातमा सुतेका मानिसका शरीरका कोशिकाहरूमा क्षति पुग्ने सम्भावना रहन्छ । क्षति पुगेका कोशिकाहरूलाई प्रकृतिद्वारा मर्मत गरिने हुँदा प्रकृतिले सुतेको मानिसलाई गाढा निद्रामा पुऱ्याउने गर्दछ । गाढा निद्रामा पुगेको अवस्थामा नै उसका क्षति भएका कोशिकाहरू मर्मत गरिन्छन् र भोलिपल्ट उठेपछि ताजा भएको उसले अनुभव गर्दछ । रोगीलाई लठ्ठ्याउने पदार्थ (anesthesia) दिएर चिकित्सकले रोगीको उपचार गर्दछ । त्यसै गरेर गाढा निद्राको अवस्थामा पुऱ्याएर क्षतविक्षत कोशिकाहरूको मर्मत प्रकृतिले गर्ने गर्दछ । त्यसै सुषुप्ति अवस्थालाई परमानन्दको अवस्था भनेर शास्त्रहरूमा उल्लेख गरेको पाइन्छ ।

यही कुरा श्रीशङ्कराचार्यले उपनिषद्को भाष्यमा उल्लेख गर्नुभएको छ । जस्तै – **'कथं पुनर्लौकिकानां प्रसिद्धा स्वात्मसम्पत्ति जाग्रच्छ्रमनिमित्तोद्भवत्वात्स्वास्थ्येत्याहुः ।'** *(छा.उ. ६।८।१)* अर्थात् लौकिक पुरुषहरूलाई जाग्रत् अवस्थामा गरेका श्रमका कारणले सुषुप्ति हुन्छ र त्यसै सुषुप्ति अवस्थामा परमात्मासँग आत्माको भेट हुन्छ ।

त्यसैगरेर सुषुप्तिलाई शुक्ल यजुर्वेदीय काण्वीशाखा वाजसनेय ब्राह्मण अन्तर्गतको बृहदारण्यकोपनिषद्को तेस्रो अध्यायको प्रथम ब्राह्मणको सत्रौँ मन्त्रमा भगवान् श्रीशङ्कराचार्यले आफ्नू भाष्यमा यसरी व्याख्या गर्नु भएको छ – जुन बेला यो जीवात्मा सुतेको हुन्छ,

त्यस समयमा यो कहाँ पुग्दछ ? र सुषुप्तिबाट बिउँझिँदा त्यो कहाँबाट आउँछ ? भनेर गार्ग्य ब्राह्मणलाई राजा अजातशत्रुले ब्रह्मचर्चाका सन्दर्भमा सोधेका थिए । तर उनले जबाफ दिन नसकेपछि राजा आफैँले यसको उत्तर दिएका थिए। जुन समयमा त्यो जीवात्मा सुतेको हुन्छ। त्यस समयमा अन्तःकरणरूप उपाधि भएको विज्ञान अर्थात् अन्तःकरणमा अभिव्यक्त भएको साभास विज्ञान वागादि इन्द्रियहरूलाई साथमा लिएर हृदयको मध्यभागमा रहेको आकाशरूप परमात्मामा गएर शयन गर्दछ । विशेष विज्ञानको अभावमा पुरुष सुषुप्त हुन्छ । शरीरमा ७२००० नाडीहरू हृदयकमलबाट निःसृत भएर सम्पूर्ण शरीरभरि व्याप्त भएका हुन्छन्। यिनै नाडीहरूलाई पुरीतत् वा हीतानाडी भनेर पनि भनिन्छ। शरीरमा बुद्धितत्त्व अर्थात् अन्तःकरणको मुख्य स्थान रहेको हुन्छ। यसै बुद्धितत्त्वका अधीनमा सम्पूर्ण इन्द्रियहरू रहेका हुन्छन् । यसै बुद्धितत्त्वले श्रोत्रादि इन्द्रियहरूलाई माझीले माछा मार्ने जाल फैलाएजस्तो गरेर हजारौँ नाडीहरूद्वारा बाहिर फैलाएको हुन्छ। जाग्रत् अवस्थामा यही बुद्धितत्त्व ती सबै इन्द्रियहरूको अध्यक्ष भएर बसेको हुन्छ। त्यस बुद्धितत्त्वलाई विज्ञानमय आत्मा अर्थात् आफ्नू अभिव्यक्तस्वात्मचैतन्य प्रकाशरूपद्वारा व्याप्त गरेर बसेको हुन्छ। यो विज्ञानमय आत्मा तातो फलामका डल्लामा आगो व्याप्त भए झैँ गरेर शरीरमा व्याप्त भएर रहेको हुन्छ । जब यो सङ्कुचित हुन्छ तब यसले बुद्धि र इन्द्रियहरूसमेत सबैलाई साथैमा लिएर सङ्कुचित हुन्छ । यसैलाई सुषुप्ति भनिन्छ । सुषुप्तिकालमा विज्ञानमय आत्मा अर्थात् चिदाभासजीवात्माको शरीरसँग कुनै खालको सम्बन्ध पनि रहँदैन । विज्ञानमय प्रत्यगात्मामा अविद्याजनित अर्थात् मायिक क्रिया,

कारक र फलको सम्बन्ध रहँदैन। यसै कुरालाई श्रुतिमा **'तीर्णो ही तदा सर्वाञ्छोकान्हृदयस्य।'** *(बृ.उ.४/३/२२)* अर्थात् त्यस समयमा उसले हृदयका सम्पूर्ण शोकहरू पार गर्दछ भनेर पनि उल्लेख गरिएको छ।

यसै सुषुप्ति अवस्थालाई उपनिषद्मा यसरी उल्लेख गरिएको छ। जस्तै –

**उद्दालको हारुणिः श्वेतकेतुं पुत्रमुवाच स्वप्नान्तं मे सोम्य विजानीहीति यत्रैतत्पुरुषः स्वपिति नाम सता सोम्य तदा सम्पन्नो भवति स्वमपीतो भवति तस्मादेनं स्वपितीत्याचक्षते स्वंह्यपीतो भवति।** *(छा.उ. ६।८।१)*

अर्थात् जुन अवस्थामा यो पुरुष सुत्तछ र सुषुप्ति अवस्थामा पुग्दछ। त्यस बेला यसलाई सुतेको भनिन्छ। त्यस समयमा हे सौम्य ! यो आत्मा सत्‌ले सम्पन्न हुन्छ। यो आफ्नू स्वरूपमा प्राप्त हुन्छ। त्यसैकारण यसलाई **'स्वपिति'** भनेर भनिन्छ। किनभने त्यस बेला स्व भनेको आफैँलाई अपीत प्राप्त गर्छ भनेर अरूणाका छोरा उद्दालकले आफ्ना छोरा श्वेतकेतुलाई उपदेश गरेका थिए। यसको तात्पर्य लिङ्गोपाधिका सम्बन्धबाट निर्मित आफ्नू उपाधि विशेषरूपलाई छोडेर स्वाभाविक शुद्ध आत्मामा नै गएर यो जीवात्मा विद्यमान रहेको हुन्छ। यहाँ आकाश शब्दले भौतिक आकाशलाई नलिएर परमात्मालाई लिइएको छ। उठेपछि म आनन्दले सुतेको थिएँ र मैले केही पनि थाहा पाइन भनेर मानिसले जुन कुरा भन्दछ, सो कुरा उसलाई कसरी थाहा हुन्छ ? भन्ने सम्बन्धमा शास्त्रहरूमा प्रशस्त ऊहापोह भएको पाइन्छ। किनभने माथि उल्लेख भए अनुसार विज्ञानमय आत्मा अर्थात् चिदाभास आफ्नू आश्रय बुद्धि र

इन्द्रियहरूसमेतलाई लिएर पुरीतति नाडीको माध्यमबाट दहराकाशमा गएर परमात्मासँग एकाकार भएर आनन्दको समुद्रमा डुबुल्की मारिरहेको हुन्छ। त्यसबेला उसलाई भएको आनन्दको अनुभव बिउँझेपछि व्यक्त गर्न सक्ने उसको अवस्था देखिँदैन। तर पनि जीवात्माले सुषुप्तिमा प्राप्त गरेको आनन्द र अज्ञानको अनुभूति भने गर्दछ। करण अर्थात् साधनविना कुनै प्रकारको ज्ञान वा अनुभव हुनै सक्तैन। यस ज्ञान वा अनुभवलाई केही विद्वान्हरूले परामर्शजन्य ज्ञान भनेर पनि भनेका छन्। साक्षीचैतन्यले अनुभव गरेको कुरा जीवात्मालाई बताउनु नै परामर्श हो भनेर भनेको पाइन्छ। त्यसरी परामर्शका लागि प्रत्यक्ष वा अनुमान प्रमाणको आवश्यकता पर्दछ। सुषुप्तिका अवस्थामा यी दुवैको सम्भावना रहँदैन। साक्षीचैतन्य भने सबै अवस्थामा विद्यमान रहने हुँदा अज्ञान र आनन्दसमेतको ज्ञान उसैलाई हुने गर्दछ। यही कुरा भागवतमा पनि उल्लेख भएको पाइन्छ। जस्तै–

**भूतसूक्ष्मेन्द्रियमनोबुद्ध्यादिष्विह निद्रया।**
**लीनेष्वसति यस्तत्र विनिद्रो निरहङ्क्रियः॥**
**मन्यमानस्तदाऽऽत्मानमनष्टो नष्टवन्मृषा।**
**नष्टेऽहङ्करणे द्रष्टा नष्टवित्त इवातुरः॥**

*– भागवत ३।२७।१४,१५*

अर्थात् सुषुप्तिका समयमा शब्दादि भूतसूक्ष्म, इन्द्रिय, मन र बुद्धिसमेत अविद्यामा गएर लीन हुन्छन्। त्यस अवस्थामा साक्षीचैतन्य सर्वथा अहङ्कारशून्य भएर जागा रहेको हुन्छ। जाग्रत् अवस्थामा यो आत्मा भूतसूक्ष्मादि दृश्यवर्गका द्रष्टाका रूपमा स्पष्टतया अनुभवमा आउँछ। तर सुषुप्तिका समयमा भने उसको उपाधिभूत अहङ्कारको

नाश भएको हुँदा भ्रमवश आफू नै नाश भएजस्तै ठान्दछ । वस्तुतः त्यो साक्षीचैतन्य नै अहङ्कारसहित सम्पूर्ण तत्त्वहरूको अधिष्ठान र प्रकाशकसमेत भएर रहेको हुन्छ ।

साक्षीशब्दका सम्बन्धमा पाणिनिले आफ्नू व्याकरणमा **साक्षाद्द्रष्टरि संज्ञायाम्** भन्ने तद्धित प्रकरणको सूत्रमा साक्षाद्द्रष्टा नै साक्षी हुने कुरा उल्लेख गर्नुभएकोछ । जस्तै– **साक्षाद्द्रष्टा साक्षी** ।

कुनै पनि करण वा साधनको माध्यमविना नै साक्षीले सोझै ज्ञान गर्न सक्ने हुँदा सुषुप्तिमा भएको आनन्द र अज्ञान दुवै कुराको साक्षीले सोझै अनुभव गर्दछ । जस्तै– **'नान्यदतोऽस्ति द्रष्टृ नान्यदतोऽस्ति श्रोतृ ।'** *(बृ.उ. ३।८।११)* अर्थात् साक्षीचैतन्य बाहेक अरू कुनै पनि द्रष्टा र श्रोता छैन । यसै कुरालाई श्वेताश्वतरोपनिषद्को **'द्वा सुपर्णा'** भन्ने मन्त्रको भाष्यमा श्रीशङ्कराचार्यले **'अनश्नन्नन्यो नित्यशुद्ध–बुद्धमुक्तस्वभावः परमेश्वरोऽभिचाकशीति सर्वमपि पश्यन्नास्ते ।'** अर्थात् नित्यशुद्धबुद्धमुक्तस्वरूप परमात्मा कर्मफल नभोगेर ती सबैलाई हेरेर बसेको हुन्छ ।

साक्षीचैतन्यका बारेमा शास्त्रहरूमा **'अवेद्यत्वे सति सदा अपरोक्षत्वम्'** भनेर अत्यन्त सूत्रात्मकरूपमा परिभाषा दिएको पनि पाइन्छ । सारांशमा भन्ने हो भने सुषुप्तिबाट बिउँझिएको मानिसले साक्षीचैतन्यको माध्यमबाट सत्का साथै आनन्दको पनि अनुभव गर्दछ । **'न हि द्रष्टुर्दृष्टेविपरिलोपो विद्यतेऽविनाशित्वात् ।'** *(बृ.उ. ४।३।२३)* अर्थात् अविनाशी भएको हुँदा द्रष्टाको दृष्टि कहिल्यै पनि लोप हुँदैन ।

सुषुप्तिका बारेमा रामगीतामा पनि उल्लेख गरिएको छ । जस्तै–

**इच्छादिरागादिसुखादिधर्मिकाः सदा धियःसंसृतिहेतवःपरे ।**
**यस्मात्प्रसुप्तौ तदभावतःपरः सुखस्वरूपेण विभाव्यते हि नः ॥**

अर्थात् इच्छा, अनिच्छा, राग, द्वेष, सुख र दुःखादिरूप बुद्धिका वृत्तिहरू जन्ममरणरूप संसारका कारण हुन्। किनभने सुषुप्तिमा यिनको अभाव हुने हुँदा केवल सुखरूप आत्माको मात्रै भान हुन्छ।

सुषुप्त जीव र मुक्तपुरुषको अवस्था समान हुँदैन। सुषुप्त जीव त्यस समयमा अव्याकृत मायाको अंशभूत कारण शरीर सहित नै ब्रह्ममा पुगेको हुन्छ। बिउँझेपछि फेरि अविद्यामा नै पर्दछ। तर मुक्त पुरुष सधैँकालागि मुक्त हुन्छ।

अर्को उपनिषद्ले पनि सुषुप्तिका बारेमा उल्लेख गरेको छ – **यत्र सुप्तो न कञ्चन कामं कामयते न कञ्चन स्वप्नं पश्यति तत्सुषुप्तम् सुषुप्तस्थान एकीभूतः प्रज्ञानघन एवानन्दमयो ह्यानन्दभुक्चेतोमुखः प्राज्ञः।***(माण्डूक्योपनिषद् १।५)* अर्थात् सुतेको समयमा मान्छेले कुनै प्रकारको कामना गर्दैन र कुनै सपना पनि देख्तैन। त्यसैलाई सुषुप्ति भनिन्छ। त्यो सुषुप्ति नै जसको स्थान हो र जो एकीभूत प्रकृष्ट ज्ञानस्वरूप भएर नै आनन्दमय, आनन्दको भोक्ता र चेतोमुख नामक त्यो प्राज्ञ हो। त्यसैगरेर सुषुप्तिका सम्बन्धमा अर्को उपनिषद्ले पनि भनेको छ। जस्तै – **अत्र पिताऽपिता भवति माताऽमाता लोका अलोका देवा अदेवा वेदा अवेदाः। अत्र स्तेनोऽस्तेनो भवति भ्रूणहाऽभ्रूणहा चाण्डालोऽचाण्डालः पौल्कसोऽपौल्कसः श्रमणोऽश्रमण–स्तापसोऽतापसोऽन्वागतं पुण्येनानन्वागतं पापेन तीर्णो हि तदा सर्वाञ्छोकान् हृदयस्य भवति।** *(बृ.उ. ४।३।२२)* अर्थात् सुषुप्तिका अवस्थामा पिता अपिता हुन्छन्। माता अमाता हुन्छिन्। चोर अचोर हुन्छ। भ्रूणहत्यारा भ्रूणहत्यारा रहँदैन। चाण्डाल चाण्डाल रहँदैन। पौल्कस अपौल्कस, श्रमण अश्रमण र तपस्वी अतपस्वी हुन्छन्। त्यस अवस्थामा पुरुष पुण्य र पापसमेतबाट

असम्बद्ध रहन्छ र हृदयका सम्पूर्ण शोकहरूबाट पार हुन्छ ।

त्यसैगरेर यसै उपनिषद्ले फेरि भनेको छ । जस्तै – **तद्यथास्मिन्नाकाशे श्येनो वा सुपर्णो वा विपरिपत्य श्रान्तःसंहत्य पक्षौ संलयायैव ध्रियत एवमेवायं पुरुष एतस्माअन्ताय धावति यत्र सुप्तो न कञ्चन कामं कामयते न कञ्चन स्वप्नं पश्यति ।** *(बृ.उ. ४।३।१९)* अर्थात् जसरी आकाशमा बाजपक्षी अथवा गरुडपक्षी चारैतिर उडेर थाकेपछि पखेटाहरू फिँजाएर आफ्ना गुँडतिर उड्दछ । त्यसै गरेर पुरुष पनि त्यस स्थानतर्फ दौडन्छ, जहाँ सुतेपछि पुरुष कुनै भोगको कामना गर्दैन र कुनै प्रकारको सपना पनि देख्तैन । यस सुषुप्ति अवस्थामा विज्ञानआत्मा भित्रको हृदयमा गएर सुतेको हुन्छ । **'य एषोऽन्तर्हृदय आकाशस्तस्मिञ्शेते, दहरोऽस्मिन्नन्तराकाशः'** भनेर पनि श्रुतिले भनेको छ ।

सुषुप्तिका बारेमा ब्रह्मसूत्रमा पनि उल्लेख भएको पाइन्छ । जस्तै– **'स्वाप्ययसंपत्योरन्यतरापेक्षमाविष्कृतं हि ।'** *(ब्रह्मसूत्र ४।४।६।१६)* यसको भाष्यमा श्रीशङ्कराचार्यले सङ्क्षिप्त विवेचना गर्नु भएको छ । यसैलाई भामतीकार वाचस्पति मिश्रले आफ्नू भामती टीकामा 'जसरी एकपञ्चपात्रो पानी विशाल समुद्रमा मिसाउँदा त्यो पानी पनि समुद्र नै हुन्छ, त्यस्तै सुषुप्तिको अवस्थामा द्रष्टा अर्थात् जीव पनि ब्रह्मसँग मिलेर तद्रूप अर्थात् ब्रह्म नै हुन्छ ।' भनेर उल्लेख गर्नुभएको छ ।

सुषुप्तिलाई दुई खण्डमा विभाजन गरेर व्याख्या गरेको पनि पाइन्छ, जस्तै– सुषुप्तिअवस्था र सुषुप्तिस्थिति । सुषुप्तिअवस्थामा सूक्ष्मरूपमा अहङ्कार विद्यमान रहन्छ भने सुषुप्तिस्थितिमा त्यो पनि नरहेर जीव शिव नै बनेको हुन्छ । सुषुप्तिअवस्थामा तीनथरी वृत्तिहरू अर्थात् साक्ष्याकार, सुखाकार र अज्ञानाकार रहन्छन् ।

तर सुषुप्तिस्थितिमा भने यिनको पनि समाप्ति हुन्छ। त्यस स्थितिमा अहङ्कारको लेश पनि रहँदैन। त्यसबेला जीव पूर्ण ब्रह्मानन्द प्राप्त गरेर आनन्दको समुद्रमा एकाकार भएको हुन्छ। त्यसबेला जीव प्रकर्षेण अज्ञ नभएर प्रकर्षेण ज्ञ भएको हुन्छ। यही कुरा आद्यजगद्गुरु श्रीशङ्कराचार्यले आफ्नू दशश्लोकीमा पनि उल्लेख गर्नुभएको छ। जस्तै–

**अनैकान्तिकत्वात्सुषुप्त्येकसिद्ध–**
**स्तदेकोऽवशिष्टः शिवः केवलोऽहम्।**
**सुषुप्तौ निरस्तातिशून्यात्मकत्वात्**
**तदेकोऽवशिष्टः शिवः केवलोऽहम्॥**

अर्थात् सुषुप्तिस्थितिमा सबै प्रपञ्चहरूबाट निवृत्त भएर शुद्धरूपमा अवशिष्ट रहेको जुन जीव हो, त्यही नै शुद्धब्रह्म हो। त्यही नै शिव हो र त्यही नै म हुँ।

सुषुप्तिका सम्बन्धमा भागवतमा पनि उल्लेख गरेको पाइन्छ। जस्तै–

**सन्ने यदिन्द्रियगणेऽहमि च प्रसुप्ते।**
**कूटस्थ आशयमृते तदनुस्मृतिर्नः॥**

– *भागवत ११।३।३९*

अर्थात् सुषुप्ति अवस्थामा जब इन्द्रियहरू निश्चेष्ट हुन्छन्, अहङ्कार पनि अज्ञानमा गएर विश्रान्ति लिन्छ। त्यस अवस्थामा कूटस्थ अर्थात् साक्षीचैतन्यमात्रै जागा भएर रहेको हुन्छ। त्यही साक्षीचैतन्यलाई नै म आनन्दसँग सुतेको थिएँ भन्ने ज्ञान सुतेर उठेपछि हुन्छ। यही नै गाढा निद्रा अर्थात् सुषुप्तिको अवस्था हो। अस्तु। श्रीकृष्णार्पणमस्तु।

# सञ्चित कर्म

कर्म शब्द कृ धातुबाट मनिन् प्रत्यय भएर बन्दछ। यसको अर्थ कृत्य, कार्य, कार्यान्वयन, सम्पादन, कर्तव्य आदि हुन आउँछ। अझै यसको अर्थ खोज्दै जाने हो भने कर्मले गरिएको काम, धार्मिक कर्म, प्रारब्धकर्म, चरित्र संस्कार, परिणाम र फलसमेतलाई बुझाउँछ। कर्म शब्दले धार्मिक काम भन्ने पनि बुझिन आउँछ। वेदका एकलाख मन्त्रहरूमा ८० हजार मन्त्रहरू कर्मका सम्बन्धमा नै प्रयुक्त भएका देखिन्छन्।

कर्मका बारेमा वैदिक कालदेखि नै अत्यन्त सघनरूपमा चर्चा भएको पाइन्छ। वेदमा वर्णित विभिन्न कर्महरूका सम्बन्धमा अत्यन्त ऊहापोहपूर्वक वेदका अङ्गका रूपमा विशाल विशाल ब्राह्मणहरूको निर्माण भएको पाइन्छ। वेदका उपाङ्गहरूका रूपमा अरू शास्त्रहरू बनेका छन्। धेरै थरी गृह्यसूत्र र धर्मशास्त्रहरू पनि यसै कर्मको व्याख्या र व्यवस्थित गर्ने उद्देश्यले बनेका हुन्। कर्मको क्षेत्र अत्यन्त विशाल छ। वेद र वेदाङ्गहरूमा वर्णित विभिन्न प्रकारका कर्महरूको मीमांसा गर्ने उद्देश्यले पूर्वमीमांसाका नामले जैमिनिले सूत्रहरूको रचना गर्नुभएको थियो। यसमा वेदका यज्ञसम्बन्धी वचनहरूको व्याख्या र तिनको पूर्वापर समन्वय राम्रो विचारपूर्वक गरिएको छ। यो पूर्वमीमांसा षड्दर्शन भित्र पर्दछ।

भगवान् श्रीकृष्णले १८ अध्याय गीतामा शुरुका ६ अध्यायहरूमा अत्यन्त कुशलताकासाथ कर्मको विवेचना गर्नुभएको छ। यस लेखमा समग्र कर्मको चर्चा गर्ने तर्फ नलागेर केवल सञ्चित कर्मको मात्रै सङ्क्षिप्त चर्चा गरिनेछ।

कर्म भनेको के हो भन्ने सम्बन्धमा यस लेखका शुरुमा नै केही स्पष्ट पार्ने प्रयास गरिएको छ । अब कर्म कसरी गरिन्छ, कर्मका प्रकार कति छन्, कर्मको परिणाम के हुन्छ र यसको परिसमाप्ति कसरी हुन्छ भन्ने सम्बन्धमा अद्वैतवेदान्तको दृष्टिले केही चर्चा गर्ने प्रयास गरिनेछ ।

मान्छेले गर्ने खास कर्महरूमा नित्य, नैमित्तिक, काम्य र प्रायश्चित्त कर्महरू पर्न आउँछन् । यी कर्महरूबाट उत्पन्न सञ्चित कर्म, आगामी कर्म र प्रारब्ध कर्म समेत गरेर ३ थरी कर्मका फलहरू कर्म गर्ने मानिसलाई प्राप्त हुन्छन् । क्रियमाण कर्म भने सञ्चित कर्म भित्र नै पर्दछ ।

**'यद्यद्धि कुरुते कर्म तत्तत्कामस्य चेष्टितम् ।'** अर्थात् जुनजुन कर्म गरिन्छ त्यो त्यो कर्म कामना राखेर गरिन्छ । कामनाविना कुनै कर्म पनि हुँदैन । वेदले विभिन्न कामना पूर्तिका लागि विभिन्न यज्ञयागादिहरूको विधान गरेको छ । जस्तै – स्वर्गको कामनागर्नेले यज्ञद्वारा यजन गरोस् । पशुको कामना गर्नेले चित्रायाग गरोस् । वृष्टिको कामनागर्नेले करिरी याग गरोस् इत्यादि । यसरी अविद्या वा अज्ञानवश कामना राखेर गरिएको कर्मद्वारा अदृष्ट अर्थात् अपूर्व पैदा हुन्छ । त्यसबाट कर्म गर्नेले मृत्यु पछि कालान्तरमा फल प्राप्तगर्दछ । त्यसबाट अज्ञान वा अविद्या, अज्ञानबाट काम, कामबाट कर्म, कर्मबाट फेरि अविद्या नै उत्पन्न हुन्छ । यसरी अविद्या, काम र कर्मको दुश्चक्र निरन्तर घुमिरहन्छ । कर्म गर्ने मान्छे यसै दुश्चक्रमा परेर बारम्बार चौरासीलाख योनिमा घुमिरहन्छ । भाष्यकार आद्य जगद्गुरु

श्रीशङ्कराचार्यले अविद्याकामकर्मको कुरा आफ्नू भाष्यमा धेरै ठाउँमा अत्यन्त जोड दिएर उल्लेख गर्नुभएको छ। तिनै कर्महरूले जीवलाई घुमाइरहन्छन्। ती कर्महरू हुन् सञ्चित कर्म, प्रारब्ध कर्म र आगामी कर्म। श्रीशङ्कराचार्यले यिनै तीनथरी कर्महरूका बारेमा तत्त्वबोधमा उल्लेख गर्नुभएको छ। जस्तै –

१– **सञ्चितकर्म 'अनन्तकोटिजन्मनांबीजभूतं सत् यत्कर्मजातं पूर्वार्जितं तिष्ठति तत्सञ्चितं ज्ञेयम्।'** अर्थात् अनन्तकोटि-जन्महरूको बीजरूपमा सधैँ विद्यमान रहेको अनन्तकर्महरूको समूह जो अनन्त जन्मदेखि अन्तःकरणमा सञ्चित भएर बसिरहेको छ, त्यो नै सञ्चितकर्म हो। अर्थात् जीवले पहिलेका अनगिन्ती जन्महरूमा गरेका शुभ र अशुभ कर्महरूको थुप्रो भएर सञ्चित कर्मका रूपमा अन्तःकरणमा जम्मा भएर बसेको हुन्छ, त्यो नै सञ्चित कर्म हो। त्यसै सञ्चित कर्मले नै प्राणीमात्रका पापकर्म र पुण्यकर्मका हिसाबबाट प्रारब्धकर्म बनेर ब्रह्मादेखि तृणपर्यन्तका चौरासी लाख योनिमा अनवरत घुमाइरहन्छ। जबसम्म त्यस सञ्चित कर्मको राशिलाई ब्रह्मज्ञानको आगोद्वारा भस्म गराउन सकिँदैन तबसम्म यस कर्मको दुश्चक्रबाट जीवात्मा बाहिर निस्कन सक्तैन। अतः मुमुक्षुले शरीर रहँदै यस सञ्चितकर्मलाई ब्रह्मज्ञानद्वारा समाप्त गरेर मुक्तहुने प्रयास गर्नुपर्दछ।

२– **प्रारब्ध कर्म 'इदं शरीरमुत्पाद्य इह लोके एवं सुखदुःखादिप्रदं यत्कर्म तत्प्रारब्धं भोगेन नष्टं भवति। प्रारब्ध-कर्मणां भोगादेव क्षय इति।'** अर्थात् सर्वप्रथम प्रारब्धकर्मले यस वर्तमान शरीरलाई उत्पन्न गर्दछ। त्यसपछि यस लोकमा यसै शरीरद्वारा सुख र दुःखको भोग गराउँछ। प्रारब्धकर्म ज्ञानद्वारा

नष्ट नभएर भोगद्वारा नष्ट हुन्छ । शास्त्रहरूमा भनिएको पनि छ –

**अवश्यमेव भोक्तव्यं कृतं कर्म शुभाशुभम् ।**
**नाभुक्तं क्षीयते कर्म कल्पकोटिशतैरपि ॥**

अर्थात् आफूले गरेका शुभकर्म र अशुभकर्महरूको अवश्य पनि भोग गर्नुनै पर्दछ । ती कर्महरू सयकोटि कल्पसम्ममा पनि भोग नगरीकन नाश हुँदैनन् ।

**३– आगामी कर्म 'ज्ञानोत्पत्यन्तरं ज्ञानिदेहकृतं पुण्यपापरूपं कर्म यदस्ति तदागामीत्यभिधीयते ।'** अर्थात् ज्ञान उत्पत्ति भइसकेपछि ज्ञानीका शरीरले गरेको पुण्यपापरूपी कर्मलाई आगामी कर्म भनिन्छ । त्यो आगामीकर्म पनि ज्ञानबाटै नाश हुन्छ । तर ज्ञानीले गरेको उक्त कर्मले ज्ञानीलाई कमलको पातलाई पानीले न छोएझैँ छुँदैन । ज्ञानीका आगामी कर्महरूमध्ये जसले ज्ञानीको सेवाशुश्रूषा र स्तुतिभजन गर्दछ त्यसले ज्ञानीको आगामी पुण्य प्राप्त गर्दछ । जसले ज्ञानीको निन्दा गर्दछ त्यसले ज्ञानीका आगामी पापहरू प्राप्त गर्दछ । श्रुतिले भनेको पनि छ – **'सुहृदः पुण्यकृत्यां दुहृदः पापकृत्यां गृह्णन्ति ।**

आत्मज्ञानीका बारेमा श्रुति समेतको वाक्य उद्धरण गर्दै श्रीशङ्कराचार्य लेख्नु हुन्छ **'आत्मवित्संसारं तीर्त्वा ब्रह्मानन्दमिहैव प्राप्नोति । तरति शोकमात्मविदिति श्रुतेः ॥'** आत्मज्ञानी यस संसारबाट पार भएर यसै जन्ममा नै ब्रह्मानन्द प्राप्त गर्दछन् । श्रुतिले पनि आत्मज्ञानी शोकबाट पार हुन्छ भनेर उद्घोष गरेको छ ।

अन्त्यमा आद्यजगद्गुरु श्रीशङ्कराचार्यले स्मृतिको एक उक्ति ल्याएर ज्ञानीको मुक्ति कसरी हुन्छ भन्ने बारेमा उल्लेख गर्नु

भएको छ । जस्तै –

**तनुं त्यजतु वा काश्यां श्वपचस्य गृहेऽथवा ।**
**ज्ञानसंप्राप्तिसमये मुक्तोऽसौ विगताशयः ॥**

अर्थात् ज्ञानीले आफ्नू शरीर काशीमा गएर त्याग गरोस् अथवा चाण्डालका घरमा गएर त्याग गरोस् केही फरक पर्दैन । किनभने ज्ञानी पुरुषको त उसै बेला मुक्ति भइसकेको हुन्छ जुनबेला उसले ज्ञान प्राप्त गर्दछ । बन्धनका कारण हुनसक्ने आफ्ना अन्तःकरणमा सञ्चित भएर रहेका अनन्त जन्मदेखिका सम्पूर्ण कर्महरू उसैबेला नै ज्ञानीले भस्म गरिसकेको हुन्छ ।

कर्महरू जबसम्म सञ्चित भएर रहन्छन्, तिनैले नै प्राणीलाई दुःख दिइरहन्छन् । सञ्चितकर्मबाट नै प्रारब्धकर्म पनि बन्दछ । अतः कल्पकल्पान्तर, जन्मजन्मान्तर र युगयुगान्तरदेखि मानिसका अन्तःकरणमा जम्मा भएर रहेका सञ्चित कर्महरू ब्रह्मज्ञानरूपी अग्निद्वारा भस्म गरेपछि मुमुक्षु तत्कालै मुक्त हुन्छ । श्रुतिले पनि यही भनेको छ । जस्तै **'न तस्य प्राणा उत्क्रामन्ति जत्रैव समवलीयन्ते ।'** त्यति मात्रै होइन श्रुतिले त **'ब्रह्मविद ब्रह्मैव भवति ।'** अर्थात् ब्रह्म जान्ने ब्रह्म नै हुन्छ भनेर भनेको छ ।

माथिको सङ्क्षिप्त विश्लेषण अनुसार के प्रमाणित हुन्छ भने जब अनन्त जन्मका सञ्चितकर्महरूको थुप्रो मानिसले आफ्ना अन्तःकरणमा बोकेर हिँडेको हुन्छ तबसम्म उसको मुक्ति कुनै हालतमा पनि हुन सक्तैन । सञ्चितकर्मको चर्चा गर्ने क्रममा सामान्यरूपमा प्रारब्धकर्म र आगामी कर्म समेतका विषयमा स्पष्ट्याउने कामका लागि मात्रै यहाँ तिनको पनि चर्चा गरिएको हो । कर्महरूको जनक र निरन्तर विभिन्न योनिहरूमा घुमाइरहने

पनि सञ्चितकर्म नै हो । यस सञ्चितकर्मको थुप्रोमा ब्रह्मज्ञानरूपी आगो लगाएर भस्म गराएपछि मात्रै मान्छेले फेरि यस दुःखद संसारमा आउनु पर्दैन । गीतामा भनिएको पनि छ – **'यद्गत्वा न निवर्तन्ते तद्धाम परमं मम ।'** अस्तु । श्रीकृष्णार्पणमस्तु ।

# गोपी

सामान्यरूपमा रक्षार्थक गुपू धातुबाट अच् वा घञ् प्रत्यय भएर स्त्रीलिङ्गमा ङीस् प्रत्यय भएर गोपी शब्द बन्दछ। यस शब्दले लुकाउनु, गोप्य राख्नु, प्रकाश, प्रभा र दीप्तिलाई पनि बुझाउँछ। विशेषरूपमा गोपी शब्दको अर्थ गो भन्नाले इन्द्रियहरू र पी भन्नाले पान गर्ने भनेर बुझ्नु पर्दछ। अर्थात् **'गोभिः, इन्द्रियैः, भक्तिरसं पिबति इति गोपी।'** जसले आफ्ना सम्पूर्ण इन्द्रियहरूबाट केवल भक्तिरसकोमात्रै पान गर्दछ, त्यो नै गोपी हो। प्रेमको अनिर्वचनीय स्थिति नै गोपी हो। श्रीकृष्ण र राधा एउटै हुन्। यिनका लालसा नै गोपीहरू हुन्।**'अस्या एव कायव्यूहरूपा गोप्यः'** (राधोपनिषद्) श्रीराधाजीका रोमकूपबाट आविर्भाव भएका राधा जस्तै रूप र लावण्य भएका लक्षकोटि गोपीहरूको सङ्ख्या ब्रह्मवैवर्तपुराणमा दिइएको छ। गोपीहरूलाई  सामान्य गोपालका छोरीबुहारीहरूका रूपमा पनि प्रस्तुत गरिएको छ। तर उनीहरू सामान्य नारीहरूमात्र नभएर अलौकिक नारीहरू भएको कुरा भागवत र अरू पुराणहरूको अनुशीलनबाट थाहा हुन्छ।

आजको यस लेखमा गोपीहरूका साथमा भगवान् श्रीकृष्णले गरेको महारासको चिन्मयलीलाको छोटकरीमा चर्चा गर्ने प्रयास गरिने छ। भगवान् श्रीकृष्ण ब्रह्मतत्त्व हुन् र गोपीहरू अन्तःकरण–वृत्तिमा परेका ब्रह्म वा साक्षीचैतन्यका प्रतिबिम्बस्वरूपा जीव भनेर बुझ्दा रासलीला बुझ्न सहज हुनेछ। भगवान् श्रीकृष्णलाई गोपाल नन्दका छोरा र गोपीहरूलाई गोठालाका छोरीबुहारीहरूका रूपमा

बुझ्न खोजियो भने गोपीतत्त्व, कृष्णतत्त्व र महारासलाईसमेत बुझ्न नसकिने देखिन्छ। यस प्रसङ्गमा कृष्ण शब्दका बारेमा उल्लेख भएको पाइन्छ। जस्तै –

**कृषिर्भूवाचकः शब्दो णश्च निर्वृत्तिवाचकः।**
**तयोरैक्यं परब्रह्म कृष्ण इत्यभिधीयते॥**

अर्थात् कृ भन्नाले सत्तत्त्व, ण भन्नाले सत् बाहेकका अन्य वस्तुको व्यावृत्ति भन्ने र ती दुवै अक्षर मिलेर कृष्ण शब्द बन्दछ। कृष्ण शब्द नै परब्रह्मवाचक शब्द हो। यहाँ रास भन्नाले **'रस एव रासः'** अर्थात् रस नै रास हो। रस भनेको ब्रह्म हो। **'रसो वै सः, रसं ह्येवायं लब्ध्वाऽऽनन्दी भवति'** *(तै.उ. २।१)* अर्थात् त्यही रस पाएर नै प्राणी आनन्दित हुन्छ। त्यसकारण रस भनेको परम आनन्दस्वरूप ब्रह्म नै रहेछ भन्ने थाहा हुन्छ। त्यस निराकार निर्विशेष ब्रह्मले कसरी गोपीहरूसँग रासलीला गऱ्यो त भन्ने प्रश्न आउन सक्तछ। यहाँ निराकार ब्रह्मले रासलीला गरेको नभएर साकार आत्माराम ब्रह्म श्रीकृष्णद्वारा गोलोकमा नित्य निरन्तर चलिरहने महारास नै पृथ्वीको वृन्दावनमा पनि आफ्ना नित्यस्वरूपभूता सिद्धा गोपीहरूका साथमा रमण गर्नकालागि श्रीकृष्णले रच्नु भएको हो। आफू चाहिँ परमात्मा ब्रह्म तर गोपीहरू भने गोलोकका जस्ता चिन्मयस्वरूपा नभएर सामान्य नारी थिए भने कसरी रासलीला सम्भव भयो त ? भन्ने फेरि जिज्ञासा उत्पन्न हुन सक्तछ। यसको उत्तरमा ती गोपीहरू नित्यसिद्धा, श्रुतिरूपा आदि दिव्यविग्रहसम्पन्ना नारीहरू नै थिए भन्ने सामान्य उत्तर हुन सक्तछ भने अझै यसलाई गहिरिएर अद्वैतवेदान्तको भाषामा भन्ने हो भने ती गोपीहरू कुनै लौकिक वा अलौकिक नारीहरू नभएर भगवान् श्रीकृष्णका बुद्धिवृत्तिमा

प्रतिभासित आभासहरू मात्र थिए। तिनै आभासहरूसँग भगवान्ले खेल्नु भएको थियो।

यो कुरा भागवतमा शुकदेव स्वामीले राजा परीक्षित्लाई भन्नु भएको कुराबाट प्रमाणित हुन आउँछ। जस्तै–

**एवं परिष्वङ्गकराभिमर्शस्निग्धेक्षणोद्दामविलासहासैः।**
**रेमे रमेशो व्रजसुन्दरीभिर्यथार्भकःस्वप्रतिबिम्बविभ्रमः॥**

*– भागवत १०।३३।१७*

अर्थात् जसरी सानो बालक आफ्ना छायाँसँग निर्विकारभावले खेल्दछ। त्यसैगरेर भगवान् श्रीकृष्णले आफ्नै प्रतिबिम्बभूता गोपीहरूसँग नानाथरीका हाउभाउ र लीलाहरू गरेर खेल्नु भएको थियो। यो कुरा सहजरूपमा सामान्य मान्छेले पत्याउन नसक्ने पनि हुनसक्तछ। अतः यसलाई अझै स्पष्ट पार्नुपर्ने देखिन्छ।

वृत्तिहरूका सम्बन्धमा शास्त्रहरूमा प्रशस्त उल्लेख गरेका पाइन्छन्। पातञ्जलयोगसूत्र अनुसार मूलरूपमा वृत्तिहरू पाँच हुन्छन्। जस्तै– **'वृत्तयः पञ्चतय्यः क्लिष्टाक्लिष्टाः'** अर्थात् क्लिष्ट र अक्लिष्ट गरेर वृत्तिका पाँच भेद हुन्छन्। यसरी योगसूत्रले ५ प्रकारका वृत्तिहरू र तिनीहरूका अनन्त भेद मानेको छ। त्यसै गरेर श्रीमद्भागवतमहापुराणले पनि करोडौं वृत्तिका सङ्ख्याहरू मानेको छ। यो कुरा भागवतमा उल्लेख भएको छ –

**द्रव्यस्वभावाशयकर्मकालैरेकादशामी मनसो विकाराः।**
**सहस्रशः शतशः कोटिशश्च क्षेत्रज्ञतो न मिथो न स्वतः स्युः॥**

अर्थात् यी मनका ११ वृत्तिहरू (पाँच ज्ञानेन्द्रिय, पाँच कर्मेन्द्रिय र अहङ्कार) द्रव्य (पञ्चमहाभूतहरू) स्वभाव (परिणामहेतु, माया) आशय (वासना, संस्कार) कर्म (अदृष्ट, पापपुण्यादि) कालः

(क्षोभकः, सञ्चालकः) द्वारा ११ इन्द्रियहरूसँग गुणित भएर शयौं, हजारौँ र करोडौँका भेदमा परिणत भएर वृत्तिहरू असङ्ख्य बन्दछन् । यी वृत्तिहरू क्षेत्रज्ञको सहयोग पाएर यसरी असङ्ख्यरूपमा बढेर जान्छन् ।

उपर्युक्त अनुसार वृत्त्यात्मक गोपीहरूका बारेमा चर्चा गरियो । तर ब्रह्मवैवर्तपुराणमा भने गोलोकवासी गोपीहरूको सङ्ख्या भने लाखौँ कोटियौं भएको प्रसङ्ग पनि पाइन्छ । जस्तै–

**लक्षकोटिपरिमितः शश्वत्सुस्थिरयौवनः ।**
**सङ्ख्याविद्भिश्च सङ्ख्यातो गोलोके गोपिकागणः ॥**

*– ब्र.वै.५।४१*

अर्थात् लक्षकोटि सङ्ख्या भएका र सधैँ सुस्थिर यौवन भएका गोपीहरूको सङ्ख्या गोलोकमा भएको कुरा तिनीहरूको सङ्ख्या थाहा पाउने विद्वान्हरूले भनेका छन् । त्यसरी एकातिर लाखौँ करोडौँको सङ्ख्यामा गोपीहरूको वर्णन हुनु र अर्कोतिर वृत्तिहरूको सङ्ख्या पनि लाखौँ करोडौँ हुने पुराणहरूको भनाइबाट पनि भगवान् श्रीकृष्णाले तिनै आफ्ना अन्तःकरणका आफ्ना प्रतिबिम्बभूता वृत्तिरूपा गोपीहरूसँग खेलेको सहजै अनुमान गर्न सकिन्छ । ती सबै गोपीहरू भगवान्का मनका वृत्ति वा विकार भएको कुरा भागवतमा उल्लेख भएको पाइन्छ । सो कुरा माथि उल्लेख गरिसकिएको छ । सोही कुरा भगवान् श्रीकृष्णले उद्धवलाई आफ्ना विभूतिहरूको वर्णन गर्ने सन्दर्भमा पनि भागवतमा बताउनु भएको छ । सो अनुसार ती सबै गोपीहरू मनोविकारमात्रै भएका देखिन्छन् –

**एतास्ते कीर्तिताः सर्वाः सङ्क्षेपेण विभूतयः ।**
**मनोविकारा एवैते यथा वाचाऽभिधीयते ॥**

*– भागवत ११।१६।४१*

विभूतिहरूको वर्णन गर्ने क्रममा भगवान् श्रीकृष्णले ती सबै मेरा मनोविकारमात्रै हुन् र केवल वचनद्वारा नामकरण गरिएका हुन् भनेर बताउनु भएको छ। यसबाट पनि के प्रमाणित हुन्छ भने ती गोपीहरू पनि भगवान् श्रीकृष्णाका मनका विकारमात्रै थिए। प्रायः गरेर भगवान्को पृथ्वीमा अवतार हुँदा तीनओटा कामका लागि हुने कुरा गीतामा बताउनु भएको छ। जस्तै–

**परित्राणाय साधूनां विनाशाय च दुष्कृताम् ।**
**धर्मसंस्थापनार्थाय सम्भवामि युगे युगे ॥**

*– गीता ४।८*

अर्थात् साधुहरूको रक्षा गर्न, दुष्टहरूको संहार गर्न र धर्मको स्थापना गर्न नै म युग युगमा अवतार लिन्छु। तर भगवान् श्रीकृष्णाको अवतार हुँदाखेरि उहाँले त्यति तीन कुरामात्रै नगरेर आफ्ना भक्तहरूलाई आनन्दित गराउनकालागि थरीथरीका मधुर लीलाहरू पनि गर्नुभएका देखिन्छन्। ती लीलाहरूमध्ये सबैभन्दा महत्त्वपूर्ण मधुर तथा चिन्मयलीला रासलीला नै हो। भगवान् श्रीकृष्णले गोपीहरूसँग वा आफ्ना बुद्धिका वृत्तिहरूसँग रासलीला गर्नुभएको भए तापनि त्यसको शुरु पूतना वधदेखि नै गरेको देखिन्छ। पूतना भनेकी अविद्या अथवा अज्ञानात्मिका वृत्ति हो। त्यसको नाश नगरेसम्म चिन्मय रासलीलामा प्रवेश गर्न सकिने थिएन। त्यसपछि श्रीकृष्णले देहाध्यासरूपी धेनुकासुरको वध, इन्द्रियाध्यासरूपी कालिय नागको निग्रह र त्यसपछि अन्तःकरणाध्यासरूपी प्रलम्बासुरको वध गर्नु भएको देखिन्छ।

यसरी अरू पनि धेरैथरी अध्यासहरूको नाश गरेपछिमात्रै रासलीला शुरु गरिएको देखिन्छ । इन्द्रियनिग्रहकै सन्दर्भमा भागवतमा उल्लेख भएको पाइन्छ । जस्तै –

**तावज्जितेन्द्रियो न स्यात् विजितान्येन्द्रियः पुमान् ।**
**न जयेद् रसनं यावज्जितं सर्वं जिते रसे ॥**

*– भागवत ११।८।२१*

अर्थात् मान्छेले सबै इन्द्रियहरू जितेर पनि रसनेन्द्रिय अर्थात् जिब्रोलाई जित्न सकेन भने त्यो मान्छे जितेन्द्रिय हुनसक्तैन । तर जिब्रोलाई जित्यो भने सबै इन्द्रियलाई जितेको मानिन्छ । सो अनुसार दिव्य रासलीलाकै सन्दर्भमा वरुणलाई पनि भगवान् श्रीकृष्णले जित्नु भएको थियो । त्यसरी सबैथरीका अध्यासहरू समाप्त गरेपछि अन्तःकरणको वासना, मलदोष, विक्षेपदोष र आवरणदोषसमेत समाप्त गर्न भगवान्ले चीरहरण लीला गर्नु भएको थियो । भगवान्ले अन्तःकरण शुद्ध नभइसकेका ती गोपीहरूलाई आगामी शरद्ऋतुको पूर्णिमाका रातमा हुने रासलीलाकालागि तयार हुन आमन्त्रण पनि दिनुभएको थियो । सो कुरा भागवतमा यसरी उल्लेख भएको छ । जस्तै–

**याताबला व्रजं सिद्धा मयेमा रंस्यथ क्षपाः ।**
**यदुद्दिश्य व्रतमिदं चेरुरार्यार्चनं सती : ॥**

*– भागवत १०।२२।२७*

अर्थात् हे अबलाहरू हो ! तिमीहरू आ–आफ्ना घरमा फर्केर जाओ । तिमीहरूको साधना सिद्ध भयो । तिमीहरू आगामी शरद्ऋतुका रातमा हुने रासलीलामा मसँग सम्मिलित हुनेछौ ।

यसरी सिद्धा गोपीहरूलाई भगवान् श्रीकृष्णले आश्वासन

दिनुभएको थियो। त्यसरी आश्वासन पाएपछि उनीहरूका अन्तःकरणमा श्रीकृष्णलाई भेट्ने कामना उत्पन्न भएको थियो र त्यस कामनाले अन्तःकरणलाई दूषित बनाउँछ कि ? भन्ने आशङ्काको निवारण गर्न भगवान् श्रीकृष्ण गोपीहरूलाई आज्ञा हुन्छ। जस्तै–

**न मय्यावेशितधियां कामः कामाय कल्पते।**
**भर्जिता क्वथिता धानाः प्रायो बीजाय नेष्यते॥**

*– भागवत १०।२२।२६*

अर्थात् ममा समर्पित अन्तःकरणमा कुनै खालका कामनाहरू उत्पन्न हुन सक्तैनन्। किनभने उसका अन्तःकरणका कामनाहरू मरिसकेका हुन्छन्। उसिनेको र भुटेको बीज प्रायः उम्रिन सक्तैन।

उपर्युक्त अनुसार पूर्वभूमिका सम्पन्न भएपछि भगवान् श्रीकृष्णले आफ्नू चिन्मय रासलीला गर्ने इच्छा गर्नुभएको थियो। त्यसका लागि सर्वप्रथम मनको रचना गर्नुभएको थियो। किनभने भगवान् श्रीकृष्ण ब्रह्म भएका र ब्रह्मका कुनै पनि इन्द्रियहरू हुँदैनन् भनेर श्रुतिले भनेको छ। जस्तै– **'अचक्षुष्कमश्रोत्रमवागमनः'** *(बृ. ३।८।८)* अर्थात् ब्रह्मका आँखा, कान, वाणी र मन पनि हुँदैनन्। त्यसै गरेर अर्को श्रुतिले भन्छ– **'अप्राणो ह्यमनाः शुभ्रः'** *(मु.उ.२।१।१)* अर्थात् ब्रह्मका प्राण र मन हुँदैनन्। त्यसैकारण भगवान् श्रीकृष्णले चिन्मय रासलीलाकालागि सर्वप्रथम आफ्नू मन अर्थात् अन्तःकरण सृजना गर्नु भएको थियो। किनभने अन्तस्करणवृत्तिमा प्रतिभासित आफ्ना प्रतिविम्बरूपा गोपीहरूसँग भगवान् श्रीकृष्णले दिव्य रासलीला गर्नु पर्ने थियो। त्यसकालागि श्रीकृष्णले मनको सिर्जना गर्नु भएको कुरा रासपञ्चाध्यायीको शुरुमा नै वर्णन गरिएको छ। जस्तै–

**भगवानपि ता रात्रीः शरदोत्फुल्लमल्लिकाः ।**
**वीक्ष्य रन्तुं मनश्चक्रे योगमायामुपाश्रितः ॥**

*– भागवत १०।२९।१*

अर्थात् भगवान्ले पनि ढकमक्क मल्लिका फूल फुलेको त्यस शरद्ऋतुको रातलाई देखेर रासलीला गर्ने इच्छा गर्नु भएको थियो र त्यसकालागि योगमाया अर्थात् राधाको सहयोग लिएर मनको रचना गर्नुभएको थियो ।

त्यसरी मनको रचना गरेपछिमात्रै भगवान् श्रीकृष्णले आफ्नू मुरलीरूपी अनाहत नादद्वारा आफ्ना वृत्तिरूपी गोपीहरूलाई रासलीलाका लागि आमन्त्रण गर्नुभएको थियो । ती वृत्तिहरू बाहिरी सम्पूर्ण विषयहरू छाडेर आत्मालाई भेट्न अन्तर्मुख भएका थिए । त्यसैलाई गोपीहरूको आगमन भनेर भनिएको हो । ती वृत्तिरूपी गोपीहरूलाई सम्बोधन गर्दै भगवान् श्रीकृष्णले सर्वप्रथम अत्यन्त मधुर बोलीमा तिनीहरूको स्वागत गर्नु भएको थियो । त्यसपछि आफ्नै विषयतिर फर्किएर अर्थात् आ–आफ्ना घरमा गएर आ–आफ्ना पतिहरूको सेवा गर्दै घरगृहस्थी राम्रोसँग सञ्चालन गर्न धर्मशास्त्र अनुसार भगवान् श्रीकृष्णले गोपीहरूलाई उपदेश दिनुभएको थियो । धर्मशास्त्र अनुसारको उपदेश सुनेपछि ती गोपीहरूले पनि अद्वैतवेदान्त र पराभक्तिको उत्कर्षमा पुगेर घर नफर्कने अडान लिएपछि भगवान्ले उनीहरूलाई स्वीकार गर्नु भएको थियो । यसमा पूर्वपक्षीका रूपमा भगवान् श्रीकृष्ण र उत्तरपक्षीका रूपमा गोपीहरू देखिएका छन् । शास्त्रार्थमा गोपीहरूले भगवान् श्रीकृष्णाको चित्त बुझाएपछि उनीहरूका साथ श्रीकृष्णले रासलीला शुरु गर्नुभएको थियो । रासलीलाको शुरुमै

राधाले मान खोजेकी र अरू गोपीहरूमा पनि अहङ्कार चढेको हुँदा गोपीहरूको अहङ्कारलाई चकनाचूर पार्न र राधालाई खुशी पार्न राधालाई साथमा लिएर भगवान् श्रीकृष्ण अन्तर्धान हुनुभएको थियो । भागवतमा राधाको नाम प्रष्टरूपमा नलेखिएको भएता पनि एउटी गोपीलाई साथमा लिएर श्रीकृष्ण अन्तर्धान हुनुभयो भनेको राधालाई लिएर अन्तर्धान हुनुभएको भनेर बुझ्नु पर्दछ । त्यसपछि गोपीहरू विलाप गर्दै र भगवान् श्रीकृष्णका नानाथरीका लीलाहरूको अभिनय गर्दै बहुलाही जस्ता भएर वनवनै घुमेका थिए । अन्त्यमा यमुनाका किनारामा फर्किएर करुणारूपमा गोपीहरूले गीत गाएका थिए । त्यस गोपीगीतबाट मन पग्लिएर भगवान् श्रीकृष्ण गोपीहरूका बीचमा प्रकट हुनुभएको थियो । त्यसपछि चिन्मयरासलीला ब्रह्ममुहूर्तसम्म नै चलेको थियो । त्यसपछि गोपीहरू आ–आफ्ना घरमा फर्किएका थिए ।

उपर्युक्त अनुसार सङ्क्षिप्तरूपमा रासलीलाको विवरण यति नै हो । त्यस दिव्य रासलीलालाई सामान्य मानिसहरूले अन्यथारूपमा व्याख्या गर्ने गरेको पाइन्छ । राजा परीक्षित्ले पनि सिद्धा तथा वृत्तिरूपा गोपीहरूका सम्बन्धमा रासलीलाको शुरुमा नै शङ्का गर्दै सोध्नु भएको थियो । जस्तै–

**कृष्णं विदुः परं कान्तं न तु ब्रह्मतया मुने ।**
**गुणप्रवाहोपरमस्तासां गुणधियां कथम् ।।**

*– भागवत १०/२९/१२*

अर्थात् हे मुने ! गोपीहरू श्रीकृष्णलाई परम प्रेमीमात्रै मान्दथे । उनीहरू श्रीकृष्णलाई ब्रह्म मान्दैनथे । यसरी उनीहरूको मन श्रीकृष्णका केवल प्राकृत गुणहरूमा मात्रै आसक्त भएको देखिन्छ

भने यस अवस्थामा उनीहरूको गुणबाट नै चलिरहेको संसारको निवृत्ति कसरी भयो ?

त्यसरी राजा परीक्षित्ले गोपीहरूका सम्बन्धमा शङ्का व्यक्त गर्दै प्रश्न सोधेका थिए भने त्यसपछि राजा परीक्षित्ले फेरि भगवान् श्रीकृष्णकै सम्बन्धमा पनि शङ्का गर्दै प्रश्न सोधेका थिए । जस्तै –

**स कथं धर्मसेतूनां वक्ता कर्ताभिरक्षिता ।**
**प्रतीपमाचरद् ब्रह्मन् परदाराभिमर्शनम् ॥**

– *भागवत १०।३३।१८*

अर्थात् हे ब्रह्मन् ! भगवान् धर्म र मर्यादाका कर्ता, उपदेष्टा र संरक्षकसमेत हुनुहुन्छ । त्यस्ता भगवान्ले उल्टै परस्त्रीलाई त्यसरी किन छुनुभयो ? के आफैँले बनाएको धार्मिक नियमको यो विपरीत आचरण भएन र ? भन्ने राजाको प्रश्न सुनिसकेपछि उनको अन्तःकरण अझै पनि शुद्ध नभइसकेको ठानेर श्रीशुकदेवले त्यसपछि रासलीलाको बाँकी चिन्मयवर्णन बीचमा रोकेर त्यस प्रसङ्गलाई समाप्त गर्नुभयो भन्ने केही विद्वान्हरूको भनाइसमेत पाइन्छ ।

वास्तवमा गोपीहरू हाडमासुका पुतली नभएर भगवान्ले आत्मरमणकालागि अन्तःकरणमा सिर्जना गरेका चिन्मयसिर्जना थिए । भगवान्ले हामीजस्ता संसारी मानिसहरूले पनि बुझुन् भनेर करुणाकासाथ सामान्य गोपीकारूपमा तिनलाई प्रस्तुत गर्नुभएको हो । बाहिरीरूपमा भागवतमा हाडमासुबाट बनेका सामान्य नारीकारूपमा नै तिनीहरूलाई साधारणीकरण गरेर वर्णन गरेको पाइन्छ । तर भित्रीरूप र रहस्य भने भिन्नै नै भएको कुरा भागवतमा सर्वत्र वर्णन भएको पाइन्छ । त्यसलाई बुझ्ने सूक्ष्म

दृष्टि र चिन्तनको आवश्यकता पर्दछ ।

गोपीहरूजस्ता निष्काम तथा समर्पित भक्तहरू कोही थिएनन् र उनीहरू भगवान्‌को सुखकालागि नै आफ्नू प्राण धानेर बाँचेका थिए । उनीहरूको व्यक्तिगत इच्छा र चाहना केही पनि थिएन । नारदले नारदभक्तिसूत्रमा वर्णन गर्नु भएको उत्तम भक्तको लक्षण सर्वांशमा यिनीहरूमा लागू हुन्छ । जस्तै– **'यल्लब्ध्वा पुमान् सिद्धो भवति, अमृतो भवति, तृप्तो भवति'** *(ना.भ.सू.)* अर्थात् जसलाई पाएपछि मान्छे सिद्ध हुन्छ, अमर हुन्छ र तृप्त पनि हुन्छ । **'यत् प्राप्य न किञ्चिद्वाञ्छति, न शोचति, न द्वेष्टि, न रमते, नोत्साही भवति'** अर्थात् जसलाई प्राप्त गरेपछि अरू केही कुराको पनि इच्छा गर्दैन, केही पनि शोच्तैन, कसैसँग पनि द्वेष गर्दैन, रमाउँदैन र उत्साही पनि हुँदैन । **'यज्ज्ञात्वा मत्तो भवति, स्तब्धो भवति, आत्मारामो भवति'** अर्थात् जसलाई जानेपछि मत्त हुन्छ, स्तब्ध हुन्छ र आत्माराम हुन्छ । **'यथा व्रजगोपिकानाम्'** *(ना.भ.सू.)* अर्थात् उदाहरणका लागि व्रजका गोपीहरू ।

यसरी सम्पूर्ण भक्तिको परम्परामा उत्तम भक्तमा उदाहरणका रूपमा गोपीहरूलाई नै लिएको देखिन्छ । उनीहरूको त्याग सर्वोपरि छ । यसलाई भगवान् श्रीकृष्णले पनि भागवतमा प्रशंसा गर्दै भन्नुभएको छ । जस्तै– **'या माभजन् दुर्जरगेह शृङ्खलाः संवृश्च्य तद् वः प्रतियातु साधुना ।'** *(भागवत १०।३२।२२)* अर्थात् तिमीहरूले छिनाइनसक्नु घरव्यवहारको साङ्लोलाईसमेत मेरा निमित्त छिनाएर आएका छौ । ममा योभन्दा ठूलो समर्पणभाव के हुनसक्तछ ?

वास्तवमा गोपीहरू श्रीकृष्णलाई ब्रह्मभावले भक्ति गर्दथे । जस्तै–

**'न खलु गोपिकानन्दनो भवानखिलदेहिनामन्तरात्मदृक् ।'** *(भा.१०।३१।४)* गोपीहरू श्रीकृष्णलाई आफ्ना कारणले दुःख दिन चाहँदैनथे । उनीहरू भगवान्लाई हेरिरहन चाहन्थे । उनीहरूले आँखाको परेला झिम्किएर भगवान्को रूपमाधुरीको पान गर्न बाधा पर्दा पनि आँखाका परेला बनाउने ब्रह्मालाई गालि गर्ने गर्दथे । जस्तै– **'जड उदीक्षतां पक्ष्मकृद् दृशाम् ।'** *(भा. १०।३१।१५)* त्यो कुरो रासलीलाका समयको थियो । त्यसबेला गोपीहरू नवयौवना किशोरीहरू थिए । जवानीका समयमा अत्यन्त प्रेम भएको हुँदा त्यसो भने होलान् भनौं भने तिनै गोपीहरूले धेरै वर्षपछि ग्रहणको समयमा कुरुक्षेत्रमा गएको बेलामा आफ्ना परमप्रियतम श्रीकृष्णलाई देखेर त्यही भावना व्यक्त गरेका थिए । जस्तै–

**गोप्यश्च कृष्णमुपलभ्य चिरादभीष्टम् ।**
**यत्प्रेक्षणे दृशिषु पक्ष्मकृतं शपन्ति ॥**

*– भागवत १०।८२।४०*

भगवान् श्रीकृष्ण वृन्दावनबाट मथुरा जाँदा ११ वर्षका हुनुहुन्थ्यो र गोपीहरू पनि समवयस्क थिए । उनीहरू मथुरा गएर पनि आफ्ना प्रेमी श्रीकृष्णलाई भेट्न सक्तथे । तर श्रीकृष्णलाई दुःख हुन्छ भनेर भेट्न गएका थिएनन् । उनीहरू प्रियतमलाई संझिएर बाँचिरहेका थिए । त्यस बीचमा भगवान् श्रीकृष्णलाई उनीहरूले भेट्न पाएका थिएनन् । कुरुक्षेत्रमा धेरै वर्षको अन्तरालपछि भगवान् श्रीकृष्णसँग भेट हुँदा भगवान् श्रीकृष्णको उमेर ८९ वर्षको भइसकेको देखिन्छ । त्यस बेला गोपीहरूको उमेर पनि श्रीकृष्णको बराबरै हुनुपर्दछ । त्यत्रो अन्तरालपछि त्यस उमेरमा भगवान् श्रीकृष्णसँग भेट हुँदा पनि गोपीहरूको

भावना, प्रेम र माधुर्य यथावत् थियो। त्यही नै गोपीहरूको अनिर्वचनीय प्रेम हो। नारदभक्तिसूत्रमा त्यसै प्रेमलाई **'अनिर्वचनीयं प्रेमस्वरूपम्'** भनिएको हो।

गोपीहरूको शरीर वृन्दावनमा भएता पनि मन सधैँ श्रीकृष्णमा नै लागिरहेको हुन्थ्यो। उनीहरू जेसुकै गर्दा पनि श्रीकृष्णलाई नै सम्झन्थे। भगवान् श्रीकृष्ण मथुरा गएका बेला उहाँलाई देखेर मथुरावासीहरूले गोपीहरूको प्रशंसा गरेका थिए। जस्तै–

**या दोहनेऽवहनने मथनोपलेप–**
**प्रेङ्खेङ्खनार्भरुदितोक्षणमार्जनादौ ।**
**गायन्ति चैनमनुरक्तधियोऽश्रुकण्ठ्यो–**
**धन्या व्रजस्त्रिय उरुक्रमचित्तयानाः ॥**

*– भागवत १०।४४।१५*

अर्थात् व्रजका गोपीहरू धन्य हुन्। उनीहरूको मन सम्पूर्णरूपमा सदासर्वदा श्रीकृष्णमा नै लागिरहेको हुन्छ। उनीहरू गहभरि आँशु पारेर गद्गद आवाजमा भगवान् श्रीकृष्णलाई सम्झिएर उहाँको लीला कथाहरूको गान गरिरहन्छन्। तिनीहरू गाई दुहुँदा, मोही पार्दा, धान कुट्ता, घर लिप्ता, शिशुहरूलाई कोक्रामा हालेर हल्लाउँदा, रोएका शिशुहरूलाई फुल्याउँदा, तिनीहरूलाई स्नान गराउँदा, घरमा कुचो लगाउँदासमेत भगवान् श्रीकृष्णकै गुणगानमा मस्त रहन्छन्।

उपर्युक्त अनुसार प्रेमको महाभावरूप नै गोपीतत्त्व हो भनेर भन्न सकिन्छ। श्रीकृष्णको दर्शन गर्न चाहने लालसा नै गोपीभाव हो। ती नारी वा पुरुष केही होइनन्। गीतामा पनि भगवान् श्रीकृष्णले भन्नुभएको छ। जस्तै –

**मच्चित्ता मद्‌गतप्राणा बोधयन्तः परस्परम् ।**
**कथयन्तश्च मां नित्यं तुष्यन्ति च रमन्ति च ॥**

*– गीता १०/९*

अर्थात् ममा नै निरन्तर मन लगाउने, ममा नै प्राण समर्पण गर्ने, आपसमा मेरै बारेमा चर्चा गर्ने र सधैँ ममा नै सन्तुष्ट रहने मेरा भक्तहरू म वासुदेवमा सधैँ रमाइरहन्छन् ।

यही कुरा गोपीहरूमा पनि लागू हुन्छ । भगवान् श्रीकृष्णले ज्ञानी उद्धवका समक्ष भागवतमा व्यक्त पनि गर्नुभएको छ । जस्तै –

**ता मन्मनस्का मत्प्राणा मदर्थे त्यक्तदैहिकाः ।**
**मामेव दयितं प्रेष्ठमात्मानं मनसा गताः ।**
**ये त्यक्तलोकधर्माश्च मदर्थे तान् बिभर्म्यहम् ॥**

*– भागवत १०/४६/४*

अर्थात् गोपीहरूको मन नित्यनिरन्तर ममा नै लागिरहेको हुन्थ्यो । उनीहरूको प्राण, उनीहरूको जीवन र उनीहरूको सर्वस्व नै म थिएँ । मेरालागि उनीहरूले अफ्ना पति, पुत्र आदि सम्पूर्ण सँगीसम्बन्धीहरूको समेत त्याग गरिदिएका थिए । उनीहरूले मलाई नै सबै कुरा मानेका थिए । त्यतिमात्रै होइन । उनीहरूले आफ्नू आत्मा पनि मलाई नै मानेका थिए । जसले मेरालागि सबै कुरा त्याग गर्दछ, त्यस्ता भक्तको भरण पोषण पनि म नै गर्दछु । त्यही कुरा भगवान् श्रीकृष्णले गीतामा पनि भन्नुभएको छ । जस्तै–

**अनन्याश्चिन्तयन्तो मां ये जनाःपर्युपासते ।**
**तेषां नित्याभियुक्तानां योगक्षेमं वहाम्यहम् ॥**

*– गीता ९/२२*

अर्थात् अनन्यभाव राखेर ममा नै आश्रित भएका भक्तहरू

मेरो नै नित्यनिरन्तर निष्कामभावले भजन कीर्तन गर्दछन् । ममा नै पूर्णरूपमा समर्पित भएर मेरो शरणमा आएका भक्तहरूको योगक्षेम अर्थात् जीवननिर्वाहकालागि उनीहरूलाई आवश्यक पर्ने सामग्रीहरू म नै जुटाइदिन्छु र त्यसको संरक्षण पनि म नै गरिदिन्छु ।

भागवतमा भगवान् श्रीकृष्णले गोपीहरूका सम्बन्धमा आफ्नू विचार यसरी व्यक्त गर्नुभएको छ । जस्तै–

**मत्कामा रमणं जारमस्वरूपविदोऽबला: ।**
**ब्रह्म मां परमं प्रापु: सङ्गाच्छतसहस्रश: ॥**

*– भागवत ११।१२।१३*

अर्थात् हे उद्धव ! धेरैजसो गोपीहरू त मेरो वास्तविक स्वरूप नै जान्दैन थे । उनीहरू मलाई भगवान् भन्ने नठानेर केवल प्रियतम सम्झन्थे र जारभावले मसँग भेट्न चाहन्थे । ती साधनविहीन सैयौँ तथा हजारौँ अबलाहरूले खालि मेरो सङ्गतका कारणले नै म ब्रह्म अर्थात् परमात्मालाई प्राप्त गरेका थिए ।

त्यसैगरेर भागवतमा राजा परीक्षित्लाई श्रीशुकदेव स्वामीले गोपीहरूका सम्बन्धमा बताउनु भएको छ । जस्तै–

**तमेव परमात्मानं जारबुद्ध्याऽपि सङ्गता: ।**
**जुहुर्गुणमयं देहं सद्य: प्रक्षीणबन्धना: ॥**

*– भागवत १०।२९।११*

अर्थात् गोपीहरू भगवान् श्रीकृष्णलाई जार अर्थात् उपपतिका रूपमा नै प्रेम गर्दथे तापनि उनीहरूले आफ्ना प्रारब्ध कर्मबाट प्राप्त शरीर तुरुन्तै छाडिदिएका थिए । उनीहरूका सञ्चित कर्म लगायतका प्रारब्ध कर्महरू पनि तुरुन्तै समाप्त भएका थिए ।

वास्तवमा सिद्ध तथा सत्य वस्तुले मनका भावको अपेक्षा राख्दैन भन्ने शास्त्रीय वचन अनुसार उनीहरूले जारबुद्धि राखेर भगवान् श्रीकृष्णसँग प्रेम र आलिङ्गनादि गरेका भएता पनि उनीहरू तुरुन्तै मुक्त भएका थिए । यहाँ जार भन्नाले उपपति भन्ने सामान्य अर्थ बुझिन्छ । अमरकोषमा जारलाई उपपति भनिएको छ । जस्तै– **'धवःप्रियः पतिर्भर्ता जारस्तूपपतिः समौ'** जारलाई पापपतिः भनेर त्रिकाण्डशेषादि कोषमा उल्लेख भएको छ । यसै गरेर **'जीर्यति अनेन स्त्रिया सतीत्वम्', 'जरयति इति जारः'** भनेर वामन शिवराम आप्टेले आफ्नू संस्कृतशब्दकोषमा जार शब्दको व्युत्पत्ति गर्नु भएको छ। तर जारको अर्थ उपपतिमात्र नभएर **'जरयति संसाररोगम् इति जारः'** अथवा **'जरयति कामक्रोधादि दुर्गुणान् इति जारः'** भनेर वंशीधर शर्माले जारको व्युत्पत्ति गर्नुभएको छ । अतः यहाँ जार शब्दले गोपीहरूका कामक्रोधादि सम्पूर्ण दोषहरूलाई भस्म गराएर पवित्र गराउने भगवान् श्रीकृष्णाको ब्रह्मात्मक तथा चिन्मयस्वरूप भएको प्रमाणित हुन्छ ।

यसरी बाहिरबाट हेर्दा गोपीहरू सामान्य अरू ग्रामीण नारीहरू जस्तै देखिन्थेता पनि उनीहरू सदा सिद्धा चिन्मयस्वरूपा थिए । अर्को शब्दमा भन्ने हो भने उनीहरू आत्मरमणकालागि परब्रह्म परमेश्वरले आफ्ना बुद्धिवृत्तिमा प्रतिस्फलन गराइएका प्रतिविम्बहरूमात्रै थिए । सो कुरा मैले माथि नै उल्लेख गरिसकेको छु । आप्तकाम, आत्मकाम र सर्वकाम भगवान् श्रीकृष्णाले आत्मरमणकालागि आफ्नै बुद्धिमा लाखौँ करोडौँ वृत्तिहरू सिर्जना गरेर खेल्नु भएको हो । त्यहाँ न वृन्दावन नै थियो । त्यहाँ न कालिन्दी नदी नै थिइन् । त्यहाँ न कोही साथीसँगी नै थिए । त्यहाँ केवल योगेश्वर भगवान् श्रीकृष्णमात्रै

हुनुहुन्थ्यो। भगवान्‌का विशुद्ध चित्तका वृत्तिहरूमा प्रतिभासित भगवान्‌को आभासबाट नै लाखौँ करोडौँ गोपीहरू सिर्जना भएका थिए। अतः यसबाट के प्रमाणित हुन्छ भने चिन्मय ब्रह्मको प्रतिबिम्ब नै गोपीतत्त्व हो। यही नै परमतत्त्व र परम सत्य पनि हो।

केही विद्वान्‌हरूले रासलीलालाई आध्यात्मिक र वैयक्तिकरूपमा पनि वर्णन गर्नुभएको पाइन्छ। उहाँहरूले श्रीकृष्णलाई आत्मा, राधालाई आत्माकार वृत्ति, गोपीहरूलाई आत्माभिमुख वृत्तिहरू र तिनीहरूको निरन्तर आत्मरमणलाई रास भनेर भन्नु भएको छ। अतः यसबाट के प्रमाणित हुन्छ भने आत्माभिमुख बुद्धिका अनन्त वृत्तिहरू नै गोपीहरू हुन् र गोपीतत्त्व पनि यही हो। अस्तु। श्रीकृष्णार्पणमस्तु।

# चतु:श्लोकीभागवत

श्रीमद्भागवतमहापुराणको द्वितीयस्कन्धको नवौँ अध्यायको ३२ औँ श्लोकदेखि ३५ औँ श्लोकसम्मका ४ श्लोकहरूलाई चतुःश्लोकीभागवत भनिन्छ । भगवान् नारायणले सृष्टिकार्यमा संलग्न हुनुभन्दा पहिले ब्रह्मालाई सुनाउनु भएको यही चतुःश्लोकीभागवतबाट विस्तारित १८००० श्लोक भएको श्रीमद्भागवतमहापुराण हो । सर्वप्रथम भगवान् नारायणले यो भागवत ब्रह्मालाई सुनाउनु भएको थियो । सोही भागवत ब्रह्माले नारदलाई, नारदले वेदव्यासलाई, वेदव्यासले आफ्ना छोरा शुकदेवलाई र शुकदेवले राजा परीक्षित्लाई सुनाउनु भएको थियो । सोही श्रीमद्भागवतमहापुराण बिस्तारै बिस्तारै सबैतिर फैलिँदै गएको हो । वेदव्यासद्वारा विस्तारित त्यही भागवत नै प्रसिद्ध श्रीमद्भागवतमहापुराण हो । १८००० श्लोकमा प्रणीत उक्त विशाल श्रीमद्भागवतमहापुराणको बीजभूत चतुःश्लोकी भागवतका बारेमा म यहाँ सङ्क्षिप्त चर्चा गर्न लागेको छु ।

चतुःश्लोकी भागवत **'अहमेवासमेवाग्रे'** भन्ने प्रथम श्लोकबाट शुरु भएर **'एतावदेव जिज्ञास्यम्'** भन्ने चौथो श्लोकमा पुगेर यो समाप्त हुन्छ । प्रथम श्लोकदेखि लिएर चौथो श्लोकसम्ममा सम्पूर्ण वेदको तात्त्विक अर्थको अत्यन्त सूक्ष्म तथा सङ्क्षिप्तरूपमा व्याख्या गरिएको छ । सम्पूर्ण वेदहरूलाई यिनै ४ श्लोकहरूमा ल्याएर समेटिएको छ । यी ४ श्लोकहरू अनुष्टुप् छन्दमा छन् । सरसरती पढ्दा सरल जस्ता देखिने यी मन्त्रहरूको अर्थ बुझ्न भने अत्यन्त

कठिन पर्दछ । सम्पूर्ण वेदहरूको गूढ रहस्यलाई यिनै ४ श्लोकहरूमा घनीभूतरूपमा ठसाठस भरेर भगवान् नारायणले ब्रह्माजीलाई सुनाउनु भएको हुँदा साधारण प्रतिभा भएका मान्छेले यिनको अर्थ सजिलै बुझ्न मुश्किल पर्दछ । तिनै चारश्लोक अर्थात् चतुश्लोकी भागवतको प्रथम श्लोकलाई यहाँ प्रस्तुत गरिन्छ । जस्तै–

**अहमेवासमेवाग्रे नान्यद् यत् सदसत्परम् ।**
**पश्चादहं यदेतच्च योऽवशिष्येत सोऽस्म्यहम् ।।१।।**

अर्थात् म नै सृष्टिभन्दा पहिले थिएँ । मदेखि बाहेक सत् अर्थात् स्थूल, असत् अर्थात् सूक्ष्म र तीभन्दा पर रहेको तिनको कारण प्रधान पनि थिएन । किनभने प्रधान पनि त्यस बेला मैभित्र लीन थियो । म पनि त्यस समयमा एक्लै थिएँ र मैले अरू केही पनि सृष्टि गरेको थिइन । सृष्टि भइसकेपछि पनि म नै रहन्छु । यो दृश्यमान् विश्व पनि मै नै हुँ । प्रलयपछि जे बाँकी रहन्छ त्यो पनि मै नै हुँ । यसप्रकार अनादि, अनन्त र अद्वितीय भएको हुँदा म परिपूर्ण हुँ ।

यसरी यस श्लोकलाई सरसरती हेर्दा यसको अर्थ सरल जस्तो देखिन्छ । तर यसको गहिरिएर अध्ययन गर्दा यसमा वेदको गूढ अर्थ लुकेको देखिन्छ । यसै कुरालाई उपनिषद्मा यसरी बताइएको छ । जस्तै– **'सदेव सोम्येदमग्र आसीदेकमेवाद्वितीयम् । तद्धैक आहुरसदेवेदमग्र आसीदेकमेवाद्वितीयं तस्मादसतः सज्जायत'** *(छान्दोग्योपनिषद् ६।२।१)* अर्थात् हे सोम्य ! आरम्भमा एकमात्र अद्वितीय सत्मात्र थियो । यसैका बारेमा कसैकसैले आरम्भमा त्यो एउटा अद्वितीय असत्मात्रै थियो र त्यसै असत्बाट नै सत्को उत्पत्ति भएको हो भनेर भनेका छन् । यहाँ असत् भन्नाले बौधमार्गीहरूको शून्यलाई

लिनु हुँदैन । शून्यवादी अर्थात् असत्वादी बौधहरूले शून्यबाट अर्थात् असत्बाट सृष्टि भएको हो भनेका छन्। तर असत्बाट सत्को उत्पत्ति हुन नसक्ने हुँदा असत् अर्थात् अव्याकृत ब्रह्मबाट यस व्याकृत अर्थात् दृश्यमान् संसारको उत्पत्ति भएको हो भनेर सद्वादीहरूले भनेका छन्। कुनै पनि प्रमाणबाट असत्बाट सत्को उत्पत्ति हुन सक्तैन। बीजको नाश भएपछि अङ्कुरको उत्पत्ति हुने हुँदा बीजको असत्बाट नै सत् अङ्कुरको उत्पत्ति हुने असद्वादीहरूको भनाइ ठीक छैन। किनभने बीज नै रूपान्तरित भएर अङ्कुरकारूपमा देखा पर्ने हुँदा बीजरूपी सत्बाट नै अङ्कुरको उत्पत्ति भएको देखिन्छ। सद्ब्रह्मबाट  यो संसार ब्रह्मकै विवर्तरूपमा देखा पर्नेहुँदा यो सारा सृष्टिमा सद्ब्रह्म नै ओतप्रोत भएर रहेको छ। सद्ब्रह्मबाट उत्पन्न भएको सृष्टि अन्त्यमा सद्ब्रह्ममा नै गएर पर्यवसान हुन्छ। त्यसपछि पनि एक तथा अद्वितीय सद्ब्रह्ममात्रै बाँकी रहन्छ। यो **'अहमेवासमेवाग्रे'** भन्ने प्रथम श्लोकले उपनिषद्को यही अर्थलाई नै प्रकाशन गरेको छ।

**ऋतेऽर्थं यत्प्रतीयेत न प्रतीयेत चात्मनि।**
**तद्विद्यादात्मनो मायां यथाभासो यथा तमः ॥२॥**

ब्रह्माजीले भगवान्सँग भागवतको यसै अध्यायको २६ औँ श्लोकमा **'यथात्ममाया योगेन'** भनेर सोध्नु भएको थियो। मायाका बारेमा पनि प्रश्न सोधिएको हुँदा त्यसै मायाको बारेमा यस श्लोकमा भगवान् नारायण ब्रह्माजीलाई आज्ञा हुन्छ। अर्थात् कुनै विषय नभएर पनि म अधिष्ठानसत्ताका रूपमा रहेको ब्रह्ममा सबै प्रपञ्च देखिनु र म सबैतिर भएर पनि नदेखिनु यो सबै मायाको काम हो। जस्तै– आकाशमा भएको एक चन्द्रमालाई

हुँदै नभएका दुई चन्द्रमाहरू देख्नु र ग्रहमण्डलमा विद्यमान राहुलाई नदेख्नु । वास्तविकरूपमा केही नभएर पनि देखिने र भएर पनि नदेखिने जुन यो भूलभुलैया हो, यो सबै अनिर्वचनीया मायाको काम हो भनेर जान्नु पर्दछ । यसको अर्थ परमात्मा परब्रह्म सर्वत्र भएर पनि देखिँदैन तर त्यसै परमात्मामा विवर्तरूपमा सिर्जित मिथ्यारूप संसार भने सबैतिर देखिन्छ ।

**यथा महान्ति भूतानि भूतेषूच्चावचेष्वनु ।**
**प्रविष्टान्यप्रविष्टानि तथा तेषु न तेष्वहम् ॥३॥**

भगवान् नारायणले यसै अध्यायको ३१ औँ श्लोकमा **'यावानहं यथाभावः'** भन्नु भएको कुरालाई यस श्लोकमा स्पष्ट गर्दै भन्नुहुन्छ, अर्थात् जसरी प्राणीहरूमा पृथिवी आदि पञ्चमहाभूतहरूबाट बनेका सानाठूला प्राणीहरूका शरीरहरूमा आकाशादि पञ्चमहाभूतहरू कारणरूपमा शुरुमा नै पसिसकेका हुन्छन् । त्यसरी पहिले नै पञ्चमहाभूतहरू कारणरूपले प्राणीहरूका शरीरमा पसिसकेका हुँदा पछिबाट न पसेका पनि हुन् । अर्कातर्फ त्यसैगरेर प्राणीहरूका शरीरमा आत्मरूपले पहिले नै परमात्मा पसिसकेको हुँदा पछि नपसेको पनि हो, अथवा आत्मदृष्टिले सर्वत्र परमात्मामात्रै रहेकाले पस्नु पर्ने आवश्यकतै छैन । यसैकारणले नपसेको पनि हो । यसको तात्पर्य सबै भूतभौतिक सृष्टिमा ब्रह्म अनुस्यूत भएर रहेको छ र छैन पनि । सबै सृष्टिमा ब्रह्मको सत्ता छ भन्दा प्रपञ्च पारमार्थिक हुनजान्छ । अर्थात् ब्रह्मजस्तै अनादि, अनन्त र अद्वितीय हुनजान्छ । अर्कोतिर ब्रह्म पनि प्रपञ्चजस्तै मिथ्या हुनजान्छ । त्यसैकारण भगवान्ले प्रपञ्च अथवा भूतभौतिक सृष्टिमा म पसेको पनि छु र म पसेको पनि छैन भनेर भन्नु भएको हो ।

समस्त प्रपञ्चलाई ब्रह्मको विवर्त मानिएको छ। विवर्त मानेपछि पसेको पनि ठहर्छ र नपसेको पनि ठहर्छ। रज्जुमा सर्प पसेको पनि हो र नपसेको पनि हो। पसेको छ भनौं भने डोरीको अज्ञान नाश भएपछि सर्प देखिँदैन। पसेको छैन भनौंभने डोरीमा अध्यस्त सर्पको डरले मानिसको मृत्यु पनि हुनसक्तछ। यसै कुरालाई उपनिषद्ले पनि यसरी व्याख्या गरेको छ। जस्तै–**'स यथोर्णनाभिस्तन्तुनोच्चरेद्यथाग्नेः क्षुद्रा विस्फुलिङ्गा व्युच्च–रन्त्येवमेवास्मादात्मनः सर्वे प्राणाः सर्वे लोकाः सर्वे देवाः सर्वाणि भूतानि व्युच्चरन्ति'** *(बृ.उ. २।१।२०)* अर्थात् जसरी त्यो माकुरो आफ्नै धागोमा माथि जान्छ, आगोबाट अनेकौं स–साना झिल्काहरू निस्कन्छन्। त्यसैगरेर ब्रह्मबाट सम्पूर्ण प्राणीहरू, सम्पूर्ण लोकहरू, सम्पूर्ण देवताहरू र सम्पूर्ण भूतहरू नानाप्रकारले उत्पन्न हुन्छन्। आत्मा अर्थात् ब्रह्मबाट समस्त भूतप्राणी सहित ब्रह्माण्डको उत्पत्ति हुने कुरा बृहदारण्यक उपनिषद्मा उल्लेख भएको छ।

यसै गरेर यस बारेमा गीतामा पनि उल्लेख गरिएको छ। जस्तै– **'मया ततमिदं सर्वं जगदव्यक्तमूर्तिना। मत्स्थानी सर्व भूतानि न चाहं तेष्ववस्थितः॥'** *(गीता ९।४)* अर्थात् म अव्यक्त ब्रह्ममा यो सम्पूर्ण चराचर विश्व ओतप्रोत भएको छ। सम्पूर्ण भूतप्राणीहरू ममा नै स्थित छन् भने म चाहिँ तिनमा स्थित छैन। भगवान् श्रीकृष्ण भन्नुहुन्छ– म अव्यक्तरूपमा परमात्मा हुँ। मेरो जुन परमभाव छ। जसको स्वरूप प्रत्यक्ष छैन। अर्थात् जो मन, बुद्धि र इन्द्रियहरूको विषय हुन सक्तैन। त्यस्तो मेरो अव्यक्तमूर्तिद्वारा यो समस्त जगत् व्याप्त छ, अर्थात् परिपूर्ण छ। मेरो त्यस अव्यक्तमूर्ति परमात्मामा ब्रह्मादेखि भुसुनासम्म रहेका छन्।

आद्यजगद्गुरु श्रीशङ्कराचार्यले पनि भन्नुभएको छ। जस्तै – **'सत्यपि भेदापगमे नाथ तवाहं न मामकीनन्त्वम्। सामुद्रो हि तरङ्गः क्वचन समुद्रो न तारङ्गः॥'** *(षट्पदी ३)* अर्थात् हे नाथ ! हजूर र मेरा बीचमा भेद छैन तापनि म चाहिँ हजूरको हुँ। हजूर भने मेरो होइन। किनभने तरङ्ग चाहिँ समुद्रको हो तर तरङ्गको भने समुद्र होइन। त्यसैगरेर महाभारतको शान्तिपर्वको मोक्षधर्मपर्वको अनुस्मृतिमा पनि यस कुराको वर्णन पाइन्छ। जस्तै – **'अव्यक्तं बुद्ध्यहङ्कारमनोभूतेन्द्रियाणि च। त्वयि तानि च तेषु त्वं न तेषु त्वं न ते त्वयि।'** अर्थात् अव्यक्त, बुद्धि, अहङ्कार, मन, पञ्चमहाभूत र इन्द्रियहरू पनि सबै तपाईंमा छन्। तर तिनमा तपाईं हुनुहुन्न। अर्कोतिर त्यसको विपरीत तिनीहरूमा तपाईं हुनुहुन्छ तर तपाईंमा तिनीहरू छैनन्।

यसरी सबै भूतप्राणीहरूको वास्तविक स्वरूप म नै हुँ। त्यसैकारण अज्ञानीहरू मलाई उनीहरूमा स्थित रहेको ठान्दछन्। तर म तिनमा स्थित छैन। किनभने साकार सगुण वस्तुहरूमा जस्तो गरेर ममा सङ्गदोष पट्क्कै छैन। त्यसकारण म संसर्गविना नै अत्यन्त सूक्ष्मरूपले आकाश जस्तै सर्वत्र व्याप्त छु। अर्थात् म सूक्ष्मतत्त्व आकाशभित्र पनि अन्तर्यामीरूपले रहेको छु। सङ्गहीन वस्तु कहीँ पनि र कहिल्यै पनि आधेयभावबाट रहँदैन, केवल आधारभावमा मात्र रहन्छ। अथवा त्यो परम अन्तिम तत्त्व कहीँ कतै पनि टाँसिएर बस्तैन र उसमा पनि केही टाँसिएर रहन सक्तैन।

**एतावदेव जिज्ञास्यं तत्त्वजिज्ञासुनाऽऽत्मनः।**
**अन्वयव्यतिरेकाभ्यां यत्स्यात्सर्वत्र सर्वदा ॥४॥**

अर्थात् यी माथिका श्लोकहरूमा वर्णन गरिएका कुराहरूलाई

ब्रह्मज्ञानमा लागेका जिज्ञासुहरूले अत्यन्त सावधानीका साथ रातदिन विचार गर्नुपर्दछ । ब्रह्मविचार गर्दा जिज्ञासुहरूले अन्वय अर्थात् विधिमुख र व्यतिरेक अर्थात् निषेधमुखद्वारा पनि विचार गर्नुपर्दछ । अन्वय भनेको भूतभौतिक जगत्मा अर्थात् ब्रह्मको विवर्तरूप कार्यप्रपञ्चमा कारणका रूपले ब्रह्म अर्थात् सत्को अनुवृत्ति हुनु हो । कारण अवस्थामा त्यस प्रपञ्चबाट ब्रह्म अर्थात् सद् व्यतिरेक अर्थात् अलग हुनु हो । सारांशमा भन्नुपर्दा महाप्रलयपछि कारणब्रह्ममात्रै बाँकी रहन्छ, कार्यसंसार बाँकी रहँदैन । जाग्रदादि अवस्थाहरूमा ती सबै अवस्थाहरूको साक्षीको रूपमा ब्रह्म अर्थात् सत् विद्यमान रहने हुँदा अन्वय र ती जाग्रत्, स्वप्न र सुषुप्ति अवस्थाहरू समाधिको अवस्थामा नरहने हुँदा त्यो व्यतिरेक हो । यसरी अन्वय र व्यतिरेक दुवै विधाबाट जिज्ञासुले सर्वात्मक ब्रह्मको अनुभूति अर्थात् अपरोक्षानुभूति गर्नुपर्दछ ।

यसैलाई केही व्याख्याताहरूले यसरी पनि व्याख्या गरेको पाइन्छ । **'नेति नेति'** भनेर निषेधमुखबाट र **'अयं ब्रह्म अयं ब्रह्म'** भनेर विधिमुखबाट पनि सर्वातीत तथा सर्वस्वरूप ब्रह्म नै वास्तविक तत्त्वका रूपमा सर्वदा सबैतिर विद्यमान भएको देख्नुपर्दछ । ब्रह्मज्ञान गर्न चाहने जिज्ञासुले यसलाई अन्वय र व्यतिरेक विधिबाट जान्नुपर्दछ ।

वास्तवमा **'नेति नेति'**को अर्थ पहिलो नेतिले मायाको कार्यलाई निषेध गर्ने र दोस्रो नेतिले मायालाई समेत निषेध गर्ने हो । त्यसपछि बाँकी जे रहन्छ त्यही नै ब्रह्म हो । यसै कुरालाई भागवतमा भनिएको पनि छ । जस्तै–

**सवै न देवासुरमर्त्यतिर्यङ्**
**न स्त्री न षण्ढो न पुमान् न जन्तुः ।**
**नायं गुणः कर्म न सन्न चासन्**
**निषेधशेषो जयतादशेषः ॥**

– *भागवत ८।३।२४*

अर्थात् परमात्मा परब्रह्म देवता पनि होइनन्, असुर पनि होइनन्, मनुष्य पनि होइनन् र पशुपक्षी पनि होइनन् । ती स्त्री पनि होइनन्, पुरुष पनि होइनन् र नपुंसक पनि होइनन् । ती साधारण तथा असाधारण प्राणी पनि होइनन् । ती गुण, कर्म, कारण र कार्य समेत केही होइनन् । सम्पूर्ण कुराको निषेध भएपछि जे कुरा बाँकी रहन्छ त्यही नै उनको अवशिष्ट स्वरूप हो । त्यही शेष नै अशेषतत्त्व अर्थात् ब्रह्मतत्त्व हो । यसै कुरालाई रामगीतामा पनि भनिएको छ । जस्तै–

**नेति प्रमाणेन निराकृतोऽखिलो हृदा समास्वादित चिद्घनामृतः ।**
**त्यजेदशेषं जगदात्तसद्रसं पीत्वा यथाम्भः प्रजहाति तत्फलम् ॥**

अर्थात् उपनिषद्मा उल्लेख भएको पहिलो **'नेति'** माया र दोस्रो **'नेति'** मायाको कार्यसमेतलाई यी प्रमाणहरूले हटाएर आफ्नो विशुद्ध अन्तःकरणद्वारा अत्यन्त तिर्खाएको मान्छेले नरिवलभित्र रहेको जल खाए झैँ गरेर ब्रह्मानन्दरूपी अमृतलाई पान गरेर नरिवलको बाहिरको बोक्रो फ्याँके झैँ गरेर मुमुक्षु पुरुषले यस असार संसारलाई त्याग गरिदिनु पर्दछ ।

वेदहरू अन्त्यमा गएर भगवान्को निषेधमुखद्वारा स्तुति गर्दै आफ्नू वाणीलाई विराम दिन्छन् । जस्तै–

**द्युपतय एव ते न ययुरन्तमनन्ततया**
**त्वमपि यदन्तराण्डनिचया ननु सावरणाः ।**
**ख इव रजांसि वान्ति वयसा सह यच्छ्रुतय-**
**स्त्वयि हि फलन्त्यतन्निरसनेन भवन्निधनाः ॥**

*- भागवत १०।८७।४१*

अर्थात् हे भगवन् ! स्वर्गका इन्द्र आदि देवताहरू पनि अनन्त हजूरको इयत्ताको पत्तो पाउन सक्तैनन् । हजूर आफैँ पनि आफैँलाई जान्नुहुन्न । आकाशमा धूलाका असङ्ख्य कणहरू घुमेझैँ गरेर हजूरका अर्थात् कालका वेगले गर्दा हजूरभित्र तीभन्दा दशगुना उत्तरोत्तर ठूला सप्त आवरणहरूले आवृत कोटिकोटि ब्रह्माण्डहरू निरन्तर घुमिरहन्छन् । यस्ता परमात्माको कसले इयत्ता पाउँन सक्तछ ? हामी श्रुतिहरू पनि हजूरका स्वरूपको सोझै विधिमुखबाट वर्णन गर्न सक्तैनौँ । हजूर बाहेकका अरू अतद्वस्तुहरू हटाएर अर्थात् अतद्वस्तुको व्यावृत्ति गरेर निषेधमुख अर्थात् **'नेति नेति'**द्वारा हजूरको गुणगान गर्दै नदीहरू समुद्रमा गएर विलीन भएजस्तै गरेर हामी वेदहरू पनि अन्त्यमा हजूरमा नै गएर पर्यवसित हुन्छौँ ।

**'निषेध शेषो जयतादशेषः'** अर्थात् निषेधपछि जे शेष रहन्छ त्यही नै ब्रह्म हो भनेर भागवतले पनि भनेको छ । निषेधमुखले तत्त्वको प्रतिपादन गर्दा चाँडै तत्त्वको ज्ञान हुने र विधिमुखले तत्त्वको प्रतिपादन गर्दा जान्नुपर्ने कुरा जहिले पनि बाँकी नै रहने हुनाले **'नेति नेति'**बाट नै ब्रह्म बुझ्न सजिलो हुनेकुरा वेदान्तदर्शनको निष्कर्ष हो । अस्तु । श्रीकृष्णार्पणमस्तु ।

# अद्वैतसिद्धि

अद्वैतवेदान्तका प्रकाण्ड विद्वान् स्वामी श्रीमधुसूदन सरस्वती लोकोत्तर प्रतिभाले सम्पन्न व्यक्ति हुनुहुन्थ्यो। उहाँ अद्वैतमार्गका साथै भक्तिमार्गका पनि निष्णात मनीषी हुनुहुन्थ्यो भन्ने कुरा उहाँका अद्वैतसिद्धि र भक्तिरसायनजस्ता उत्कृष्ट ग्रन्थहरूबाट थाहा हुन्छ। उहाँको जन्म सन् १५४० मा भारतको बङ्गाल प्रदेशको फरीदपुर जिल्लाअन्तर्गत पोटालीपाडा प्रगण्डामा एक नैष्ठिक ब्राह्मणपरिवारमा भएको थियो। उहाँका पिताको नाम प्रमोद पुरन्दराचार्य थियो। उहाँ एक तपस्वी तथा विद्वान् व्यक्ति हुनुहुन्थ्यो। उहाँका चार भाइ छोराहरूमध्ये श्रीमधुसूदन सरस्वती साँहिला छोरा हुनुहुन्थ्यो। उहाँको न्वारानको नाम कमलजनयन थियो। श्रीमधुसूदन सरस्वतीको शुरुको पढाइ बङ्गालको नवद्वीपमा नै त्यस समयका न्यायका प्रसिद्ध विद्वान् श्रीमथुरानाथ तर्कवागीशसँग भएको थियो। तर्कवागीशसँग न्यायशास्त्र पढेपछि श्रीमधुसूदन सरस्वती वाराणसी जानुभएको थियो। त्यहाँ गएपछि श्रीविश्वेश्वर सरस्वतीसँग उहाँले अद्वैतवेदान्तको अध्ययन गर्नुभयो र उहाँबाटै संन्यास पनि ग्रहण गर्नुभयो। त्यसपछि कमलजनयन स्वामी श्रीमधुसूदन सरस्वतीका नामबाट अद्वैतवेदान्तको आकाशमा उदित हुनुभयो। श्रीमधुसूदन सरस्वतीले आफ्ना गुरु श्रीविश्वेश्वर सरस्वतीका बारेमा आफ्ना ग्रन्थहरूमा धेरै ठाउँमा उल्लेख गर्नुभएको छ। जस्तै– उहाँले लेख्नुभएको श्रीमद्भगवद्गीताको गूढार्थदीपिका टीकाको प्रत्येक अध्यायका पुष्पिकामा आफ्ना गुरु श्रीविश्वेश्वर सरस्वतीको नाम अत्यन्त आदरका साथ उल्लेख गर्नुभएको छ।

यसका साथै धेरै ठाउँमा श्लोकबद्ध गरेर पनि गुरुको स्तुति गर्नुभएको छ । जस्तै–

**मामक्षरं यः परमक्षरं हि परोपदेशेन चिदक्षरेण ।**
**चकार विभ्रान्त्यपनोदविद्यस्तं काशिराजं गुरुराजमीडे ॥**

यसका अतिरिक्त आफ्ना सम्बन्धमा पनि अद्वैतसिद्धिनामक ग्रन्थका शुरुमा नै –

**श्रद्धाधनेन मुनिना मधुसूदनेन**
**सङ्गृह्य शास्त्रनिचयं रचितातियत्नात् ।**
**बोधाय वादि विजयाय च सत्वराणा–**
**मद्वैतसिद्धिरियमस्तु मुदे बुधानाम् ॥**

भनेर लेख्नुभएको छ। अद्वैतसिद्धिको प्रणयन स्वामी श्रीमधुसूदन सरस्वतीबाट कुन सन्दर्भमा भएको थियो र सो लेख्नुको उद्देश्य के थियो भन्ने आदि समेतका सम्बन्धमा तल उल्लेख गरिनेछ। यहाँ उहाँका केही महत्त्वपूर्ण ग्रन्थहरूको नाम उल्लेख गर्नु प्रासङ्गिक ठान्दछु। जो यसप्रकार छन् – १.अद्वैतसिद्धि, २.सिद्धान्तबिन्दु, ३. गूढार्थदीपिका (श्रीमद्भगवद्गीताको टीका) ४.भक्तिरसायन अथवा भगवद्भक्तिरसायन, ५.शिवमहिम्नस्तोत्रव्याख्या, ६.वेदान्त–कल्पलतिका, ७.अद्वैतरत्नरक्षण, ८.सारसङ्ग्रह, ९.वेदस्तुतिटीका, १०.हरिलीलाविवेक, ११.परमहंसप्रिया, १२.कृष्णाकुतूहलनाटक, १३. आत्मबोधटीका, १४.ईश्वरप्रतिपत्तिप्रकाश ।

अद्वैतवेदान्तका साथै भक्तिमार्गका पनि अद्वितीय विद्वान् श्रीमधुसूदन सरस्वती संस्कृतजगत्का एक मूर्धन्य व्यक्तित्व भएको कुरा विवादरहित छ। श्रीमधुसूदन सरस्वतीको समय सन् १५४०–१६४७ मानिएको छ। रामचरितमानसका रचयिता गोस्वामी

श्रीतुलसीदासको समय पनि यसै बीचलाई मानिएको छ । यी दुई विद्वान्हरू समकालीनमात्र थिएनन् बरू दुवै विद्वान्हरूका बीचमा घनिष्ट मित्रता पनि भएको देखिन्छ । यसको प्रमाणका रूपमा त्यस समयमा रामायणलाई भाषामा रूपान्तरण गरेको हुँदा त्यस बेलाका सम्पूर्ण संस्कृतका विद्वान्हरूले श्रीतुलसीदासको घोर विरोध गरेका थिए । यसै कुरालाई लिएर श्रीतुलसीदासले श्रीमधुसूदन सरस्वतीलाई पत्र लेख्नुभएको थियो । जस्तै –

**हरिहरयश सुरनरगिरा वरणहिँ सन्त सुजान ।**
**हाँडी हाटक चारु रुचि राँधे स्वाद समान ॥**

अर्थात् जस्तै सुन अथवा माटाका हाँडीमा पकाएको भातमा समेत कुनै स्वाद फरक पर्दैन । त्यस्तै भगवान्को गुणगान संस्कृतमा अथवा भाषामा गरे पनि त्यसको भाव, अर्थ र प्रभावमा समेत कुनै फरक पर्दैन । यसको जबाफमा श्रीमधुसूदन सरस्वतीले श्रीतुलसीदासको प्रशंसा गर्दै संस्कृतभाषामा उत्तरपत्र लेख्नुभएको थियो । जस्तै –

**परमानन्दपत्रोऽयं जङ्गमस्तुलसीतरुः ।**
**कवितामञ्जरी तस्य रामभ्रमरभूषिता ॥**

अर्थात् तुलसीदास एउटा यस्ता हिँड्ने डुल्ने तुलसीका वृक्ष हुन् जसको कवितारूपी मञ्जरी रामरूपी भमराबाट सुशोभित भएको छ ।

श्रीमधुसूदन सरस्वतीको नाम अकबरको समयमा अबुलफल्ज (सन् १५९८) ले तयार गरेको आईने अकबरीमा अरू विद्वान्का साथ उल्लेख भएको पाइन्छ । किंवदन्ती अनुसार श्रीमधुसूदन सरस्वतीको घनिष्ट सम्बन्ध अकबरका अर्थमन्त्री टोडर मलसँग

भएको बुझिन्छ। एकपटक विद्वान् श्रीमधुसूदन सरस्वतीलाई उनको विद्वत्ताबाट प्रभावित भएर बादशाहा अकबरले वाराणसीबाट दिल्लीमा सम्मानका लागि बोलाएका थिए भन्ने भनाइ पाइन्छ। उहाँका सम्मानमा एउटा विशाल विद्वत्सभाको आयोजना गरिएको थियो। सभाको सभापतित्व विद्वान् श्रीमधुसूदन सरस्वतीबाट नै भएको थियो। उहाँको विद्वत्ताबाट प्रभावित भएर त्यस सभामा बादशाहा अकबर र सम्पूर्ण सभासद्समेतले सर्वसम्मतिबाट श्रीमधुसूदन सरस्वतीलाई अभिनन्दन गरेका थिए। जुन अभिनन्दनपत्रमा तलका कुराहरू उल्लेख गरिएका थिए। जस्तै –

**वेत्ति पारं सरस्वत्या मधुसूदनसरस्वती।**
**मधुसूदनसरस्वत्याः पारं वेत्ति सरस्वती॥**

यी माथि उल्लेख भएको शब्दावलीद्वारा उहाँको प्रशंसा गरिएको थियो। श्रीमधुसूदन सरस्वती त्यस समयका कति ठूला विद्वान् हुनुहुन्थ्यो भन्ने कुरा यसबाट पनि थाहा हुन्छ। स्वामी श्रीमधुसूदन सरस्वतीले लेख्नुभएका थुप्रै महत्त्वपूर्ण ग्रन्थहरू छन्। तिनमा अद्वैतवेदान्तपरक अद्वैतसिद्धिग्रन्थलाई पनि लिन सकिन्छ। यो ग्रन्थ नव्यन्यायको शैलीमा लेखिएको आजसम्मको सबैभन्दा प्रौढ र दुरूह ग्रन्थ हो। केही विद्वान्हरूको भनाइअनुसार अद्वैतसिद्धि कुनै खास मौलिक ग्रन्थ नभएर अद्वैतवेदान्तका विरुद्धमा व्यासराज तीर्थद्वारा लेखिएको न्यायामृतग्रन्थको आमूलचूल आनुपूर्वी खण्डन गर्न लेखिएको ग्रन्थ हो। अद्वैतसिद्धिग्रन्थको प्रतिपादनशैली अत्यन्त सुदृढ, परिष्कृत, वैदुष्यपूर्ण र प्राञ्जलसमेत भएको हुँदा सामान्य व्यक्तिले यस ग्रन्थलाई व्यासराज तीर्थको ग्रन्थ न्यायामृतको खण्डन गर्न लेखिएको ग्रन्थ हो भनेर पत्ता लगाउन सक्तैन। श्रीगौड ब्रह्मानन्द स्वामीले अद्वैतसिद्धिको

टीका लघुचन्द्रिकामा कहींकहीं व्यासराजको न्यायामृत ग्रन्थको उल्लेख गर्नुभएको छ । तर अद्वैतसिद्धिग्रन्थको मूलमा भने कहीं पनि न्यायामृत ग्रन्थको उल्लेख श्रीमधुसूदन सरस्वतीले गर्नुभएको छैन । अद्वैतदर्शनको विशाल परिवारमा यस प्रकारका प्रमेयबहुल, परिष्कृत तथा सुदृढ प्रक्रियायुक्त अन्य ग्रन्थहरू देखिँदैनन् । अद्वैतवेदान्तको संसारमा यो अद्वैतसिद्धिग्रन्थ वास्तवमा महासागर नै हो भन्दा कुनै अत्युक्ति गरेको ठहरिने छैन ।

अद्वैतसिद्धिग्रन्थको प्रतिपादनशैली नितान्त प्राञ्जल र परिष्कृतसमेत छ । भाषामा कहीं कतै पनि सभ्यता र वादको मर्यादालाई उल्लङ्घन गरेको पाइँदैन । न्यायामृतग्रन्थमा जस्तो कटु भाषा यसमा श्रीमधुसूदन सरस्वतीले प्रयोग गर्नुभएको छैन । वास्तवमा माध्वसम्प्रदायका प्रखर विद्वान् श्रीव्यासराज तीर्थले आफ्नू न्यायामृतम् भन्ने दार्शनिकग्रन्थमा अद्वैत वेदान्तमा प्रतिपादित कैयौँ मूल सिद्धान्तहरूलाई अत्यन्त तर्क र प्रमाणका साथ खण्डन गर्दै द्वैतसिद्धान्तको अत्यन्त सुदृढताका साथ स्थापना गर्नुभएको छ । माध्वसम्प्रदायका विद्वत्परम्परामा श्रीव्यासराज तीर्थको ठूलो स्थान छ । जब द्वैतको विशाल आकाशमा द्वैतको एकछत्र आधिपत्यलाई चिर्दै अद्वैतसिद्धान्त उद्भासित भएको थियो । त्यसैबेलादेखि नै अद्वैत र द्वैत सम्प्रदायका आचार्यहरूमा एक अर्काका सिद्धान्तको खण्डन र मण्डन गर्दै विभिन्न ग्रन्थहरूको रचना गर्नु एक किसिमको परम्परा नै चलेको थियो ।

आद्यजगद्गुरु श्रीशङ्कराचार्यभन्दा पूर्ववर्ती विद्वान् भर्तृप्रपञ्च लगायत अन्य दर्शनका विभिन्न विद्वान्हरूका अद्वैतविरोधी तर्कहरूलाई सप्रमाण सशक्तरूपमा खण्डन गर्दै आफ्नू अद्वैतपरक सिद्धान्तलाई स्थापना गर्न प्रस्थानत्रयी (ब्रह्मसूत्र, गीता र उपनिषद्)

मा आफ्नो अत्यन्त ओजस्वी भाष्य लेख्नु भएपछि सारा अद्वैतविरोधी (आस्तिक र नास्तिक) दार्शनिकहरूले चक्रव्यूहको रचना गरेर अद्वैतवेदान्तमाथि आइलागेका थिए। अझ यसमा खास गरेर द्वैतमत निराकरणका लागि श्रीशङ्कराचार्यले ब्रह्मसूत्रको भाष्यमा उल्लेख गर्नुभएको **'यद्यपीदं वेदान्तवाक्यानामैदम्पर्यं निरूपयितुं शास्त्रं प्रवृत्तम् न तर्कशास्त्रवत्केवलाभिर्युक्तिभिः कञ्चित्सि-द्धान्तं साधयितुं दूषयितुं वा प्रवृत्तम्, तथापि वेदान्तवाक्यानि व्याचक्षाणैः सम्यग्दर्शनप्रतिपक्षभूतानि साङ्ख्यादिदर्शनानि निराकरणीयानि'** (ब्रह्मसूत्रशाङ्करभाष्यम् २।२।१।१) भन्ने भनाइ प्रतिपक्षका लागि गम्भीर चुनौती हुन गयो। यसबाट द्वैतवादको साम्राज्य खडा गर्न खोज्ने आचार्यहरूमा खलबली पैदा भयो। वाग्युद्ध र शास्त्रार्थको परम्परा शुरु भयो। यसको खण्डन र मण्डनमा कैयौँ ग्रन्थहरूको सिर्जना गरियो। यसै सन्दर्भमा विशिष्टाद्वैत सम्प्रदायका विशिष्ट विद्वान् श्रीवेङ्कटनाथ वेदान्तदेशिक (सन् १२६९–१३६९) ले आफ्नू कलम चलाउनु भएको थियो। तीमध्ये सन् १९५६ मा श्रीअनन्तकृष्ण शास्त्रीले 'शतदूषणी'लाई आनुपूर्वी समीक्षा गर्दै 'शतभूषणी' ग्रन्थ प्रकाशन गर्नुभएको थियो। यसै क्रममा पक्षविपक्षमा धेरै विद्वान्हरूले आफूलाई अघि सार्नुभएको थियो। श्रीचित्सुखाचार्यले शाङ्कर परम्परालाई अगाडि बढाउँदै ब्रह्मसूत्रका समन्वय, अविरोध, साधन र फलका क्रमले नै चार अध्याय भएको आफ्नू चित्सुखीग्रन्थ (तत्त्वप्रदीपिका) प्रणयन गर्नुभएको थियो।

यसरी अद्वैत र द्वैतका सम्बन्धमा आ–आफ्ना सम्प्रदायका आचार्यहरूले विद्वत्तापूर्ण ठूलाठूला ग्रन्थहरूको निर्माण गर्नुभएको

देखिन्छ । चित्सुखीको प्रणयनपछि चित्सुखीकै शैली टिपेर माध्व सम्प्रदायका विद्वान् श्रीव्यासराज तीर्थले अद्वैतवेदान्तको विरुद्धमा प्रतिपक्षता प्रदर्शन गर्दै अत्यन्त प्रौढ नव्यन्यायका भाषामा अद्वैत वेदान्तका प्रमुख सिद्धान्तहरूलाई खण्डन गर्न न्यायामृत नामक ग्रन्थ लेख्नुभएको थियो । न्यायामृतकै शैलीमा उस्तै भाषामा तर विनालाञ्छना, विनाकटुता र अत्यन्त शिष्ट भाषामा श्रीमधुसूदन सरस्वतीले तिनै खण्डन गरिएका सिद्धान्तहरूलाई नै खण्डन गरेर आफ्नो सिद्धान्तको मण्डन गर्दै अद्वैतवेदान्तको सिद्धान्तलाई सौम्यरूपले प्रतिष्ठापन गर्नुभएको थियो । अस्तु । श्रीकृष्णार्पणमस्तु ।

*(न्यायामृताद्वैतसिद्धिको भूमिकामा आधारित)*

# अद्वैतवेदान्त

यस संसारमा सम्पूर्ण प्राणीहरू सुखलाई नै परम पुरुषार्थ ठान्दछन् । सबै मानिसहरू सुखप्राप्तिकालागि नै सांसारिक तथा पारलौकिक कार्यहरू सम्पादन गर्दछन् । आफ्नू इच्छाको परिपूर्ति हुनु नै वास्तविक सुख हो भन्ने प्रायः गरेर मानिसहरू संझन्छन् । तर कामनाहरूले दुःख नै दिन्छन् । तिनबाट सुखप्राप्त हुन्छ भन्नु दिवास्वप्न मात्रै हो । सबै कामनाहरूको निवृत्ति हुनु नै असीम सुख प्राप्ति गर्नु हो । सुख वा आनन्दस्वरूप ब्रह्मको साक्षात्कार गरिसकेपछि बाहिरी मायिक सुखको कुनै आवश्यकता नै पर्दैन ।

साधनचतुष्टयसम्पन्न भएपछि मुमुक्षुका कल्याणकालागि परमकारुणिक बादरायण वेदव्यासले ब्रह्मसूत्रको प्रणयन गर्नुभएको हो । भगवान् श्रीशङ्कराचार्यले पनि ब्रह्मसूत्रको विद्वत्तापूर्ण भाष्य लोककल्याणका लागि रचना गर्नुभएको हो । त्यसपछि आ–आफ्ना सम्प्रदायअनुसार ब्रह्मसूत्रमा भाष्य लेख्ने लहर नै चलेको थियो । **श्रीशङ्कराचार्य**पछि भाष्य लेख्नेहरूमा **श्रीरामानुजाचार्य, श्रीनिम्बकाचार्य, श्रीमध्वाचार्य, श्रीवल्लभाचार्य**समेत प्रमुखरूपमा देखिनु हुन्छ । मोक्षप्राप्ति र त्यसको उपाय बताउनु नै सबै आचार्यहरूको उद्देश्य रहेको देखिन्छ । सबै वेदान्तका आचार्यहरूले आत्मसाक्षात्कारलाई नै मोक्षको साधन भनेर भन्नु भएको छ । **'आत्मा वा अरे द्रष्टव्यः श्रोतव्यो मन्तव्यो निदिध्यासितव्यः ।'** इत्यादि श्रुतिवाक्यहरूले आत्मसाक्षात्कारलाई लक्ष्य गरेर श्रवणादिको विधान गरेको देखिन्छ । त्यो श्रवण अरू केही नभएर वेदान्तविचार

नै हो। श्रीवेदव्यासले पनि ब्रह्मसूत्रमा **'अथातो ब्रह्मजिज्ञासा'** भन्ने सूत्रको प्रणयनद्वारा उक्त तथ्यको सङ्केत गर्नुभएको छ। स्मृतिले पनि **'श्रोतव्यः श्रुतिवाकेभ्यो मन्तव्यश्चोपपत्तिभिः। मत्वा च सततं ध्येय एते दर्शनहेतवः॥'** भनेर माथि उल्लेख भएको तथ्यलाई समर्थन गरेको छ।

उपर्युक्त श्रवणादिरूप वेदान्तविचारका निमित्त प्रमेय र प्रयोजनको पनि आवश्यकता पर्दछ। प्रमेय र प्रयोजनलाई अगाडि राखेर सबैजना विचार गर्दछन्। यसै तथ्यलाई स्पष्ट गर्दै कुमारीलभट्टले आफ्नो श्लोकवार्तिकमा भन्नु भएको छ। जस्तै –

**ज्ञातार्थं ज्ञातसम्बन्धं श्रोतुं श्रोता प्रवर्तते।**
**शास्त्रादौ तेन वक्तव्यः सम्बन्धः सप्रयोजनः॥**

प्रमेय र प्रयोजनको ज्ञान प्रमाणाधीन हुन्छ। त्यसकारण प्रमाण, प्रमेय र प्रयोजनको ज्ञान प्रयत्नपूर्वक प्राप्त गर्नु अति आवश्यक छ। वेदान्तका सूत्रभाष्यहरूमा र अरू व्याख्यानादि ग्रन्थहरूमा पनि वेदान्तसम्मत प्रमाण, प्रमेय आदिको प्रतिपादन भएको छ। तर सामान्य मानिसहरूले ती ग्रन्थहरू बुझ्न सक्तैनन्। किनभने ती ग्रन्थहरूमा यो प्रमाण हो, यो प्रमेय हो र यो प्रयोजन हो भनेर स्पष्टरूपमा उल्लेख गरेको पाइँदैन। यही अभावको परिपूर्ति गर्न आचार्य **धर्मराजाध्वरीन्द्र**ले प्रमाण, प्रमेय र प्रयोजनको स्पष्ट उल्लेख गर्दै वेदान्तपरिभाषा नाम गरिएको प्रकरण ग्रन्थ लेख्नु भएको हो। यस स्वल्पकाय ग्रन्थमा उपनिषद्, ब्रह्मसूत्र र अन्य भाष्यादि ग्रन्थहरूका अध्ययनोपयोगी अनेक विषयहरूको पनि प्रतिपादन गरिएको छ।

प्रायः सबै वेदान्तदर्शनहरूले यस जगत्को रहस्यमय सृष्टिको बारेमा विचार गरेका छन्। **न्याय, वैशेषिक, मीमांसा, बौद्ध**

**र जैनदर्शनहरूले परमाणुलाई सृष्टिको** आदिकारण मानेका छन् । साङ्ख्यदर्शनले यस मतलाई मानेको छैन । किनभने भौतिक परमाणुबाट स्थूल सृष्टि भने हुनसक्तछ, तर मन, बुद्धि, अहङ्कार जस्ता सूक्ष्म पदार्थहरूको उत्पत्ति जड परमाणुबाट हुन सक्तैन । साङ्ख्य र योगदर्शनका मतमा प्रकृति नै सम्पूर्ण सूक्ष्म र स्थूल सृष्टिको आदिकारण हो । सम्पूर्ण सृष्टिकालागि प्रकृति नै पर्याप्त छ । शाश्वत तथा अपरिवर्तनशील भएको हुँदा सृष्टिकार्यमा ईश्वर पनि कारण हुन सक्तैन । कारण नै कार्यमा परिणत हुने साङ्ख्यको सिद्धान्त हो । ईश्वर शाश्वत र चेतन हो भने संसार क्षणिक र जड हो । अतः ईश्वर सृष्टिको कारण हुन सक्तैन भन्ने साङ्ख्य र योगदर्शनको सिद्धान्त हो ।

अद्वैतवेदान्तदर्शनले भने उपर्युक्त कुनै पनि सिद्धान्तलाई स्वीकार गर्दैन । अद्वैतवेदान्तले ब्रह्मलाई नै सम्पूर्ण सृष्टिको अभिन्न निमित्तोपादन कारण मान्दछ । यस सिद्धान्तलाई श्रुति र स्मृतिले पनि समर्थन गरेका छन् । अद्वैतवेदान्त अनुसार जगत् असत्य र नितान्त मिथ्या हो । यो जगत् नित्य परिवर्तनशील हो । **आचार्य शङ्कर**ले सत्यको परिभाषा गर्दै भन्नु भएको छ – **'यद्रूपेण यन्निश्चितं तद्रूपं न व्यभिचरति तत् सत्यम् ।'** अर्थात् जुन रूपमा जुन पदार्थ निश्चित हुन्छ । यदि त्यो रूप सतत समभावले विद्यमान रह्यो भने त्यसलाई सत्य भनिन्छ । यस सिद्धान्त अनुसार संसारको कुनै पनि वस्तु सत्यको कोटिमा आउँन सक्तैन ।

उपर्युक्त सिद्धान्तलाई अरू धेरैजसो दर्शनहरूले मानेको देखिँदैन । उनीहरू प्रत्यक्षज्ञानको यथार्थताका आधारमा जगत् र त्यसका समस्त विषयहरूलाई सत्य मान्दछन् । उनीहरू अद्वैतवेदान्तको मायावाद,

बुद्धको शून्यवाद र क्षणिकवादलाई मान्दैनन्।

सृष्टिरचनाका सम्बन्धमा अद्वैतवेदान्तदर्शन र अरू दर्शनहरूको सिद्धान्त मिल्दैन। अद्वैतवेदान्तले सृष्टि र संहारलाई प्राणीको श्वास र प्रश्वास सरह मान्दछ। यो निरन्तर चलिरहने क्रम हो। यो सारा भूतभौतिक सृष्टि ब्रह्मको लीलामात्र हो। यो मायाको विलासमात्र हो। यो सम्पूर्ण सृष्टि मिथ्या हो र ब्रह्मको विवर्तमात्र हो भनेर पनि अद्वैतवेदान्त भन्दछ। माया वा अज्ञानका आवरणशक्तिले आवृत गरेर विक्षेपशक्तिद्वारा ब्रह्म यस दृश्यमान् सृष्टिको सृजना गर्दछ। यसैलाई शास्त्रमा **'विक्षेपशक्ति लिङ्गादि ब्रह्माण्डान्तं जगत् सृजेत्'** भनेर भनिएको हो।

आचार्य **श्रीशङ्कराचार्य**ले यस दृश्यमान् सम्पूर्ण सृष्टिलाई ब्रह्मको विवर्त भन्नु भएको हुँदा अद्वैतवेदान्तको सृष्टिसिद्धान्तलाई विवर्तवाद भनिएको हो। यसका दृष्टान्तका रूपमा रज्जुसर्पलाई दिइएको छ। साङ्ख्यदर्शनको सृष्टिको सिद्धान्तलाई परिणामवाद भनिन्छ। यस दर्शनले सृष्टिलाई प्रकृतिको परिणाम मान्दछ। दूधबाट दही बन्नुलाई परिणामवादको उदाहरणका रूपमा लिइएको छ।

पूर्वपक्षीहरूले आनन्दमय चेतनब्रह्मबाट दुःखमय र जड अर्थात् अचेतन संसारको कसरी उत्पत्ति हुनसक्तछ ? किन भने **'कारणगुणाः कार्यगुणनारभन्ते।'** अर्थात् कारणका गुणहरूले कार्यका गुणहरू आरम्भ गर्दछन् भन्ने सिद्धान्त अनुसार मिल्न नसक्ने भनेर शङ्का गरेका छन्। यसको उत्तरमा ब्रह्मसूत्रको दोस्रो अध्यायको प्रथम पादको तेस्रो अधिकरणको छैटौं **'दृश्यते'** भन्ने सूत्रको भाष्यमा आचार्य शङ्करले लेख्नु भएको छ – **'दृश्यते हि लोके चेतनत्वेन प्रसिद्धेभ्यः पुरुषादिभ्यो विलक्षणानां**

**केशनखादीनामुत्पत्तिः अचेतनत्वेन च प्रसिद्धेभ्यो गोमयादिभ्यो वृश्चिकादीनाम् ।'** अर्थात् लोकमा चेतनरूपले प्रसिद्ध पुरुष आदिबाट विलक्षण केश, नङ आदिको उत्पत्ति देखिन्छ भने अचेतनरूपले प्रसिद्ध गोबर आदिबाट बिच्छी आदि चेतन प्राणीको उत्पत्ति भएको देखिन्छ ।

अद्वैतवेदान्तदर्शनमा प्रातिभासिक, व्यावहारिक र पारमार्थिक गरेर तीन थरी सत्ता मानिएको छ। प्रातिभासिक सत्ता भनेको रज्जुसर्प हो । प्रतीति कालमा यसलाई सत्य नै मानिन्छ । त्यसैकारण यसलाई प्रातिभासिक सत्ता भनिएको हो । सपना पनि यसकै पेटभित्र पर्दछ। व्यावहारिक सत्ता भन्नाले व्यवहार कालमा सत्य ठानिने सबै कुरा पर्न आउँछन्। व्यवहारमा चाहिने र उपभोग गरिने संसारका यी सवै दृश्य पदार्थहरू व्यावहारिक सत्ता भित्र पर्दछन्। पारमार्थिक सत्तामा ब्रह्म पर्न आउँछ । सृष्टिभन्दा पहिले र प्रलयपछि पनि ब्रह्ममात्रै रहन्छ । ब्रह्मबाटै संसारको सृष्टि हुने र उसैमा गएर अन्त्यमा लय पनि हुने भएको हुँदा ब्रह्मलाई पारमार्थिक सत् वा सत्ता भनिएको हो ।

यसरी सृष्टि र कार्यकारणका सम्बन्धमा विभिन्न दार्शनिकहरूका बीचमा प्रशस्त ऊहापोह भएको देखिन्छ। बौद्धहरूले असत्बाट असत्कै उत्पत्ति हुन्छ भनेका छन् भने साङ्ख्यवादीहरूले सत्बाट सत्को उत्तपत्ति हुन्छ भनेका छन् । नैयायिकहरूले सत्बाट असत्को उत्पत्ति हुन्छ भनेका छन्। न्यायदर्शन अनुसार कारणमा कार्यको सत्ता उत्पत्ति भन्दा पहिले रहेको हुँदैन। तर सहायक कारणका रूपमा विभिन्न सामग्रीहरूको प्रयोग गरेपछि मृत्तिकाबाट घडा नाम गरेको एउटा नयाँ वस्तुको उत्पत्ति हुन्छ । सम्पूर्ण कार्यहरू आफ्ना

उपादानकारणभन्दा नितान्त भिन्नै हुन्छन्। कुनै पनि कार्य आफ्नू कारणमा उत्पत्ति हुनुभन्दा पहिले विद्यमान रहेको हुँदैन। यस सिद्धान्तलाई असत्कार्यवाद या आरम्भवाद भनिन्छ।

न्याय र वैशेषिकदर्शनका सिद्धान्तका विपरीत सबै कार्यहरू आफ्नू उत्पत्तिभन्दा पहिले आफ्ना आफ्ना कारणमा अव्यक्तरूपमा रहेका हुन्छन् भनेर साङ्ख्य दर्शनले भनेको छ। साङ्ख्यसिद्धान्तमा कार्यकारणको अभेदत्वेन वर्णन गरिएको छ। कार्यको अव्यक्तावस्थाको अर्को नाम नै कारण हो र त्यसैगरेर कारणको व्यक्तावस्थाको नाम कार्य हो। यस सिद्धान्तलाई सत्कार्यवाद या परिणामवाद भनिन्छ। परिणामवादका अनुसार कार्यको उत्पत्तिको अर्थ हुन्छ कारणको वास्तविकरूपमा रूपान्तरित हुनु। उदाहरणका रूपमा दूधबाट दही हुनु र माटाबाट घडा बन्नु वास्तविक परिणाम हो। यो परिणाम ३ प्रकारको हुन्छ। १ धर्मपरिणाम, २ लक्षणपरिणाम र ३ अवस्थापरिणाम।

१. धर्मीका धर्मको परिणाम हुनुलाई धर्मपरिणाम भनिन्छ। उदाहरणकालागि धर्मी चित्तको वृत्ति कहिले नीलाकार, कहिले पीताकार र कहिले श्वेताकार हुनुलाई लिन सकिन्छ। यसैगरेर सुनको कटक धर्म तिरोहित भएर मुकुटधर्मको प्रादुर्भाव हुनु र मृत्तिकाको पिण्डधर्म तिरोहित भएर घटधर्मको प्रादुर्भाव हुनु। यी धर्मपरिणामका उदाहरणहरू भए।

२. लक्षणपरिणाममा धर्मीको एक लक्षण तिरोहित भएर त्यसका ठाउँमा अर्को लक्षणको प्रादुर्भाव हुनु हो।

३. कुनै पनि लक्षणले एक अवस्थालाई छोडेर अर्को अवस्थामा प्राप्त हुनु नै अवस्थापरिणाम हो। यी तीनै थरीका धर्म र धर्मीमा

अत्यन्त भेद पनि हुँदैन र अत्यन्त अभेद पनि हुँदैन ।

साङ्ख्यदर्शनमा सृष्टिको समयमा परिणामको उत्पत्ति नभएर विकारको उत्पत्ति हुन्छ । विकार परिणाम हुनसक्तछ तर परिणाम विकार हुनसक्तैन । समानभावले परिवर्तन हुनुलाई परिणाम भनिन्छ भने विषमभावले परिवर्तन हुनुलाई विकार भनिन्छ । परिणामको नित्यतामा बौद्ध र साङ्ख्यको सिद्धान्त समान छ । चित् शक्तिलाई छोडेर भौतिक जगत्का सम्पूर्ण पदार्थहरू प्रतिक्षण परिवर्तित भइरहन्छन् भन्ने साङ्ख्य दर्शनको सिद्धान्त हो ।

साङ्ख्यको उक्त सत्कार्यवादलाई भगवान् श्रीशङ्कराचार्यले पनि मान्नु भएको छ। किनभने कार्य कारणभन्दा भिन्न वस्तु होइन । जसरी सुनका गहनाहरू सुनभन्दा भिन्न होइनन् र माटाका भाँडाहरू माटोभन्दा भिन्न होइनन्। अन्ततः ती सुन र माटोमात्र हुन् । सबै कार्यहरू आ-आफ्ना उपादान कारणसँग अविच्छेद्य हुन्छन् ।

उपर्युक्त अनुसार साङ्ख्य र वेदान्त दुवै दर्शन सत्कार्यवादका अनुयायी भएर पनि दुवैमा केही भिन्नता देखिन्छ। साङ्ख्यले उपादानमा नै वास्तविक विकार या परिणाम मान्दछ। किनभने कार्यले नवीन रूप धारणा गर्दछ। अर्थात् जुन आकार पहिले असत् थियो पछि त्यही नै सत् हुन्छ। तर **श्रीशङ्कराचार्य** त्यसलाई मान्नु हुन्न । किनभने साङ्ख्यको यस विचारप्रक्रियाले सत्कार्यवादको सिद्धान्तलाई हानि गर्दछ । उनको भनाइ अनुसार वास्तविक परिवर्तन त्यसैलाई भन्न सकिन्छ, जुन आकारले आफ्नू सत्ता भिन्नै राख्न सक्तछ । आकार भनेको ता उपादानरूप द्रव्यको एक अवस्था मात्रै हो । जुन उक्त द्रव्यरूप उपादानबाट अविच्छेद्य रहन्छ । त्यसकारण आकारको भिन्नै अस्तित्वको कल्पना पनि गर्न सकिँदैन। आकार

या आकृतिको परिवर्तन देखेर त्यसको वास्तविक परिवर्तन सम्झनु उचित हुँदैन । यसलाई प्रत्यक्षाभास मान्नु पर्दछ ।

उपर्युक्त कुराको विश्लेषण गर्दा यसलाई परिणामवाद नमानेर विवर्तवाद मान्नुपर्ने देखिन्छ । विवर्तवादअनुसार प्रत्यक्ष देखिने अवास्तविक आकारपरिवर्तन केवल मानसिक आरोप वा विक्षेपमात्र हो । यसैलाई श्रीशङ्कराचार्यले अध्यास भनेर भन्नुभएको छ । यो अध्यासरूप मिथ्या कल्पना हो । अविद्या वा अज्ञानले गर्दा असत् पनि सत् जस्तो देखिन्छ । यसैलाई माया पनि भनिन्छ । यसै भ्रमात्मिका मायाका कारण संसारको प्रतीति हुन्छ । ब्रह्मकै सत्ता पाएर यो भ्रमात्मक विचित्र मायिक संसारको भान भइरहेको छ । वस्तुतः उही पारमार्थिक सत्ता ब्रह्ममात्रै सत्य हो । अरू सबै भ्रम वा मिथ्या हुन् । यसै निर्विशेष शुद्धसत्ता नै संसारको मूल उपादान कारण हो । यसै सत्तालाई ब्रह्म भनेर अद्वैतवेदान्तले भनेको हो ।

अद्वैतवादीहरूको भ्रमविषयक सिद्धान्त बुद्धिष्टहरूको शून्यवाद र विज्ञानवादभन्दा फरक छ । शून्य अर्थात् असत्बाट संसारको सृष्टि हुन्छ भन्ने शून्यवादी बुद्धिष्टहरूको मत हो भने मानसिक विज्ञान नै संसारको रूपमा देखापर्दछ भन्ने विज्ञानवादी बुद्धिष्टहरूको भनाइ हो । अद्वैतवेदान्तीका मतमा प्रत्येक विषयको सत्ता शुद्धसत्ता नै हो । कुनै पनि विषयको आधार अथवा सृष्टिको कारण शून्य वा विज्ञान कुनै पनि हालतमा हुनै सक्तैन । हुनता वेदान्तीहरू पनि दृश्यमान् संसारलाई भ्रम वा अविद्याको परिणाम हो भनेर भन्दछन् । तर अद्वैतवेदान्तीले यसलाई यथार्थ प्रत्यक्ष र प्रत्यक्षाभास भनेर भेद देखाएका छन् । यसरी अज्ञानका पनि दुई भेद मानिएका छन् । ती हुन् मूलाविद्या र तुलाविद्या ।

मूलाविद्याको कारण व्यावहारिक जगत् सत्य जस्तो प्रतीत हुन्छ । त्यसैगरेर तुलाविद्याको कारण नै सत्य जस्तै गरेर क्षणिक भ्रम खडा हुन्छ। त्यो भ्रम हो शुक्तिमा रजतको भ्रम हुनु र डोरीमा सर्पको भ्रम हुनु । मूलाविद्याबाट खडा भएको व्यावहारिक सत्यको भ्रम ब्रह्मज्ञानबाट हट्तछ भने तुलाविद्याबाट खडा भएको रज्जुसर्पको प्रातिभासिक भ्रम डोरीको अज्ञान नाश भएपछि हट्तछ ।

संसारका विषयमा उठेका सबै प्रश्नहरूको उत्तर **श्रीशङ्कराचार्य**द्वारा प्रतिपादित पारमार्थिक, व्यावहारिक र प्रातिभासिक तीन थरी सत्ताहरूबाटै दिने गरिन्छ। यसरी विचार गर्दा तीनै थरी सत्ताहरूको एकरूपता देखिँदैन। समष्टिरूपमा संसार के हो त ? भन्ने सम्बन्धमा सत् र असत् दुवैको विलक्षण स्वरूप **अनिर्वचनीय** भनेर **वेदान्त**ले मानेको छ। यसैलाई अद्वैतवादीहरू **अनिर्वचनीयख्याति** पनि भन्दछन् । मिथ्याज्ञानलाई नै अविद्या भनिन्छ ।

संसारमा व्यावहारिक भ्रम सबैलाई हुने गर्दछ । तै पनि यसको उत्पत्तिका बारेमा सबै दार्शनिकहरूका भिन्नाभिन्नै मतहरू छन् । **शून्यवादी बौद्धहरू**ले भ्रमको कारण **असत्ख्याति** हो भनेका छन् । उनीहरू निद्राका अवस्थामा विषयको प्रतिभास हुँदैन भनेर भन्दछन् । अर्थको प्रतिभास भ्रमबाट हुन्छ भनेर उनीहरू भन्दछन्। उक्त प्रतिभासको विषय बाहिरी सत् नभएर असत् नै हुन सक्तछ ।

माध्यमिक शून्यवादी बौद्धहरू पदार्थहरूको व्यावहारिक सत्ता मान्दछन्। उनीहरू यसलाई परीक्षा गरेर अन्ततः असत्य नै मान्दछन् । उनीहरू सम्पूर्ण सविषयक ज्ञानलाई मिथ्या नै मान्दछन् । रज्जुसर्प आदिमा सर्प अत्यन्त असत् हो । डोरीमा सर्पको प्रतीति हुनु **असत्ख्याति** हो । यसको अर्थ अत्यन्त असत्य सर्पको भास हो

भनेर उनीहरू भन्दछन् ।

**विज्ञानवादी बौद्धहरू आत्मख्याति** मान्दछन् । विज्ञानवादी योगाचार बौद्धहरूका मतमा भ्रम दुई प्रकारका मानिन्छन् । पहिलो मुख्य भ्रम र दोस्रो प्रातिभासिक भ्रम । व्यवहारमा हामीहरू इन्द्रियहरूका प्रायः एकै किसिमका शक्तिहरूको अनुभव गर्दछौँ । यसैकारण हाम्रा कुनै कुनै ज्ञानहरू भ्रान्त रहन्छन् । व्यावहारिक अभ्रान्त ज्ञान पनि पारमार्थिक दृष्टिले भ्रान्त नै मानिन्छ । **योगाचार बौद्ध**का भनाइमा सबै प्रातिभासिक ज्ञानहरूको आफ्नू आफ्नू ख्याति हुन्छ । सम्पूर्ण व्यवहारहरू वासनाजन्य हुन् । त्यसैकारण यी सबै मिथ्या हुन् । **योगाचार**का मतमा बुद्धिले नै सबै पदार्थहरूको आकारलाई धारणा गर्दछ । रज्जुसर्पमा रज्जुमा सर्प कुनै हालतमा पनि छैन । तर क्षणिक विज्ञानरूप बुद्धि नै प्रतिक्षण सर्परूपले प्रतीत हुन्छ । यसैलाई **आत्मख्याति** भनिन्छ । क्षणिक विज्ञानरूप बुद्धि नै सर्परूपमा देखिनु भन्ने आत्मख्यातिको अर्थ हुन्छ ।

**न्यायदर्शन र वैशेषिकदर्शनले अन्यथाख्याति** मान्दछन् । उनीहरूका भनाइमा बाह्यपदार्थको शून्यरूप या ज्ञानरूप अथवा सद्रूप मान्नु ठिक हुँदैन । इन्द्रियका गुण र दोषका आधारमा पदार्थको यथार्थता या अयथार्थताको निर्णय गरिन्छ । यिनका सिद्धान्तमा भ्रम विषयीमूलक हो, विषयमूलक होइन । तत्त्वज्ञानबाट मिथ्याज्ञानको निवृत्ति हुन्छ तर पदार्थभने जस्ताको तस्तै रहन्छ । मृगमरीचिकास्थलमा सूर्यकिरणको सद्भाव र स्पन्दन रहन्छ । त्यहाँ विषयको व्यभिचार हुँदैन, तर ज्ञानको भने व्यभिचार हुन्छ भनेर **उद्योतकर**ले भनेका छन् । मृगमरीचिकामा जलको कल्पना गर्नलाई बौद्धको असत्ख्याति या आत्मख्यातिको कुनै पनि हालतमा उपयोग

हुन सक्तैन। केवल इन्द्रियका दोषका कारण नै मृगमरीचिकामा जलका धर्मको स्मरण हुन्छ। जलका धर्मको मानसिक उदय हुने बित्तिकै जलको प्रत्यक्षता हुन्छ। त्यसैमा मृगमरीचिकाआरोप भनिन्छ। यसैलाई **अन्यथाख्याति** भनिन्छ। अन्यथाख्याति भन्नाले एउटाको धर्म अर्को वस्तुमा प्रतीत हुनुलाई भनिन्छ।

**साङ्ख्यदर्शन सदसत्ख्याति** मान्दछ। यस दर्शनमा बाह्य पदार्थको अनुभव बुद्धिका वृत्तिहरूद्वारा हुन्छ। यस दर्शनले विज्ञानवादी बौद्धहरूले जस्तो गरेर बाह्य पदार्थका सत्ताको निषेध गर्दैन। बुद्धिमा आरोपित पदार्थको स्वरूप बाहिरी जगत्मा विद्यमान साङ्ख्यवादीहरू मान्दछन्। भ्रमका सम्बन्धमा अद्वैतवेदान्ती, माध्यमिक बौद्ध, प्रभाकरमीमांसक र नैयायिकहरूको सिद्धान्त अनुचित छ भनेर साङ्ख्यवादीहरू भन्दछन्। शुक्तिमा रजतको ज्ञान **इदं रजतम्**का रूपमा हुन्छ। त्यसमा इदम्को सत् र रजतको ज्ञान असत् हुन्छ। इदम्को ज्ञान आँखाद्वारा सोभ्कै हुन्छ। त्यसैकारण त्यो सत् हो। तर रजतज्ञान भने आँखाद्वारा सोभ्कै हुँदैन। **नेदं रजतम्** भन्ने ज्ञान भएपछि त्यो बाधित हुन्छ। अतः त्यो असत् भयो। भ्रमज्ञान सत् असत् उभयविध पदार्थहरूमा आश्रित रहन्छ। यो मत सदसत्ख्यातिवाद **अनिरुद्ध**को हो। अर्कोतर्फ सबै पदार्थहरू नित्य भएका हुँदा स्वरूपतः अबाधित छन्। तर चैतन्यमा आरोपित भएका कारण संसर्गतः तिनीहरूको बाध पनि हुन्छ भनेर **विज्ञानभिक्षु**ले भनेका छन्। उदाहरणका लागि सराफीका दुकानमा रजत सद्रूपले विद्यमान रहेका कारण स्वरूपतः त्यो अबाधित हुन्छ। तर शुक्तिमा अध्यस्त रजत असत् हो, किनभने संसर्गतः त्यसको बाध हुन्छ। त्यसैगरेर जगत् पनि स्वरूपतः सत् हो। तर चैतन्यमा अध्यस्त भएको हुँदा असत् हो। अतः जगत् सदसदात्मक हो

भनेर साङ्ख्यवादीहरू भन्दछन्। त्यसैकारण **साङ्ख्यको सिद्धान्त सदसत्ख्याति** हो भनिन्छ।

**प्रभाकरमीमांसक अख्यातिवादी** हुन्। अख्यातिवादलाई स्वीकार गरेर उनले शून्यवादी र क्षणिकविज्ञानवादीहरूलाई खण्डन गरेका छन्। शून्यवादीद्वारा प्रतिपादित असत्ख्याति शशशृङ्ग, आकाशपुष्प र वन्ध्यापुत्र जस्तै अलीक हो। क्षणिकविज्ञानवादीका मत अनुसार यदि क्षणिक विज्ञान नै सर्पका आकारमा प्रतीत हुने भए क्षणभरिमात्रै त्यसको प्रतीति हुनुपने हो र त्योभन्दा बढी प्रतीति हुनु नपर्ने हो। अतः यो आत्मख्याति पनि ठीक होइन। प्रभाकरमीमांसकहरूको मतमा सबै ज्ञान यथार्थ हुन्छन्। तै पनि शुक्तिमा रजतको भ्रम र डोरीमा सर्पको भ्रम जुन हुन्छ, त्यसको मुख्य कारण विवेकाग्रह अर्थात् भेदको अज्ञान नै हो। **इदम् रजतम्** यस भ्रममा इदम् अंश चाहिँ प्रत्यक्षज्ञानको विषय हो। चक्षु इन्द्रिय इदम् पदार्थको अस्तित्त्वको जानकारी दिएर आफ्नू काम पूरा गर्दछ। त्यहाँ रजतपदार्थको विद्यमानता नरहेको कारण रजत अंश चाहिँ प्रत्यक्षको विषय हुँदैन। तै पनि त्यहाँ रजतको भ्रम जुन भइरहेको छ, वास्तवमा त्यो अन्यत्र देखेको रजतको स्मरण हो। शुक्ति र रजत दुवै वस्तु आ–आफ्ना ठाउँमा सत्य छन्। स्मृतिप्रमोष अर्थात् स्मरणशक्तिका दोषका कारण दृश्यमान् इदम् पदार्थ तथा स्मर्यमाण रजत पदार्थको पारस्परिक विवेकाग्रह वा भेदग्रहण हुन नसकेको कारण नै यस्तो भ्रम उत्पन्न हुने गर्दछ। प्रत्यक्षज्ञान सरह नै रजत तथा शुक्तिरूप विषयहरूमा विवेकग्रहण हुन नपाउनाले भ्रम उत्पन्न हुन्छ। शुक्तिज्ञान र रजतज्ञान दुवै नै आफ्ना आफ्ना विषयमा ठीक छन्। विवेकाग्रहरूप दोष खालि अभावात्मक हो।

दुवैथरी ज्ञानको भेद एउटाको अर्कोमा अभाव हुनुमात्र हो । त्यसैकारण यसलाई भ्रम भन्न सकिँदैन । यदि यसलाई भ्रम भन्ने हो भने यसको भावात्मक प्रतीति हुनुपर्ने हो । प्रतीति नहुने हुँदा यसलाई भ्रम भन्न सकिँदैन । यसरी प्रभाकर मीमांसकले उपर्युक्त स्थितिलाई अख्यातिवादको संज्ञा दिएका छन् । यस मतमा भ्रमको सत्तालाई मान्यता दिइँदैन । यस सिद्धान्तमा भ्रमको कुनै अस्तित्व छैन ।

उपर्युक्त सम्बन्धमा **भाट्टमीमांसक** र **मुरारि मिश्र** नैयायिकको मतलाई मान्दछन् । यिनीहरू दुवैजना प्रभाकरको मतलाई मान्दैनन् । भाट्टमीमांसक भ्रमलाई केवल विवेकाग्रह अर्थात् भेदज्ञानको अभावमात्रै मान्दैनन् । उनीहरू शुक्तिरजतस्थलमा शुक्तिको ज्ञान शुक्तित्वप्रकारकले हुन्छ भन्छन् । साथै रजतको ज्ञान रजतत्वप्रकारकले हुन्छ भनेर मान्दछन् । शुक्तित्व र रजतत्व यी धर्मविशेष हुन् । यो धर्म शुक्ति र रजतमा तादात्म्य सम्बन्धले रहन्छ । तिनीहरूलाई आफ्ना आफ्ना धर्मबाट पृथक् गर्न कुनै पनि हालतमा सकिँदैन । तर शुक्तिमा रजतत्वप्रकारकज्ञान हुन थाल्दछ, अर्थात् अन्य विषयमा अन्य प्रकारक ज्ञान हुन्छ । वस्तुतः विषयको अनुरूप नै त्यसै प्रकारको ज्ञान हुन्छ । भिन्नरूपले ज्ञान भयो भने यस ज्ञानलाई **अन्यथाख्याति** भनेर नैयायिकहरूले नाम दिएका छन् । यसैलाई नै भाट्टमीमांसकहरूले **विपरीतख्याति** भनेर नाम दिएका छन् । किनभने यसमा अकार्यको कार्यरूपले भान हुन्छ । कहिलेकाहीँ मिथ्या विषय अर्थात् डोरीमा कल्पित सर्प प्रत्यक्ष जस्तै भासित हुन थाल्दछ । संसारमा रज्जु र सर्प दुवैथरीको सत्ता विद्यमान छ । तैपनि ती भिन्नाभिन्नै अस्तित्व भएका दुई थरी सत् पदार्थहरूमा संसर्गलाई लिएर भ्रम हुन्छ । विषयलाई लिएर भ्रम हुँदैन । किनभने विषय अर्थात् पदार्थहरू भने वास्तविक

हुन् । आकाशमा दुई चन्द्रमा देख्नु विपर्यय ज्ञान हुनु हो । यस विपर्ययले गर्दा मानिसहरू विपरीत आचरण गर्न सक्तछन् । यसैकारण भाट्टमीमांसकहरू यसलाई **विपरीतख्याति** भन्दछन् । यसले गर्दा अकार्यमा कार्यताको भान अर्थात् **अकार्यस्य कार्यतया भानम्** हुन थाल्दछ । भ्रमज्ञानका सम्बन्धमा भाट्टमत र प्राभाकरमतका बीचमा अन्तर देखिन्छ । प्राभाकरमीमांसकहरू कुनै पनि ज्ञानमा भ्रमको सत्ता स्वीकार गर्दैनन् । यसको विपरीत भाट्टमीमांसकहरू भ्रमको सत्तालाई स्वीकार गर्दछन् । भाट्टमीमांसकहरूको भनाइमा भ्रम विषयलाई लिएर हुने नभएर उसको संसर्गलाई लिएर हुने हो ।

विपरीतख्याति र नैयायिकको अन्यथाख्यातिका बीचमा केही समानता पनि देखिन्छ । भाट्टको भनाइमा भ्रमको प्रभाव ज्ञानको अपेक्षा व्यवहारमा ज्यादा देखिन्छ । भ्रमज्ञान अपवादमात्र हो । सर्वमान्य नियम भने ज्ञान नै सत्य हो । यसैका आधारमा संसारको व्यवहार चलेको छ ।

अद्वैतवेदान्तदर्शनले अनिवर्चनीयख्याति मान्ने कुरा माथि पनि उल्लेख गरिसकिएको छ । जसअनुसार अन्तःकरणको वृत्ति चक्षुइन्द्रियद्वारा निस्किएर डोरीमा गएर ठोकिन्छ । तर मन्द अन्धकार प्रतिबन्धक भएर रहेको कारण उक्त वृत्तिले डोरीको वास्तविक स्वरूप ग्रहण गर्न सक्तैन । त्यसैकारण डोरीको आवरण हट्न सक्तैन । आवरण न हटेको हुँदा रज्जुले अवच्छिन्न चैतन्यमा रहेको अविद्यामा क्षोभ भएर त्यो अविद्या नै सर्पका रूपमा परिणत हुन्छ । अविद्याद्वारा प्रतीयमान सर्प यदि सत् हुन्थ्यो भने डोरीको अज्ञान नाश भएर डोरीको ज्ञान भएपछि पनि सर्प त्यहाँ हुनुपर्दथ्यो । तर डोरीको ज्ञान भएपछि सर्पको बाध भइहाल्दछ । त्यसकारण

सर्प असत् ठहर्छ। यदि सर्प खरायोको सिङ जस्तै असत् अर्थात् अलीक भएको भए प्रतीति वा भान नहुनुपर्ने हो। तर प्रतीति वा भान हुन्छ। अतः असत् वा अलीक भन्न पनि मिल्ने देखिँदैन। यसरी विचार गर्दा यसलाई सदसद् उभय विलक्षण भन्नुपर्ने हुन्छ। यसैलाई अद्वैतवेदान्तका भाषामा अनिर्वचनीय भनेर भनिन्छ। यो नै **अनिर्वचनीयख्याति** हो। यसलाई समेत गरेर दर्शनमा पाँचप्रकारका ख्यातिहरूको गणना गरिएकोछ। जस्तै –

**आत्मख्यातिरसत्ख्यातिरख्यातिः ख्यातिरन्यथा।**
**तथाऽनिर्वचनख्यातिरित्येतत्ख्यातिपञ्चकम् ॥**
**योगाचारा माध्यमिकास्तथा मीमांसका अपि।**
**नैयायिका मायिनश्च पञ्च ख्यातीः क्रमाज्जगुः ॥**

आद्यजगद्गुरु श्रीशङ्कराचार्यले जगत्को मिथ्यात्व मायाका आधारमा नै सिद्ध गर्नुभएको छ। अद्वैतवेदान्तमा माया, अविद्या र अज्ञान शब्दहरूको बारम्बार प्रयोग भएको देखिन्छ। यी तीन शब्दहरू समानार्थक हुन्। तै पनि केही वेदान्तीहरू माया र अविद्यामा भिन्नता देखाउँदछन्। ईश्वरको उपाधिलाई माया र जीवको उपाधिलाई अविद्या भनिन्छ। मायामा शुद्धसत्त्वको प्रधानता रहन्छ भने अविद्यामा मलिनसत्त्वको प्रधानता रहन्छ। ईश्वरको उपाधि माया संसारसृष्टिको कारण हो भने जीवको उपाधिरूप अविद्या एक आवरण हो। यसै आवरणले जीवको आफ्नै स्वरूपभूत ब्रह्मसँग भिन्न गराएर जीवलाई राख्तछ।

यसै मायालाई अविद्या र अज्ञान पनि भनिन्छ। यसैले ब्रह्मलाई छोपेर राखेको छ। मायाका आवरण र विक्षेप गरेर दुईथरी शक्तिहरू मानिएका छन्। यसै विक्षेपशक्तिका कारण नै यसलाई

भावरूप अज्ञान भनेर भनिन्छ। यसै मायालाई ब्रह्मको अभिन्न आन्तरिक शक्तिका रूपमा वेदान्तले स्वीकार गरेको छ। अग्निको उष्णता अग्निभन्दा भिन्न नभए जस्तै माया पनि ब्रह्मभन्दा भिन्न छैन। अद्वैतवेदान्तका अनुसार ब्रह्ममा कुनै प्रकारको विकार हुँदैन। विकार केवल प्रातिभासिकका रूपमा देखापर्दछ। कुनै पनि द्रव्यको विकारको आभासलाई विवर्त भनिन्छ। वास्तविक विकारलाई परिणाम भनिन्छ। अद्वैतवेदान्तमा मायालाई अव्यक्त र प्रकृति पनि भनिन्छ। जुन त्रिगुणात्मिका छ। तर साङ्ख्यको प्रकृतिजस्तो होइन। साङ्ख्यका प्रकृतिको अस्तित्व स्वतन्त्र मानिएको छ। वेदान्तको प्रकृति भने ईश्वर अर्थात् ब्रह्मको माया हो। माया सर्वथा ईश्वराधीन छ। शुद्ध ब्रह्म मायाद्वारा अवच्छिन्न हुनेबित्तिकै सगुण ब्रह्म हुन्छ। त्यसैलाई ईश्वर या कारण ब्रह्म पनि भनिन्छ। संसारको सृष्टि, स्थिति र लयको कारण त्यसै ईश्वरलाई मानिन्छ। ईश्वरले कर्तुं, अकर्तुं र अन्यथाकर्तुं सबै गर्न सक्तछ। यो सृष्टि आदि कार्य ईश्वरको केवल लीलाविलासमात्र हो।

वेदान्तीको ईश्वर जस्तो सर्वेसर्वा नभएर नैयायिकको ईश्वर भने जगत्सृष्टिको केवल निमित्त कारण मात्र हो। तर वेदान्तीको ईश्वर (ब्रह्म) भने जगत्को अभिन्न निमित्तोपादान कारण हो। वेदान्तीहरूले तीनथरी सत्ता मानेको देखिन्छ। ती हुन् – व्यावहारिक सत्ता, प्रातिभासिक सत्ता र पारमार्थिक सत्ता। वेदान्तीहरू यस संसारलाई व्यावहारिकरूपमा भेद र पारमार्थिकरूपमा अभेद हो भनेर मान्दछन्। श्रीशङ्कराचार्यले आफ्नू षट्पदीमा लेख्नु पनि भएको छ – **यद्यपि भेदापगमे नाथ तवाहं न मामकीनस्त्वम्। सामुद्रो हि तरङ्गः क्वचन समुद्रो न तारङ्गः॥** अर्थात् हे नाथ !

पारमार्थिकरूपमा भेद नभए पनि व्यावहारिकरूपमा भेद मान्दा पनि तपाईंबाट जन्मेको म हुँ तपाईं होइन। जसरी तरङ्ग समुद्रबाट उत्पन्न हुन्छ तर तरङ्गबाट समुद्र उत्पन्न हुँदैन।

ईश्वर र जीव भनेर व्यावहारिक कालमा नाममा विभिन्नता देखिएता पनि पारमार्थिक कालमा सबै एउटै हो। यी नामरूपादि केवल मायिक उपाधिहरू मात्रै हुन्। अद्वैतवेदान्तका मतमा अन्तःकरणावच्छिन्न चैतन्य जीवात्मा हो। यो अविद्याले उपहित छ। इन्द्रिययुक्त भोगायतन शरीरमा बसेर यस जीवले आफ्नो कर्मको फलको भोग गर्दछ।

वैशेषिकदर्शनले चैतन्यलाई आत्माको कादाचित्क गुण मानेको छ। तर वेदान्तले भने आत्मालाई चैतन्यरूप नै मानेको छ। त्यही परब्रह्म नै उपाधिको सम्पर्कले गर्दा जीवभावमा परिवर्तित हुन्छ। जीवात्माको परमात्माका साथ स्वाभाविक ऐक्य छ। केही दार्शनिकहरू आत्मालाई अणुपरिमाणको मान्दछन्। तर भगवान् श्रीशङ्कराचार्य आत्मा वा ब्रह्मलाई सानोभन्दा सानो र ठूलोभन्दा ठूलो अर्थात् विभू मान्नु हुन्छ। उपनिषद्ले पनि **'अणोरणीयान् महतो महीयान्।'** भनेर भनेको छ। ब्रह्म नै कार्यविशेषले सगुण र निर्गुण हुन्छ। ती दुवैभन्दा पर निगुर्ण ब्रह्मको स्थिति छ। यसरी विचार गर्दा ब्रह्मचैतन्यका चार अवस्था हुन्छन्। जस्तै १.**परमब्रह्म,** जसलाई विशुद्ध सत्चित्स्वरूप भनिन्छ। २. **ईश्वर,** जसलाई जगत्को नियामक भनिन्छ। ३. **हिरण्यगर्भ** र ४. **वैश्वानर**। यो भेद केवल व्यावहारिक भेदमात्रै हो। परमार्थतः यिनमा कुनै भेद छैन। अनेकत्व अद्वैतवेदान्तका दृष्टिमा सर्वथा मिथ्या हो।

प्रत्यक्षरूपमा देखिने यो शरीर र सारा जगत्प्रपञ्च मायाको सृष्टि हो । **तत्त्वमसि** महावाक्यको अर्थलाई बुझेपछि जीवात्मा र परमात्मा वा ब्रह्ममा अभेद सम्बन्ध भएको तथ्य थाहा हुन्छ । **त्वम्** पदले जीवात्मा र **तत्** पदले शुद्धचैतन्यलाई नै जनाउँछ । असि पदले दुवैको एकत्व देखाउँछ। यसबाट जीव र ब्रह्मको ऐक्यात्मत्वको बोध हुन्छ। उदाहरणका रूपमा **सोऽयं देवदत्तः** मा **तात्कालिक स देवदतः** र **एतत्कालिक अयं देवदत्तः** का दुवैथरी विरुद्ध विशेषणहरू **स** र **अयं**लाई हटाएपछि देवदत्तः मात्रै बाँकी रहन्छ । त्यसैगरेर तत् त्वम् असि महावाक्यमा परेका तत् अर्थात् परोक्षत्व, सर्वज्ञत्व, आनन्दमयत्व अपरिछिन्नत्व आदि विशेषणको अंश अर्थात् उपाधिहरूलाई र त्वम् अर्थात् अल्पज्ञत्व, अपरोक्षत्व, परिछिन्नत्व, दुःखमयत्व आदि विशेषणका अंश अर्थात् उपाधिहरूलाई हटाएपछि असि पदले दुवैको चैतन्य अंशको एकत्वको बोध गराउँदछ । अद्वैतवेदान्तमा **तत्त्वमसि** उपदेशात्मक महावाक्यको तात्पर्य यही हो भन्ने बुझिन्छ ।

यही असीम तथा विभु ब्रह्म प्राणीहरूका सीमित अन्तःकरणमा प्रतिभासित भएर चिदाभासका रूपमा अर्थात् जीवात्माका रूपमा रहन्छ। यसरी व्यापक ब्रह्म प्रत्यगात्माका रूपमा प्राणीहरूका घटघटमा निवास गर्दछ। नश्वर शरीरका साथ उसको सम्बन्ध हुन्छ। यो शरीर अविद्याको कार्य हो। दृश्यमान् स्थूलशरीरका भित्र अर्को सूक्ष्म शरीर रहेको छ । त्यो सूक्ष्मशरीर पञ्च ज्ञानेन्द्रिय, पञ्च कर्मेन्द्रिय, पञ्चप्राण, मन र बुद्धि समेत गरेर १७ तत्त्वले बनेको छ। मृत्युले स्थूल शरीरको नाश गर्दछ। तर उक्त १७ तत्त्वयुक्त सूक्ष्मशरीरको भने नाश हुँदैन । मृत्युपश्चात् सूक्ष्मशरीराश्रित

जीवात्मा सञ्चित कर्महरूका साथ अर्को स्थूलशरीरमा गएर जन्म लिन्छ। यी दुवै शरीरहरू मायिक हुन्। मूला अविद्याका कारण भ्रमवश आत्मा आफूलाई स्थूल र सूक्ष्म शरीर संझन्छ। यही संझाइ नै आत्माको बन्धन हो भनेर शास्त्रहरूले भनेका छन्। जीवात्माले आफ्नू वास्तविक स्वरूपलाई बिर्सिन्छ र यसै मायिक संसारलाई सत्य ठानेर प्रमाता, भोक्ता र कर्ताका रूपमा आफूलाई स्वीकार गर्दछ। सांसारिक विषयमा हिरिक्क भएर त्यसकै पछि लाग्दछ। आफ्नू इच्छा पूरा भएमा खुशी हुन्छ र इच्छा पूरा नभएमा दुःखी हुन्छ। ऊ आफूलाई शरीर, इन्द्रिय र अन्तःकरणसँग साँठगाँठ गरेर अर्थात् आध्यासिक सम्बन्ध स्थापित गरेर अहं र ममको भावना राख्तछ। म मोटो, म दुब्लो, मेरो शरीर, मेरो सम्पत्ति आदिको भावना राखेर जीवात्मा यस असार संसारमा कल्पकल्पान्तसम्म घुमिरहन्छ।

यसरी शुद्ध, बुद्ध, मुक्त र अविनाशी आत्मा आफूलाई बिर्सिएर अशुद्ध, अज्ञ, बद्ध, विनाशी भनेर ठान्दछ। उत्पन्न हुने आत्मा चिदाभासमात्र हो, त्यो शुद्ध आत्मा होइन। त्यस आत्मालाई मिथ्या आत्मा पनि भनिन्छ। सूक्ष्मशरीरको नाशसँगै त्यस चिदाभासको पनि अन्त्य हुन्छ। अन्त्य हुनुको अर्थ सम्पूर्ण कर्महरूको नाश हुन्छ र ऊ ब्रह्म नै भइहाल्दछ। जीवात्माको जन्म हुँदा उपाधिको जन्म हुन्छ। उपाधिको जन्म हुँदा आत्माको पनि जन्म भयो भनिन्छ। उपाधिले नै शुद्ध आत्मालाई बन्धनमा पारेको हुन्छ। शुद्ध आत्माको जन्म र मृत्यु दुवै कुरा हुँदैनन्।

आत्माको स्वरूपका बारेमा विभिन्न दार्शनिकहरूका विभिन्न मतहरू छन्। निद्रित, मूर्छित, ग्रहाविष्ट मानिसहरूमा केही समयसम्म

चैतन्यको अभाव देखेपछि प्रत्यक्ष अनुभवका पक्षपाती **वैशेषिकहरू**ले चैतन्यलाई आत्माको **कादाचित्कगुण** हो भनेर मानेका हुन् । तर अद्वैतवेदान्तले भने आत्मालाई चैतन्यरूप नै मान्दछ । परब्रह्म परमात्मा नै उपाधिलाई स्वीकार गरेर जीवभावमा परिणत भएको हो । जीवात्मा र ब्रह्मको स्वाभाविक ऐक्य भएको हुँदा नित्यचैतन्यलाई अनङ्गीकार गर्न सकिँदैन । ब्रह्म र जीवात्माका बीचको पार्थक्य भनेको केवल उपाधि मात्रै हो । उदाहरणकालागि स्थूलशरीरहरू, सूक्ष्मशरीरहरू कारणशरीरहरू जीवात्माका उपाधिहरू हुन् । त्यसैगरेर जाग्रत् अवस्थाको व्यष्टिको अभिमानी जीवलाई विश्व, स्वप्न अवस्थाको व्यष्टिको अभिमानी जीवलाई तैजस र सुषुप्ति अवस्थाको व्यष्टिको अभिमानी जीवलाई प्राज्ञ भन्दछन् । यसै गरेर जाग्रत, स्वप्न र सुषुप्ति अवस्थाहरूका समष्टिको अभिमानी जीवलाई क्रमशः विराट् या वैश्वानर, हिरण्यगर्भ या सूत्रात्मा र ईश्वर भनिन्छ । स्थूलशरीरको अन्नमयकोष हो भने सूक्ष्मशरीरका प्राणमय, मनोमय र विज्ञानमय कोषहरू हुन् । कारणशरीरको आनन्दमय कोष हो । आत्मा अर्थात् ब्रह्म यी सबैभन्दा माथि साक्षिस्वरूपले तटस्थरूपमा बसेको हुन्छ । यो साक्षीचैतन्य अहङ्कार, विषय र बुद्धिलाई समेत समग्ररूपमा प्रकाशित गरेर झल्झलाकार भएर अखण्डरूपमा रहन्छ । यी विषयहरूको अभावमा अर्थात् सुषुप्ति, निर्विकल्पसमाधि र तुरीय अवस्थामा यो साक्षीचैतन्य स्वतः प्रकाशित भएर रहन्छ । आफू प्रकाशित हुन साक्षीचैतन्यलाई अरू कसैको सहायता चाहिँदैन । किनभने ऊ स्वयं प्रकाशस्वरूप हो ।

यसरी विभिन्न दर्शनहरूले जीवात्मा, परमात्मा र ब्रह्मका बारेमा व्यक्तगरेका मतहरू सङ्क्षिप्त रूपमा दर्शाइयो । त्यतिमात्रै

नभएर अद्वैतवेदान्तभित्रकै विभिन्न आचार्यहरूका विभिन्न मतहरू यहाँ दर्शाइन्छन् ।

**सङ्क्षेपशारीरककार प्रकाशात्मयती**को मत निम्नअनुसार छ – बिम्बचैतन्यको प्रतिबिम्ब माया अथवा अविद्यामा पर्दछ, त्यसलाई ईश्वरचैतन्य भनिन्छ। त्यही प्रतिबिम्ब अन्तःकरणमा पऱ्यो भने त्यसलाई जीवचैतन्य भनिन्छ। उनको सिद्धान्तमा जीव र ईश्वरमा त्यही भिन्नता छ, जुन घडा र तलाउमा परेको सूर्यको प्रतिबिम्बमा भिन्नता छ। अर्को शब्दमा भन्ने हो भने मायाको उपाधिमा प्रतिबिम्बित ब्रह्मचैतन्यलाई ईश्वर र अन्तःकरण अर्थात् बुद्धिको उपाधिमा प्रतिबिम्बित ब्रह्मचैतन्यलाई जीव भनिन्छ। तर उपर्युल्लिखित उपाधिहरूले रहित बिम्बचैतन्य चाहिँ शुद्ध ब्रह्म हो ।

विवरणाकार **पद्मपादाचार्य**को सिद्धान्तलाई प्रतिबिम्बवाद सिद्धान्त भनिन्छ। स्वतन्त्रतादि गुणविशिष्ट ईश्वरचैतन्य बिम्बस्थानापन्न हो भने परतन्त्रादि गुणविशिष्ट प्रतिबिम्बस्थानापन्न जीव हो। यसैलाई चिदाभासवाद र प्रतिबिम्बवाद पनि भनिन्छ। सङ्क्षेपमा यसलाई बिम्बस्थानीय ईश्वर र प्रतिविम्बस्थानीय जीव वा चिदाभास भन्नु उपयुक्त हुने देखिन्छ।

**भामतीकार वाचस्पति मिश्र**को मत **अवच्छेदवाद** हो। प्रतिबिम्बवाद सिद्धान्तलाई मान्दाखेरि जीवको नाश भएपछि मात्रै मुक्ति हुने कुरा मान्नुपर्ने हुन्छ। दर्पणमा परेको मुखको प्रतिबिम्ब दर्पणरूपी उपाधि नाश भएपछि मुखको प्रतिबिम्ब स्वतः नाश हुन्छ। त्यसैगरेर अविद्यामा प्रतिबिम्बित जीवाभास ज्ञानोत्तर कालमा अविद्यारूपी उपाधिको नाश भएपछि जीव पनि स्वतः नाश हुने देखिन्छ। प्रतिबिम्बवाद मान्दा ज्ञानोत्तरकालमा जीवको मुक्ति

नभएर नाश हुने हुँदा प्रतिबिम्बवाद मान्न ठीक हुँदैन भनेर वाचस्पति मिश्रले भनेका छन् । प्रतिबिम्बवादको साटो उनले अवच्छेदवाद सिद्धान्त प्रस्तुत गरेका छन् ।

उपर्युक्त अनुसार जीवात्माका सुरक्षाकालागि अवच्छेदवाद प्रस्तुत भएको देखिन्छ । उदाहरणकालागि आकाशलाई यसका अवच्छेदकहरूको उदाहरण दिइएकोछ । जस्तै आकाश एक र सर्वव्यापक छ, तर विभिन्न उपाधिहरू घट, मठ, कमण्डलुका कारण एउटै व्यापक र निर्लेप आकाश पनि घटाकाश, मठाकाश, करकाकाश आदि अनेकथरी आकाशहरूका रूपमा भासित हुन्छन् । यसरी व्यवहारसम्पादनार्थ त्यसको विभागको कल्पना गरिएको हो । त्यसैगरेर ब्रह्म पनि आकाश जस्तै एक र व्यापक छ । त्यही ब्रह्म अविद्यारूप उपाधिले गर्दा नाना प्रकारका जीवहरू र विषयहरूका रूपमा प्रतीत वा प्रतिभासित हुन्छ । विभिन्न जीवहरू र विभिन्न विषयहरूका बीचमा पारमार्थिकरूपमा कुनै प्रकारको भेद छैन । मूलभूतरूपमा सर्वत्र त्यही शुद्धचैतन्यको सत्ता नै विद्यमान छ । नानात्व केवल भ्रममात्रै हो । उपाधिभूत मायाको कारण नै अनन्त ब्रह्म पनि सान्तरूपमा प्रतिभासित हुन्छ । जीव र विषयहरू ब्रह्मदेखि अभिन्न छन् । अविद्यारूप आवरण वा उपाधि हटेपछि सान्तरूप जीव पनि अखण्ड तथा अनन्त ब्रह्म नै भइहाल्दछ । यसैको नाम मुक्ति हो । यसैलाई भामतीकार वाचस्पति मिश्रले अवच्छेदवाद भनेका छन् ।

केही वेदान्तीहरू **आभासवाद**लाई मान्दछन् । यस वादका मुख्य आचार्य **सुरेश्वराचार्य** हुन् । यस सिद्धान्त अनुसार एक आत्मा वा ब्रह्म नै सत्य हो र आत्मादेखि बाहेक अरू सबै असत्य

हुन् । आत्मा अन्तर्यामी पनि होइन, साक्षी पनि होइन र जगत्को कारण पनि होइन, तै पनि अज्ञानरूप उपाधिले युक्त भएको आत्मालाई अज्ञानकासाथ तादात्म्यता प्राप्त गरेपछि अन्तर्यामी, साक्षी, ईश्वर आदि भनिन्छ । बुद्ध्युपहित तादात्म्यता प्राप्त गरेको बुद्धिगत स्वकीय चिदाभासलाई जान्न नसक्ता यस चिदाभास जीवलाई कर्ता, भोक्ता, प्रमाता आदि भनेर भनिएको हो । यसलाई आभासवाद भनिन्छ । यस सिद्धान्तका अनुसार जीवहरू नाना छन् र ईश्वर एउटा छ । ब्रह्मको बिम्ब साक्षीचैतन्य हो र साक्षीचैतन्यको प्रतिबिम्ब अन्तःकरण अथवा बुद्धिमा परेको चित्को आभासलाई जीव भनेर भनिएको हो । त्यो मिथ्या आभास नै चिदाभास वा जीव हो । ब्रह्मज्ञान भएपछि अन्तःकरण अर्थात् हृदयग्रन्थि नाश हुन्छ र जीवात्माको बन्धन समाप्त हुन्छ अथवा मुक्ति हुन्छ भन्ने सिद्धान्त आभासवादको हो ।

केही वेदान्तीहरू **जीवैक्यवाद**लाई मान्दछन् । उनीहरू अज्ञानरूप उपाधिले रहित शुद्धचैतन्यलाई ईश्वर मान्दछन् र अज्ञानरूप उपाधिले उपहित चैतन्यलाई जीव मान्दछन् । देहभेदले जीवभेदको प्रतीति हुनु भ्रम हो । वस्तुतः जीव एउटै हो । जीवको मुक्ति शास्त्र र गुरुको उपदेशबाट हुन्छ । यसै जीवैक्यवादलाई नै दृष्टिसृष्टिवाद पनि भनिएकोछ ।

यसरी जीव ईश्वर वा ब्रह्मको प्रतिविम्ब, आभास, अवच्छेद आदि भएको कुरा विभिन्न सिद्धान्तहरूका माध्यमबाट संझाउने प्रयास गरियो । अब यी सिद्धान्तहरूका बारेमा केही समीक्षात्मक विवेचना गर्ने प्रयास गरिने छ । माथिका पङ्क्तिहरूमा उल्लेख गरिएको प्रतिबिम्बवादका बारेमा कतिपय आचार्यहरूको मतमतान्तर रहेको पाइन्छ । **विद्यारण्यस्वामी** प्रतिबिम्बलाई मिथ्या मान्नु हुन्छ । किन

भने **विद्यारण्यस्वामी**का विचारमा मुख हेर्ने ऐनामा अनिर्वचनीय मुखाभासको उत्पत्ति हुन्छ । त्यस मुखाभासलाई न छाया भन्न सकिन्छ न कुनै स्वतन्त्र द्रव्य नै भन्न सकिन्छ । त्यस मुखाभासको उपादानकारण दर्पणगत तुला अविद्या हो । आभासको नै अर्को नाम प्रतिबिम्ब हो । त्यसको दर्पणावच्छिन्न चैतन्य अधिष्ठान हो ।

उपर्युक्त सम्बन्धमा **विवरणकार प्रकाशात्मयति**को मत केही फरक देखिन्छ । उहाँका मतमा प्रतिबिम्बको बिम्बका साथमा अभेद सम्बन्ध भएको हुँदा प्रतिबिम्बको स्वरूप सत्य हो । आभासवाद र प्रतिबिम्बवादमा त्यति ठूलो अन्तर छैन । आभासवादमा प्रतिबिम्ब अनिर्वचनीय हो र त्यसको अधिष्ठान दर्पण उपाधि हो । विवरणकारका प्रतिबिम्बवादमा भने दर्पणस्थत्व, विपरीतदेशाभिमुखत्व आदि धर्महरू अनिर्वचनीय हुन् । तिनका अधिष्ठान मुखादि चाहिँ बिम्ब हुन् । अतः दुवै पक्षमा अनिर्वचनीयको परिणामी कारण अज्ञान नै हो ।

यसरी समीक्षा गर्दा यी दुवै थरी प्रतिबिम्बवादी नै देखिन्छन् । तर पनि प्रतिबिम्बको मिथ्यात्व र सत्यत्वको भेदले गर्दा विद्यारण्य स्वामी आभासवादी र विवरणकार प्रकाशात्मयति प्रतिबिम्बवादी मानिन्छन् । उनीहरूका अतिरिक्त सङ्क्षेपशारीरककार सर्वज्ञात्म मुनि पनि प्रतिबिम्बवादी नै हुन् । तै पनि केही आधारभूत कुराहरूमा भने केही भिन्नता देखिन्छ । सर्वज्ञात्म मुनिका मतमा अज्ञान एउटै छ, नानाथरी छैनन् । जसरी अनेक अनित्य व्यक्तिहरूमा एउटा नै जाति रहन्छ । जुन जुन व्यक्तिहरू नष्ट हुँदै जान्छन्, ती ती व्यक्तिहरूलाई छोडेर जातित्व अरूहरू व्यक्तिहरूमा आश्रित रहन्छ । त्यसैगरेर अनेक व्यक्तिहरूमा एउटा नै अज्ञान रहन्छ ।

अतः एक अज्ञान मान्दा पनि कुनै आपत्ति हुने देखिँदैन। किनभने कसै कसैले एउटा अज्ञानमान्दा एकजनाको अज्ञान नाश हुँदा सबैको अज्ञान नाश हुन सक्ने शङ्का व्यक्त गरेको देखिन्छ। त्यसैको उत्तरमा माथि एक जातित्वको कुरा उल्लेख गरिएको हो। यसका साथै एउटा जीव ज्ञानी हुने बित्तिकै सबै जीवहरू ज्ञानी हुने कुराको सम्भावना पनि निराकरण हुने देखिन्छ। किनभने जुन जुन व्यक्ति ज्ञानी हुन्छन्, ती ती व्यक्तिहरूलाई छोडेर अरू व्यक्तिहरूमा अज्ञान यथावत् नै रहन्छ। यसरी एक ज्ञानी हुने बित्तिकै सबै जना ज्ञानी हुने सम्भावना रहँदैन।

केही वेदान्तीहरूले एउटै अज्ञान भए पनि त्यस अज्ञानका अनन्त कार्यहरू भएको मानेका छन्। उनीहरूका भनाइमा एउटै आकाशमा पनि पक्षीहरूको भाव र अभाव रहन्छ। त्यसैगरेर शुद्ध ब्रह्ममा अज्ञान रहन्छ र रहँदैन पनि। अज्ञान एउटै भए पनि त्यो सांश हो। ज्ञानबाट अज्ञानको अंश नाश भएपछि अज्ञानको केवल अंशान्तर मात्र शेष रहन्छ। यसबाट जीवको बद्ध–मुक्त दुवै अवस्था रहन सक्ने देखिन्छ। केही विद्वान्हरूका भनाइ अनुसार ईश्वर बद्धजीवहरूका विरुद्ध मायाजाल फैलाउँछ र मुक्तपुरुषबाट उक्त मायाजाल हटाउँछ। परन्तु यो कुरा सत्य होइन। मायाको विकास र सङ्कोच स्वाभाविक कुरा हो। वस्तुतः एकमात्र अखण्ड वस्तु सत् हो। बद्ध र मुक्त अवस्था अज्ञान र ज्ञानका कारणले नै हुन्छ। यसमा ईश्वरको कुनै हात हुँदैन।

**विवरणकार** ईश्वरलाई बिम्ब मान्दछन्। उक्त सिद्धान्त अनुसार अविद्यागत प्रतिबिम्ब जीव हो र बिम्बस्थानीय चैतन्य ईश्वर हो।

**अवच्छेदवादी वाचस्पति मिश्र**का मत अनुसार मायावच्छिन्न चैतन्य ईश्वर हो भने अन्तःकरणावच्छिन्न चैतन्य जीव हो। वेदान्तपरिभाषाग्रन्थका ग्रन्थकार **धर्मराजाध्वरीन्द्र**ले विवरणकार **पद्मपादाचार्य**को प्रतिबिम्बवादको आश्रय लिनु भएको छ। किनभने जसरी एक व्यापकरूप महाकाश स्वतः विद्यमान रहन्छ र त्यसै महाकाशको पनि बिम्बरूप आकाश पनि जलाकाश, घटाकाश आदिका रूपमा साथसाथै विद्यमान रहन्छ। त्यसैगरेर देहधारी प्राणीहरूका अन्तःकरणमा पनि जीव र अन्तर्यामी अथवा साक्षीचैतन्यका रूपमा दुईथरी चित्तत्त्व विद्यमान रहेको देखिन्छ। यस पक्षका एकजीववादलाई लिएर प्रतिकर्मको व्यवस्था गरिएको छ। जलसूर्यादिको दृष्टान्तबाट यो बुझ्न सहज हुन्छ।

**भामतीकार वाचस्पति मिश्र**का अनुसार रूपरहित ब्रह्मको प्रतिबिम्ब पर्न सक्ने देखिँदैन। **'गन्धस्पर्शरसादीनां कीदृशी प्रतिबिम्बता।'** अर्थात् गन्ध, स्पर्श र रसादि कहीँ पनि प्रतिबिम्बित हुँदैनन् भने मायाधीश तथा मायातीत परब्रह्म केमा र कसरी प्रतिबिम्बित हुन सक्तछ ? अतः प्रतिबिम्बवाद मान्य हुन सक्तैन। अतः अवच्छेदवाद नै उचित छ।

यसरी सारांशमा अद्वैतवेदान्तका केही आचार्यहरूको मतमतान्तर उल्लेख गरियो। अब ब्रह्मज्ञान र त्यसका साधनका बारेमा सारांशमा उल्लेख गरिन्छ। आद्यजगद्गुरु श्रीशङ्कराचार्यले साधनचतुष्टयसम्पन्न व्यक्ति नै वेदान्तश्रवणको अधिकारी हुने कुरा आफ्ना ग्रन्थहरूमा उल्लेख गर्नु भएको छ। श्रोत्रिय ब्रह्मनिष्ठ गुरुसँग मुमुक्षुले विधिपूर्वक वेदान्तश्रवण गर्नु अति आवश्यक छ। सम्प्रदायपरम्परा अनुसार नपढेका गुरुसँग वेदान्त पढ्नु हुँदैन। यस सम्बन्धमा भगवान्

श्रीशङ्कराचार्यले आफ्नू भाष्यमा लेख्नुभएको छ – **'तस्माद् असम्प्रदायवित् सर्वशास्त्रविद् अपि मूर्खवद् एव उपेक्षणीयः।'** *(गीता १३।२ भाष्य)* अर्थात् त्यसकारण सम्प्रदाय परम्परा अनुसार अद्वैतवेदान्त नपढेका गुरु सम्पूर्ण शास्त्रहरू जान्ने भए तापनि मूर्ख जस्तै उपेक्षणीय छ।

सद्गुरुसँग अद्वैतवेदान्तको अध्ययन गर्दा अत्यन्त श्रद्धा र निष्ठाका साथ अध्ययन गरेमात्रै ब्रह्मज्ञान प्राप्त हुन सक्ने देखिन्छ। यसरी अधययन गर्दा समग्ररूपमा प्रस्थानत्रयीका साथै सम्बन्धित प्रकरणग्रन्थ र विवरणग्रन्थहरूका साथै तत्सम्बन्धी शास्त्रहरूको अध्ययन गर्न सके ब्रह्मज्ञान हुनसक्ने देखिन्छ। यस सम्बन्धमा जीव र ब्रह्मलाई लिएर वेदान्तका मुख्य मुख्य आचार्यहरूले व्यक्त गरेका केही विचारहरू माथि सारांशमा उल्लेख गरिसकिएको छ।

ब्रह्मज्ञानका सम्बन्धमा अध्यारोप र अपवादसिद्धान्त प्रसिद्ध छ। निष्प्रपञ्च ब्रह्ममा जगत्को आरोप गर्नु अध्यारोप हो भने आरोपित वस्तुको निराकरण गर्नु अपवाद हो। **'अध्यारोपाप–वादाभ्यां निष्प्रपञ्चं प्रपञ्च्यते।'** भनेर शास्त्रहरूमा उल्लेख भएको छ। यसलाई साङ्गोपाङ्ग बुझ्नका लागि सम्बन्धित प्रकरणग्रन्थहरूको अध्ययन गर्नु आवश्यक देखिन्छ। यस छोटो लेखमा धेरै कुरा लेख्न सम्भव छैन। यसकालागि तत्त्वमस्यादि महावाक्यहरूको निष्ठापूर्वक तथा श्रद्धापूर्वक श्रवण गर्नुका साथै मोक्ष कसको हुने हो त्यसको पनि ज्ञान हुनु अति आवश्यक छ।

वस्तुतः मोक्ष ब्रह्म जस्तै सिद्ध वस्तु हो। मोक्ष कुनै पनि साधनद्वारा प्राप्त हुने नभएर स्वतः प्राप्त वस्तु हो। यो प्राप्तिको नै प्राप्ति हो। बन्धन भनेको अविद्या, काम र कर्म अर्थात्

अज्ञानकृत हो । अज्ञानरूप आवरण हट्नु नै मुक्ति वा मोक्ष हो । जीव र ब्रह्मको एकत्व प्रतिपादन गर्नु नै अद्वैतवेदान्तको परम लक्ष्य हो । संसारमा केवल एकमात्र परमसत्यको सत्तामात्र विद्यमान छ । ब्रह्म नै परमसत्य हो । अरू सम्पूर्ण दृश्य पदार्थहरू मिथ्या हुन् । परमसत्य ब्रह्मलाई नै वेदान्तले सत्, चित् र आनन्द भनेर स्वरूपलक्षणद्वारा सम्बोधन गरेको छ । यसै सत्बाट नै संसारको उत्पत्ति भएको हो, सत्मा नै स्थित छ र अन्त्यमा यसै सत्मा नै लय पनि हुन्छ । ब्रह्म नै एकमात्र विशुद्ध सत्ता भएता पनि माया वा अविद्याले गर्दा नानात्वको प्रतीति हुन्छ । माया नै ब्रह्मको शक्ति हो । यसैको माध्यमबाट जगत्को सृष्टि हुन्छ । व्यावहारिक दृष्टिले एउटै ब्रह्म सगुणरूपमा व्यवहृत हुन्छ र पारमार्थिकरूपमा पनि निर्गुणरूपले व्यवहृत हुन्छ । जीवात्मा परमात्मा नै हो । जीव र ब्रह्मको एकत्वको ज्ञान गराउनकालागि नै वेददेखि लिएर सम्पूर्ण अद्वैतपरक शास्त्रहरू प्रवृत्त भएका हुन् । जीवको आत्यन्तिक मुक्ति नै अद्वैतवेदान्तको अभीष्ट हो । शास्त्रहरूमा संसारलाई मिथ्या र एक तथा अद्वितीय ब्रह्मलाई सत्य भनिएको छ । भगवान् श्रीशिवले वेदान्तको उपदेश गर्ने क्रममा पार्वतीलाई यही कुरा भन्नुभएको थियो । जस्तै –

**श्लोकार्धेन प्रवक्ष्यामि यदुक्तं ग्रन्थकोटिभिः ।**
**ब्रह्म सत्यं जगन्मिथ्या जीवो ब्रह्मैव नापरः ॥**

अस्तु । श्रीकृष्णार्पणमस्तु ।

*(वेदान्तपरिभाषाको भूमिकामा आधारित)*

# श्रीराजर्षिजनकस्मृतिकोषबाट प्रकाशित
# जनक पत्रिका र अन्य ग्रन्थहरू

| ग्रन्थको नाम | लेखक | प्रकाशन मिति |
|---|---|---|
| १. ब्रह्मजिज्ञासा | प्रा. शिवगोपाल रिसाल | २०५७ साल |
| २. पशुपतिको सेरोफेरो | प्रा. शिवगोपाल रिसाल | २०५९ साल |
| ३. वेदस्तुति | डा.स्वामी रामानन्द गिरि | २०६१ साल |
| ४. ज्ञान र भक्ति | शरत्कुमार भट्टराई | २०६३ साल |
| ५. रासपञ्चाध्यायी | शरत्कुमार भट्टराई | २०६४ साल |
| ६. सन्तमहिमा | प्रा. शिवगोपाल रिसाल | २०६५ साल |
| ७. ब्रह्मसाक्षात्कार | शरत्कुमार भट्टराई | २०६५ साल |

८. श्रीराजर्षिजनकस्मृतिकोषको मुखपत्र जनकका प्रथम अङ्कदेखि लिएर सातौँ अङ्कसम्मका प्रतिहरू ।

## प्राप्तिस्थान

१. साझाप्रकाशन, पुलचोक, ललितपुर र शाखा कार्यालयहरू ।

२. श्रीपशुपतिनाथशरण सहकारी संस्था लिमिटेड, पशुपति, काठमाडौँ ।

३. कोषको कार्यालय, विजयचोक, प्रयागमार्ग, बत्तीसपुतली–९, काठमाडौँ
फोन नं. ४४९४७५८, ४४७१९९५, मोबाइल : ९८४१२१६३६४